## कृष्णकृपामय श्रीमद् ए.सी. भक्तिवेदान्त स्वामी प्रभुपादद्वारा विरचित ग्रन्थरत्नहरू

१. श्रीमद्भगवद्गीता यथारूप
२. श्रीमद्भागवतम् स्कन्ध १-१२ (३० खण्डमा)
३. श्रीचैतन्य-चरितामृत (१७ खण्डमा)
४. लीलापुरूषोत्तम भगवान् श्रीकृष्ण
५. श्रीचैतन्य महाप्रभुको शिक्षामृत
६. कृष्णभक्तिको अनुपम उपहार
७. भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
८. देवहुति नन्दन कपिलदेवको शिक्षामृत
९. प्रेमेमावतार भगवान् श्रीचैतन्य महाप्रभु
१०.भगवत्दर्शन पत्रिका (संस्थापक)
११. राजविद्या
१२. कृष्णतिर
१३. श्रीउपदेशामृत
१४. योगको पूर्णता
१५. रसराज श्रीकृष्ण
१६. भक्तिरसामृत सिन्धु
१७. पारमार्थिक प्रश्नोत्तर
१८. कृष्णभावनाको आचरण
२०. कृष्णभक्तिः सर्वोच्च योग
२१. भगवद्दर्शन (मासिक पत्रिका) संस्थापक

नेपालीमा अनुवादित पुस्तकहरू
१. श्रीमद्भगवद्गीता यथारूप
२. लीलापुरुषोत्तम भगवान् श्रीकृष्ण
३. जीवनवाट जीवन आउँछ
४. पूर्ण प्रश्न पूर्ण उत्तर
५. जन्म र मृत्युभन्दा पर
६. राजविद्या

नेपालीमा अनुवादित पुस्तकहरू
७. अन्य लोकहरूको सजिलो यात्रा
८. भक्तिरसामृत सिन्धु
९. चैतन्य महाप्रभुको दिव्य उपदेश
११. रसराज श्रीकृष्ण
१२. जन्म र मृत्यु भन्दा पर
१३. हरे कृष्ण चुनौति
१४. श्रीउपदेशामृत
१५ भक्तराज प्रह्लाद महाराजको शिक्षामृत
१६. श्रीइशोपनिषद

प्रकाशोन्मुख नेपाली अनुवादित पुस्तकहरू
१. धर्म
२. भगवद्गीता सार
३. उज्जवल भागवत्को प्रकाश
४. अध्यात्मयोग
५. परमानन्दको मार्ग
६. महारानी कुन्तीको शिक्षा
७. अद्वितीय उपहार
९. कृष्ण चेतनाको वैज्ञानिक आधार
१०. आत्मसाक्षात्कारको मार्ग
११. आत्म-विज्ञान
१२. योगको पूर्णता
१३. भगवान् श्रीकृष्णतर्फ उन्मुख
१४. कृष्ण चेतनातर्फ उन्मुख
१५. परमेश्वरको सन्देश
१६. जपकीर्तन गरौं र सुखी बनौं
१७ उत्कृष्टताको मार्ग

विस्तृत जानकारीका लागि
श्रीश्रीराधाकृष्ण मन्दिर, हरेकृष्णधाम, बूढानीलकण्ठ, पो. बा. ३५२०
काठमाडौं, नेपाल । फोनः ४३७३७८६, ४३७३७८७

इमेलः prabhupadbooknepal@gmail.com

श्री श्री गुरु-गौराङ्गौ जयतः

# महारानी कुन्तीको शिक्षा

अन्तर्राष्ट्रीय कृष्णभावनामृत संघ के संस्थापकाचार्य
कृष्णकृपामूर्ति
**श्री श्रीमद् ए. सी. भक्तिवेदान्त स्वामी प्रभुपाद**
की शिक्षाओं पर आधारित

**अनुवादक : विष्णु दास आचार्य**



**भक्तिवेदान्त बुक ट्रस्ट**

यस ग्रन्थको विषय-वस्तु सम्बन्धी विस्तृत जानकारी पाउन इच्छुक पाठकहरूलाई इस्कोन संस्थाका कुनै पनि निकटवर्ती मन्दिर, केन्द्र वा निम्नलिखित ठेगानामा पत्राचार गर्नुहुन सादर अनुरोध छ :


**इस्कोन नेपाल**

**श्रीश्रीराधा कृष्ण मन्दिर, बी.बी.टी.विभाग,**

हरे कृष्ण धाम, बूढानीलकण्ठ, काठमाडौं

पो.ब.३५२०, फोनः ००९७७-१-४३७६५९५

**ई-मेल :** prabhupadbooknepal@gmail.com

**भक्तिवेदान्त बुक ट्रस्ट**

हरे कृष्ण धाम, जुहू, मुंबई-४०० ०४९

वेब साइटः/ इमेल :

www.indiabbt.com

admin@indiabbt.com


Teachings of Queen Kunti (Nepali)

**महारानी कुन्तीको शिक्षा**


1st Printing, June 2014: 10,000 Copies

2nd Printing, September 2016 : 10,000 copies





**ISBN:** 978-93-83095-68-1





**भक्तिवेदान्त बुक ट्रस्ट इण्डियाद्वारा**

**प्रकाशित एवम् मुद्रित**

**C8AB**

# विषय-सूची

# भूमिका

प्राचीन भारतको इतिहासमा एउटा विस्फोटक युगमा महारानी कुन्तीको दुःखद र वीरतापूर्ण व्यक्तित्व विकसित भएर अघि देखा पर्दछ। भारतको महान् महाकाव्य एक लाख दश हजार श्लोक भएको महाभारतमा कुन्ती पाण्डुकी पत्नी र पाँच यशस्वी पाण्डवकी माता हुन् भनेर भनिएको छ। यसरी पचास शताब्दिअघि कुरुक्षेत्रमा भएको विनाशकारी युद्धको जटिल वा पेचिलो राजनीतिक अभिनयका प्रधान पात्रमध्ये उनी एक थिइन् र त्यस युद्धले विश्व घटनाको प्रवाहलाई नै परिवर्तन गरिदिएको थियो। महाभारतमा त्यस विभीषिकाको वर्णनको प्रारम्भ यसरी गरिएको छ –

आफ्ना जेठा दाजु धृतराष्ट्र जन्मदेखि नै अन्धा भएका हुनाले पाण्डु राजा बनेका थिए भने धृतराष्ट्र राजसिंहासनको उत्तराधिकारी हुनबाट वञ्चित भएका थिए। पाण्डु सिंहासनमा बसेको केही समयपछि धृतराष्ट्रको गान्धारीसँग विवाह भयो र उनका सय पुत्र जन्मिए। यी कौरव वंशका शासक परिवार थिए। तिनीहरूमा सबैभन्दा जेठा दुर्योधन हुन्। उनी ज्यादै महत्त्वाकाङ्क्षी र क्रुर थिए।

यसैबीच पाण्डुले माद्री र कुन्तीलाई आफ्नी पत्नी बनाए। कुन्तीको पहिलो मूल नाम पृथा थियो। कुन्ती यशस्वी यदुवंशका प्रमुख शूरशेनकी छोरी हुन्। महाभारतमा उल्लेख भएअनुसार कुन्ती रूप र चरित्ररूपी उपहारले युक्त थिइन्। उनी धर्म र आफ्नो व्रतमा प्रतिबद्ध थिइन्। उनीले असामान्य वर पनि प्राप्त गरेकी थिइन्। जब कुन्ती सानी बच्ची थिइन्, तब उनका पिता शूरसेनले आफ्नो काकाका छोरा र आफ्ना घनिष्ठ मित्र कुन्तीभोज, जो निसन्तान थिए उनलाई सन्तान स्वरूप दिएका थिए (त्यसैले, उनको नाम कुन्ती भएको हो)। आफ्नो धर्मपिताको घरमा कुन्तीलाई अतिथिहरूको सेवा सत्कार गर्ने कार्य दिइएको थियो। एक दिन महर्षि योगी दुर्वासा त्यहाँ आउनुभयो र कुन्तीको निःस्वार्थ सेवाबाट प्रसन्न हुनुभयो। आफ्नो दिव्य दृष्टिले कुन्तीलाई पुत्र प्राप्त हुने कठिनाई देखेर दुर्वासाले उनलाई देवतालाई आह्वान गरी सन्तान उत्पादन गर्न सक्ने वर दिनुभयो।

कुन्तीसँग विवाह गरेपछि पाण्डुले सन्तान उत्पादन गर्न नसक्ने श्राप पाए । त्यसपछि उनले सिंहासन त्यागेर पत्नीसहीत जङ्गल गए । त्यहाँ कुन्तीले आफूले प्राप्त गरेको विशेष वरदानद्वारा (पतिको अनुरोधमा) उनले तीन यशस्वी पुत्र प्राप्त गरिन् । सर्वप्रथम उनले धर्मदेवलाई आह्वान गरिन् । त्यसपछि दुर्वासाले भन्नुभएको विधिअनुसार धर्मदेवको पूजा गरेर धर्मदेवसँग समागम वा सम्भोग गरेर समय पुगेपछि एउटा बालक जन्माइन् । बच्चा जन्मनासाथ आकाशवाणी भयो "यो बालक अति राम्रो, दृढव्रत, त्यागी र तीनै लोकमा प्रख्यात हुनेछ । यसको नाम युधिष्ठिर हुनेछ र यो गुणी पनि हुनेछ ।"

यस्तो गुणले युक्त पुत्र प्राप्त गरेपछि पाण्डुले कुन्तीलाई शारीरिक शक्तिले युक्त पुत्र जन्माउन भने । त्यसपछि कुन्तीले वायुदेवको आह्वान गरिन् अनि उनीबाट बलशक्ति भीम उत्पन्न भए । भीम उत्पन्न भएपछि दैवी वाणीले भने, "यो बालक सबै बलशालीमा अग्रगण्य हुनेछ ।"

त्यसपछि, पाण्डुले जङ्गलमा बस्नुभएको ऋषिमुनिसँग परामर्श गरेर कुन्तीलाई एक वर्षको तपस्याको व्रत लिन भन्नुभयो । त्यो समय पूरा भएपछि पाण्डुले कुन्तीलाई भने "हे सुन्दरी ! तिमीसँग स्वर्गका राजा इन्द्र प्रसन्न भएका छन् । त्यसैले, उनलाई आह्वान गरेर पुत्र जन्माऊ ।" अनि कुन्तीले इन्द्रको आह्वान गरेर उनीबाट अर्जुन नाम गरेको पुत्र जन्माइन् । यी राजकुमारको जन्म हुनासाथ पुन: आकाशवाणी भयो, "हे कुन्ती ! यो बालक कार्तवीर्य र शिबि (वैदिक समयका बलशाली राजा) जस्तै बलशाली हुनेछ र युद्धमा साक्षात् इन्द्रसँग पनि पराजित हुनेछैन । यसले तिम्रो नाम सर्वत्र फैलाउनेछ र दैविक हतियार प्राप्त गर्नेछ ।" त्यसपछि पाण्डुकी कान्छी पत्नी माद्रीले नकुल र सहदेव नाम गरेका दुई पुत्र जन्माइन् । यी पाण्डुका पाँच छोरा (युधिष्ठिर, भीम, अर्जुन, नकुल र सहदेव) पाण्डव भनेर चिनिए ।

पाण्डुले सिंहासन त्यागेर जङ्गल गएपछि पाण्डुका जेष्ठ पुत्र युधिष्ठिर राजा हुने उमेरका नभएसम्मका लागि धृतराष्ट्र अस्थायीरूपले सिंहासनमा बसे । तर यो भन्दा पहिला नै पाण्डुको श्रापको कारणले मृत्यु भयो । माद्री सती गएर उनको चितामा भस्म भइन् । यसरी पाण्डव कुन्तीको संरक्षणमा बाँचे ।

पाण्डुको मृत्युपछि जङ्गलमा बस्ने ऋषिमुनिले पाँचकुमार र कुन्तीलाई कौरवको दरवार हस्तिनापुरमा पुऱ्याइदिनुभयो । यी पाँच वालकहरू राजधानी हस्तिनापुरमा धृतराष्ट्र र सरल विदुरको निर्देशनमा शाही ढङ्गले हुर्के ।

हुनतः धृतराष्ट्रले युधिष्ठिरको तर्फबाट राजकाज चलाएका थिए तर पछि आफ्नो राज्य प्राप्त गर्ने भोकले पीडित छोरा दुर्योधनका तर्फबाट राजकाज सञ्चालन गर्न लागे अनि दुर्योधन पनि युधिष्ठिरका ठाउँमा आफू सिंहासनमा बस्न चाहन्थ्यो त्यसैले, त्यो शक्ति सजिलै हस्तान्तरण भएन। आफ्नो अनियन्त्रित ईर्ष्याको कारणले गर्दा दुर्योधनले पाण्डव विरुद्ध षडयन्त्र गर्न थाल्यो र उसका असल पिता धृतराष्ट्रको सहमतिमा उनीहरूलाई धेरै दुःख दिन थाल्यो। उसले हस्तिनापुरमा उनीहरूको हत्या गर्ने धेरै प्रयास गऱ्यो र फेरि लाक्षागृहमा लगेर आगो लगाएर मार्न चाहृयो। पाँच युवा पाण्डवकी साहसी माता कुन्ती सधैं उनीहरूसँग रहन्थिन् र आफ्ना प्रिय पुत्र सहीत दुर्योधनले दिएको यातना सहीरहन्थिन्।

कुन्ती र पाण्डवहरू आश्चर्यजनक तरिकाले बारम्बार मृत्युबाट बचिरहे, किनभने उनीहरू आफ्नो पार्थिव लीला सम्पन्न गर्न अवतार लिनुभएका भगवान् श्रीकृष्णबाट प्रेमपूर्वक संरक्षित थिए। अन्त्यमा राजनीतिमा चलाख दुर्योधनले जुवाको खेलमा छल वा ठगी गरेर पाण्डवलाई उनीहरूको राज्यबाट बाहिर गऱ्यो। त्यो जुवाको खेलका कारण पाण्डवहरूकी पत्नी द्रौपदीले कौरवहरूबाट भएको शोषण सहनुपऱ्यो भने पाण्डवहरू तेह्र वर्षका लागि वन जानुपऱ्यो, जसले गर्दा कुन्तीलाई ठुलो शोक पऱ्यो।

जब तेह्र वर्षको वनवास समाप्त भयो, पाण्डवहरू आफ्नो राज्य फिर्ता लिन हस्तिनापुर आए। तर दुर्योधनले उनीहरूलाई राज्य दिन मानेन। त्यसपछि दुवै पक्षबीचको मनोमालिन्य समाप्त गर्ने केही असफल प्रयासपछि युधिष्ठिरले भगवान् श्रीकृष्णलाई शान्तिपूर्ण तरिकाले पाण्डवहरूले राज्य प्राप्त गर्न सकून् भनेर (वार्ता गर्न) पठाए। तर, दुर्योधनको हठले गर्दा त्यो प्रयत्न पनि विफल भयो। दुवै पक्ष युद्ध गर्ने तयारीमा लागे। युधिष्ठिरलाई सिंहासनमा राख्ने वा विरोध गर्ने भन्ने उद्देश्य सहीत पृथ्वीका सबै कुनाबाट महान् योद्धाहरू एकत्र भए र एउटा विनाशकारी महायुद्ध सुरु गर्ने परिदृश्य तयार गरे।

ऐतिहासिक कुरुक्षेत्रको मैदानमा अठार दिनसम्म घमासान र डरलाग्दो युद्ध भयो। त्यहाँ करोडौं योद्धामध्ये औंलामा गन्न सकिने केही मात्र बाँचे। त्यस हत्याकाण्डबाट केवल भगवान् श्रीकृष्ण, पाँच पाण्डव र अन्य व्यक्ति मात्र बाँचे। दुर्योधनसहित उसका भाइ कौरवको नाश नै भयो। कौरवहरूमध्ये बाँचेका अश्वत्थामाले बदला लिने भावनाले गर्दा द्रौपदीका सुतिरहेका पाँच छोराहरूको

नृशंसतापूर्वक हत्या गरे । यसरी आफ्नो नातिको मृत्युले कुन्तीलाई अन्तिम धक्का लाग्यो ।

जब अश्वत्थामालाई पक्रेर एउटा पशुलाई जस्तै बाँधेर घिसार्दै पाण्डवहरूको शिविरमा ल्याइयो कुन्तीकी बुहारी र मारिएका पाँच छोराकी आमा द्रौपदीको उनीप्रति करुणा आयो र उनको अनुरोधमा अश्वत्थामालाई छोडियो । तर, निर्लज्ज अश्वत्थामाले पाण्डवको अन्तिम उत्तराधिकारी र उत्तराको गर्भमा रहेको नातिलाई मार्ने प्रयास गर्दै उत्कृष्ट ब्रह्मास्त्र प्रहार गरे । जब उत्तराले त्यो ब्रह्मास्त्र आफूतिर आउन लागेको देखिन्, उनी आफ्नो ऐश्वर्यले युक्त द्वारका फर्कन लाग्नु भएका भगवान् श्रीकृष्णतर्फ दौडंदै उहाँको शरणमा परिन् । त्यो अनियन्त्रित तातो र तेजले युक्त अस्त्रलाई आफ्नो सुदर्शन चक्रले रोकेर भगवान् श्रीकृष्णले पाण्डव र उनकी माता कुन्तीलाई आसन्न मृत्युबाट बचाउनुभयो ।

यो अन्तिम विपत्तिबाट पाण्डवलाई उद्धार गरी आफ्ना सबै योजना परिपूर्ण भएको देखेर भगवान् श्रीकृष्ण पुनः उनीहरूसँग विदा लिन तयार हुनुभयो । दुर्योधनले धेरै वर्षसम्म कुन्तीका परिवारलाई दुःख दिएर पीडित गरेको थियो तर प्रत्येक पटक उनीहरूलाई भगवान् श्रीकृष्णले रक्षा गर्नुभएको थियो । अहिले भगवान् श्रीकृष्ण जान लाग्नुभएको देखेर कुन्ती भावविभोर भएर आफ्नो अन्तस्करणबाट भगवान् श्रीकृष्णको प्रार्थना गरिन् ।

कुन्ती भगवान् श्रीकृष्णकी फुपू (भगवान्‌ले कुन्तीका भाइ वसुदेवका छोराका रूपमा अवतार लिनु भएको थियो) थिइन् । भगवान्‌सँग यो पारिवारिक सम्बन्ध भएपनि उनी भगवान्‌को सर्वोच्चता र दैवी स्वरूपसँग परिचित थिइन् । भगवान् आफ्नो धाम आध्यात्मिक जगत्‌बाट पृथ्वीलाई आसुरी शक्तिबाट मुक्त गर्न र धर्मको पुनः स्थापना गर्न अवतरित हुनुभएको हो भन्ने उनलाई ज्ञान थियो । महायुद्ध सुरु हुनुअघि नै भगवान् श्रीकृष्णले उनका पुत्र अर्जुनलाई सबै कुरा भनिसक्नुभएको थियो र त्यो सम्वाद नै भगवद्‌गीताको (४.७-८) का रूपमा अमर भएको छ ।

> "हे भरतवंशी ! जहिले पनि र जहाँ पनि धर्मको ह्रास हुन्छ र अधर्मको वृद्धि हुन्छ त्यससमय म आफैं अवतार लिने गर्दछु । साधुहरूको उद्धार गर्न, दुष्टहरूको संहार गर्न र धर्मको पुनः स्थापना गर्न म युगयुगमा अवतरित हुन्छु ।"

असाधु वा दुष्ट कौरवहरूको विनाश गरेर "दुष्टहरूको संहार" गर्ने आफ्नो

उद्देश्य पूरा गर्नुभयो । युधिष्ठिरलाई सिंहासनमा राखेर पाण्डवको शासन स्थापित गर्नुभयो र मरेका योद्धाका नातेदारहरूलाई सान्त्वना दिनुभयो । भगवान्को आसन्न विदाइको दृश्यमा नै महारानी कुन्तीद्वारा गरिएको प्रार्थनाको भूमिका तयार भयो ।

कुन्ती भगवान्को रथनजिक गएर उहाँलाई सम्बोधन गर्न सुरु गरिन् । उनको तत्कालको उद्देश्य भनेको भगवान्लाई हस्तिनापुरमा बस्नका लागि अनुरोध गर्नुथियो । यदि कसैले पाण्डव शासनविरुद्ध बदला लिन चाहे त्यसबाट उनीहरूलाई रक्षा गर्न भगवान्लाई तयार गर्नुथियो ।

> "हे प्रभु ! के हजुरले आज हामीलाई छोडेर जाँदै हुनुहुन्छ । हामी पूर्णरूपले हजुरको कृपामा निर्भर छौं वा आश्रित छौं । अहिले सबै राजा हामीसँग शत्रुता गरिरहेका छन् । हाम्रो रक्षा गर्ने अरू कोही पनि छैन ।"
>
> **(श्रीमद्भागवत् १.८.३७)**

कुन्तीको यो प्रार्थना सुनेर हामीले कुन्तीको प्रार्थना स्वार्थले युक्त छ भन्ने निष्कर्ष निकाल्ने भूल गर्नहुँदैन । हुनत उनको कष्टपीडा सामान्य व्यक्तिको सहन सक्ने क्षमताभन्दा धेरै अधिक थियो तैपनि उनले त्यसबाट छुटकारा पाउनका लागि याचना गरिनन् । त्यसको विपरीत त्योभन्दा बढी कष्ट सहनका लागि प्रार्थना गरिन् किनभने कष्टले भगवान्प्रतिको भक्ति अरू बढ्दछ र त्यसले परममोक्ष प्राप्त गरिन्छ भन्ने उनको तर्क थियो ।

"हे कृष्ण ! हजुरले हामीलाई विषले युक्त भोजनबाट, ठुलो आगोबाट, राक्षसबाट, दूषित सभाबाट, वनवासमा भएको कष्टबाट र महान् सेनापतिसँग भएको युद्धबाट रक्षा गर्नुभयो । मेरो कामना भनेको यस्ता विपत्ति बारम्बार हामीलाई आइरहुन्, जसको कारण हामीले हजुरको बारम्बार दर्शन गर्न सकौं किनभने हजुरको दर्शन गर्नु भनेको हामीले बारम्बार हुने जन्म-मृत्युबाट छुट्कारा पाउनु हो ।" **(भागवत् १.८-२४-२५)**

कुन्तीका शब्दहरू एउटा सरल, महान् भक्त र साध्वीका आत्माबाट निस्किएका हुनाले ती हृदयको गहिरो दिव्य भावना र बुद्धिको उपयोग भएकाले अत्यन्त दार्शनिक र धर्मले युक्त छन् । उनका शब्दहरू दैवी, प्रेम र ज्ञानले युक्त स्तुतिहरू हुन् ।

"हे मधुपति ! जसरी गङ्गा बिनाअवरोध निरन्तर समुद्रतिर प्रवाहित हुन्छिन् त्यसरी नै मेरो आकर्षण यता-उता विचलित नभई केवल हजुरतिर मात्र भइरहोस् ।"

**(भागवत् १.८.४२)**

कुन्तीले स्वत:स्फूर्त भएर गरिएका महिमाका गीत र आध्यात्मिक मार्गको वर्णन महाभारत र भागवत् पुराणमा अमर बनेका छन् र ती स्तुतिको पाठ, श्रवण र गायन हजारौं वर्षदेखि ऋषिहरू र दार्शनिकहरूले गरिरहेका छन् ।

भागवत्को प्रथम स्कन्धमा महारानी कुन्तीद्वारा गरिएको प्रार्थनाका छब्बीस वटा श्लोक (आठ अध्यायको श्लोक अठारदेखि त्रिचालिससम्म) छन् । ती श्लोकलाई उत्कृष्ट, दार्शनिक, धार्मिक र साहित्यिक रचना मानिन्छ । यो 'महारानी कुन्तीका शिक्षा' नामक पुस्तकमा उनका प्रेरणादायक श्लोक र तिनमा अन्तराष्ट्रिय कृष्णभावनामृत सङ्घका संस्थापक आचार्य कृष्ण कृपामूर्ति श्रील अभयचरणाविन्द भक्तिवेदान्त स्वामी प्रभुपादले प्रकाशले युक्त टिप्पणी वा तात्पर्य दिनुभएको छ । यस पुस्तकको तात्पर्य पहिला १९६२ मा नै लेखिएको प्रवचनमा व्यक्त व्याख्यालाई पनि सम्मिलित गरिएको छ । १९७३ को वसन्त ऋतुमा इस्कोनको लसएन्जल्स केन्द्रमा दिनुभएको प्रवचनमा यी श्लोकमा विस्तृत विवेचना गर्नुभएको छ ।

भक्तिवेदान्त बुक ट्रस्टको यो नयाँ प्रकाशन मानिसको जीवनका रहस्यप्रति गहिरोसँग बुझ्नका लागि सहायक हुनेछ र पुस्तकालयका लागि मूल्यवान हुनेछ भनेर आशा गर्दछौं । एउटा महान् भक्त र विद्वान्द्वारा लेखिएका हुनाले प्रत्येक पाठकलाई यस पुस्तकले मौलिक ज्ञान र आध्यात्मिक प्रकाश प्राप्त गर्ने दिशामा अविचलित निर्देशन गर्नेछ ।

–प्रकाशक

***

# १. आदि पुरुष

**कुन्त्युवाच**

**नमस्ये पुरुषं त्वाद्यमीश्वरं प्रकृतेः परम् ।**
**अलक्ष्यं सर्वभूतानामन्तर्बहिरवस्थितम् ॥**

श्रीमती कुन्तीले भनिन् – हे कृष्ण ! म हजुरलाई नमस्कार गर्दछु किनभने हजुर आदि पुरुष हुनुहुन्छ र यस भौतिक जगत्का गुणको प्रभावबाट अलग हुनुहुन्छ । हजुर सबै वस्तुका भित्र र बाहिर स्थित हुनुहुन्छ तर सबैले देख्न नसकिने हुनुहुन्छ ।

**–(भागवत् १.८.१८)**

श्रीमती कुन्तीलाई भगवान् श्रीकृष्ण आफ्ना भदा नाता भएर रहे पनि उहाँ आदि भगवान् हुनुहुन्छ भन्ने पूर्णरूपले जानकारी थियो । यस्ती प्रबुद्ध महिलाले आफ्ना भदालाई नमस्कार गर्ने भूल गर्न सक्दिनथिन् । त्यसैले, उनले भगवान्लाई यस भौतिक जगत्भन्दा परका आदि पुरुष हुनुहुन्छ भनेर सम्बोधन गरिन् । हुनत सम्पूर्ण जीव पनि दिव्य नै हुन् तर तिनीहरू न आदि जीव नै हुन् न अच्युत वा च्युत नहुने नै हुन् । जीवहरू भौतिक प्रकृतिको बन्धनले गर्दा तल झर्न सक्दछन् तर भगवान् भने कहिल्यै पनि तल झर्नुहुन्न । त्यसैले, वेदमा उहाँलाई सम्पूर्ण जीवहरूमा प्रधान हुनुहुन्छ भनिएको छ (**नित्यो नित्यानाम् चेतनश्चेतनानाम्**) । त्यसपछि उहाँलाई पुनः ईश्वर वा सबैका नियन्त्रकको रूपमा सम्बोधन गरिएको छ । जीव वा देवता, जस्तैः सूर्य, चन्द्रहरू केहीं हदसम्म ईश्वर हुन् तर यीमध्ये कोही पनि परम ईश्वर वा परम नियन्त्रक होइनन् । केवल भगवान् श्रीकृष्ण मात्र परमेश्वर वा परमात्मा हुनुहुन्छ । त्यसैले, उहाँभित्र पनि हुनुहुन्छ, बाहिर पनि हुनुहुन्छ । हुनत उहाँ श्रीमती कुन्तीका अघि उनका भदा भएर उपस्थित हुनुहुन्थ्यो भने उहाँ नै फेरि उनका र सबैकाभित्र पनि विद्यमान हुनुहुन्थ्यो । भगवद्गीता (१५.१५) मा भगवान्ले भन्नुभएको छ, “म प्रत्येकको हृदयमा

विराजमान छु। त्यसैले, मेरो कारणले गर्दा मानिसले मलाई कहिले स्मरण गर्दछ, कहिले भुल्दछ र कहिले मेरो बारेमा थाहा पाउँदछ वा जानकारी प्राप्त गर्दछ। सम्पूर्ण वेदका माध्यमले नै मलाई जान्न सकिन्छ किनभने सम्पूर्ण वेदको रचयिता म नै हुँ र म नै वेदान्तको शिक्षक पनि हुँ।" सम्पूर्ण जीवको भित्र र बाहिर विराजमान हुने भए पनि भगवान् सबैले देखिने हुनुहुन्न भनेर महारानी कुन्तीले यस कुराको पुष्टि गरेकी छिन्। भन्नुको अर्थ, सामान्य व्यक्तिका लागि भगवान् बुझ्न कठिन वा जटिलता हुनुहुन्छ। महारानी कुन्तीले स्वयम् अनुभव गरिन् भगवान् श्रीकृष्ण उनको अघि पनि उपस्थित हुनुहुन्छ साथै अश्वत्थामाको ब्रह्मास्त्रबाट भ्रूणको रक्षा गर्न उत्तराको गर्भमा पनि प्रवेश गर्नुभएको छ। त्यसैले, भगवान् श्रीकृष्ण सर्वव्यापी हुनुहुन्छ वा अन्तर्यामी हुनुहुन्छ। भनेर कुन्ती आफैं द्विविधामा परिन्। वास्तवमा उहाँ ती दुवै हुनुहुन्छ तर जुन व्यक्ति उहाँको शरणमा परेको छैन, उनीहरूलाई त्यो ज्ञान प्रकट गर्ने नगर्ने अधिकार भगवान्लाई नै छ। यस्तो ज्ञानलाई अवरोध गर्ने पर्दालाई परमेश्वरको माया शक्ति भनिन्छ र यसले विरोधी जीवको सङ्कुचित दृष्टिलाई नियन्त्रणमा राख्दछ। यसको व्याख्या दोस्रो अध्यायमा दिइएको छ।

***

# २. इन्द्रियभन्दा पर

**माया जवनिकाच्छन्नमज्ञाधोक्षजमव्ययम् ।**
**न लक्ष्यसे मूढदृशा नटो नाटचधरो यथा ॥**

सीमित इन्द्रिय ज्ञानभन्दा पर भएका कारणले गर्दा हजुर भ्रमित गर्ने शक्ति (माया) को पर्दाले ढाकिनुभएका शाश्वत अविनाशी तत्त्व हुनुहुन्छ । जसरी नाटकमा कलाकारले वस्त्र लगाएपछि उसलाई अरूले चिन्न सक्दैनन्, त्यसरी नै हजुर पनि मूर्ख दर्शकहरूका लागि अदृश्य वा नदेखिने हुनुहुन्छ ।

**–(श्रीमद्भागवत् १.८.१९)**

अल्पज्ञ व्यक्तिहरूले भगवान्लाई आफूजस्तै सामान्य व्यक्ति ठान्ने भूल गर्दछन् । त्यसैले, उहाँको उपहास गर्दछन् । यो कुरा भगवान् श्रीकृष्णले भगवद्गीतामा पुष्टि गर्नुभएको छ । त्यही कुरालाई यहाँ महारानी कुन्तीले पनि पुष्टि गरेकी छिन् । जसले भगवान्को सत्ताको विरुद्ध विद्रोह गर्दछ, त्यो व्यक्ति अल्पज्ञ हो र त्यस्तो व्यक्तिलाई असुर भनिन्छ । असुरहरूले भगवान्को आधिकारिकताका बारेमा जान्न बुझ्न नै सक्दैनन्, जब भगवान् हाम्रोसामु राम, नृसिंह, वराह वा आफ्नो आदि कृष्णरूपमा प्रकट भएर मानिसका लागि असम्भव नै हुने अनेक अद्भूत र आश्चर्यजनक कार्य गर्नुहुन्छ । श्रीमद्भागवत्को दशौं स्कन्धमा हामीले पढ्न सक्दछौं, भगवान् श्रीकृष्णले आफ्नी आमाको काखमा सुतिरहँदा पनि मानवलाई असम्भव हुने कार्य गरेर देखाउनुभएको थियो । आफ्नो स्तनमा विष राखेर भगवान्लाई मार्न आएकी पुतना जस्ती बोक्सी वा टुनामुना गरेर मोहित गर्ने स्त्रीलाई मार्नुभएको थियो । भगवान्ले सामान्य बालकले जस्तै स्वाभाविकरूपले त्यसको स्तन पान गर्नुभयो र प्राण पनि चुस्नभयो । त्यसरी नै, बालकले जसरी भ्यागुताको छाता उठाउँदछन्, त्यसरी नै गोवर्धन पर्वत उठाउनुभयो र वृन्दावनवासीको सुरक्षाका लागि लगातार धेरै दिनसम्म उठाएर

उभिइरहनु भयो। यी अति शक्तिशाली मानवबाट मात्र गर्न सम्भव केही कार्यहरू हुन्, जसको वर्णन आधिकारिक वैदिक साहित्य जस्तैः पुराण, इतिहास र उपनिषद्मा गरिएको छ। भगवान्ले भगवद्गीताका रूपमा आश्चर्यजनक उपदेश दिनुभएको छ। उहाँले एउटा बहादुर, एउटा गृहस्थ, एउटा शिक्षक र एउटा त्यागी वा संन्यासीको जस्तो भएर अद्भूत क्षमताको प्रदर्शन गर्नुभयो। व्यास, देवल, असित, नारद, मध्व, शङ्कर, रामानुज, श्रीचैतन्य महाप्रभु, जीव गोस्वामी, विश्वनाथ चक्रवर्ती, भक्तिसिद्धान्त सरस्वती र यस परम्पराका अन्य प्रामाणिक गुरुहरूले पनि उहाँलाई भगवान्का रूपमा स्वीकार गरेका छन्। स्वयम् आफैंले पनि विभिन्न आधिकारिक साहित्यहरूमा आफूलाई 'भगवान् हुँ' भनेर घोषणा गर्नुभएको छ। तैपनि, आसुरी मनोवृत्ति भएको एउटा यस्तो वर्ग छ, जसले उहाँलाई परब्रह्म परमेश्वरका रूपमा मान्न हिचकिचाइरहन्छ। यस्तो सोच्नुमा केही उनीहरूको अल्पज्ञानको कारणले हो भने केही भाग उनीहरूले पूर्व जन्ममा र यस जन्ममा गरेका दुष्कर्मको परिणामस्वरूप प्राप्त घोर हठताका कारणले हो। यस्ता व्यक्तिले भगवान् श्रीकृष्ण उनीहरूको अघि उपस्थित नै भए पनि चिन्न सक्दैनन्। अर्को समस्या भनेको जुन व्यक्ति आफ्ना अपूर्ण इन्द्रियहरूमा निर्भर हुन्छ, उसले पनि भगवान् परमेश्वर हुनुहुन्छ भनेर अनुभव गर्न सक्दैन। त्यस्ता व्यक्ति आजभोलिका वैज्ञानिक जस्तै हुन्, जसले प्रत्येक कुरा केवल आफ्नो प्रयोगात्मक ज्ञानबाट जान्न चाहन्छन्। यस्तो अपूर्ण प्रयोगात्मक ज्ञानबाट परम पुरुष भगवान्लाई जान्न सम्भव छैन। यहाँ भगवान्लाई अधोक्षज अर्थात् प्रयोगात्मक ज्ञानको सीमाभन्दा बाहिरका भनेर भनिएको छ। हाम्रा सम्पूर्ण इन्द्रियहरू अपूर्ण छन् तर हामी भने हामीले प्रत्येक वस्तु देख्न सक्दछौं भनेर दावी गर्दछौं। हामीले स्वीकार गर्नुपर्दछ कि हामीले प्रत्येक वस्तु कुनै एउटा परिस्थितिमा मात्र देख्न सक्दछौं। त्यो परिस्थिति पनि हाम्रो नियन्त्रणमा हुँदैन। भगवान् भने इन्द्रिय अनुभूतिबाट देखिनेभन्दा पर हुनुहुन्छ। यस्तो कमजोरी बद्धजीवमा र विशेष गरेर अल्पज्ञ स्त्री जातिमा हुन्छ भनेर महारानी कुन्तीले स्वीकार गरेकी छिन्। त्यसैले, यस्ता अल्पज्ञान भएका जीवका लागि मन्दिर, मस्जिद र चर्चहरूको आवश्यकता हुन्छ। यस्ता पवित्र स्थलमा गएर उनीहरू भगवान्को सत्ताका बारेमा जानकारी प्राप्त गरून्। साथै, त्यसैका अधिकारीहरूबाट भगवान्का विषयमा भनिएका कुरा श्रवण गर्न सकुन्। यसरी, ती अल्पज्ञान भएकाहरूका लागि यो कार्य आध्यात्मिक जीवनको प्रारम्भ हो।

उनीहरूलाई यसको आवश्यकता पनि पर्दछ । केवल मूर्खहरूले मात्र धेरैजसो यस्ता स्थलको स्थापना गर्दा विरोध गर्दछन् । साधारणतया मन्दिर, मस्जिद र चर्चमा जसरी भूइँमा लडेर भगवान्लाई दण्डवत प्रणाम गरिन्छ, त्यसरी भगवान्को सत्ताका अघि प्रणाम गर्नु अल्पज्ञानीका लागि लाभप्रद हुन्छ भने त्यसरी नै माथिल्लो स्तरको भक्तका लागि सक्रिय सेवाद्वारा भगवान्को ध्यान गर्नु लाभप्रद हुन्छ ।

***

# ३. परम बुद्धिमति (बुद्धिमान्) महिला

**तथा परमहंसानां मुनीनाममलात्मनाम् ।**
**भक्तियोगविधानार्थं कथं पश्येम हि स्त्रियः ॥**

धेरैअघि र माथि पुगेका आध्यात्मवादीहरू र आत्मा र पदार्थबीचको अन्तर जान्न सकेर पवित्र भएका विचारकहरूका हृदयमा भक्तिको दिव्य विज्ञानको बीजारोपण गर्नका लागि हजुर स्वयम् अवतार लिएर आउनुहुन्छ। त्यसो हो भने हामी स्त्रीले हजुरलाई पूर्णरूपले कसरी जान्न सक्दछौं ?

**–(श्रीमद्भागवत् १.८.२०)**

ठुलाठुला दर्शनप्रति चिन्तनशील व्यक्तिहरू पनि हजुरको धाम वा क्षेत्रमा पुग्न सक्दैनन्। परमसत्य, परमब्रह्म ठुला-ठुला दार्शनिकको चिन्तन शक्तिभन्दा पनि पर हुनुहुन्छ भनेर उपनिषदले पनि भनेको छ। उहाँलाई धेरैधेरै विद्या प्राप्त गरेर वा महान् मस्तिष्कले पनि जान्न सकिंदैन । उहाँलाई त केवल उहाँको कृपा जसले प्राप्त गर्दछ, उसले मात्र जान्न सक्दछ । अन्य मानिसले भने वर्षौंसम्म उहाँको चिन्तन गरेर पनि उहाँलाई जान्न सक्दैन। यस तथ्यको पुष्टि महारानी कुन्तीले पनि गरेकी छिन्। उनले यहाँ एउटा अवोध महिलाको अभिनय वा भूमिका गरेकी छिन्। सामान्यतया स्त्रीहरूले दार्शनिकले जस्तो चिन्तन गर्न सक्दैनन् तर उनीहरूलाई भगवान्‌को आशिष् प्राप्त हुन्छ किनभने उनीहरूले भगवान्‌को सर्वोच्चता र सर्वशक्तिमत्ताप्रति तुरुन्त विश्वास गर्दछन्। बिना कुनै अनुभव भगवान्‌लाई नमस्कार गर्दछन् । भगवान् धेरै दयालु वा कृपालु हुनुहुन्छ। त्यसैले, कुनै व्यक्ति केवल ठुलो दार्शनिक छ भन्दैमा उसलाई विशेष कृपा गर्नुहुन्न किनभने उहाँले उसको निष्ठा के प्रयोजनका लागि हो ? भन्ने जान्नुहुन्छ । महिलाहरूले बढी विश्वास गर्ने हुनाले धार्मिक उत्सवमा धेरै सङ्ख्यामा महिला उपस्थित हुन्छन्। प्रत्येक देश र प्रत्येक धार्मिक सम्प्रदायका

धार्मिक कार्यक्रममा पुरुषभन्दा महिलाको उपस्थिती धेरै हुन्छ । भगवान्‌को सत्ता स्वीकार गर्ने यो सरलता, निष्ठाविहीन र देखावटी धार्मिकताभन्दा धेरै प्रभावकारी हुन्छ ।

कुन्तीदेवीले बडो विनयपूर्ण भावले भगवान्‌को प्रार्थना गरेकी छिन् र त्यस्तै लक्षण वैष्णवको हुनपर्दछ । भगवान् श्रीकृष्ण कुन्तीदेवीको पाउको धूलो लिएर उनलाई आदर प्रकट गर्न आउनुभएको थियो किनभने कुन्ती देवीलाई भगवान् श्रीकृष्णले आफ्नी फुपू मान्नुहुन्थ्यो । त्यसैले, भगवान्‌ले उनको पाउ स्पर्श गर्ने गर्नुहुन्थ्यो । हुनत कुन्तीदेवी भगवान् श्रीकृष्णका लागि माता यशोदातुल्य पूजनीय थिइन् तर कुन्ती देवी यति महान् भक्त थिइन्, त्यसकारण उनी अति विनम्र थिइन् । त्यसैले, आफ्नो प्रार्थनामा उनले भनिन् "हे कृष्ण ! हजुर केवल परमहंसहरूद्वारा मात्र जान्न सकिने हुनुहुन्छ, म त एउटी स्त्री मात्र हुँ । त्यसैले, मैले हजुरको दर्शन कसरी गर्न सक्दछु ?"

वैदिक प्रणालीअनुसार समाजमा चार विभाग (वर्ण) छन् (**चातुर्वर्ण्यं मया सृष्टम्**) । समाजका सर्वोच्च वर्णका सदस्य ब्राह्मण हुन् । उनीहरू विद्वान् हुन्छन् । त्यसपछि क्षत्रिय (सैनिक र प्रशासक) हुन् । त्यसपछि वैश्य (कृषक र व्यापारी) र अन्त्यमा शूद्र (सामान्य श्रमिक) पर्दछन् । यस प्रणालीअन्तर्गत मानिस उसको गुण र कर्म (गुणकर्म) अनुसार कुन स्थानमा पर्दछ भनेर निर्धारण हुन्छ । भगवद्‌गीतामा **स्त्रियो वैश्यास्तया शूद्राः** र श्रीमद्‌भागवत्‌मा **स्त्रीशूद्र द्विंजबन्धूनाम्** भनेर उल्लेख गरेको पाइन्छ । त्यो निर्देशन अनुसार स्त्री, शूद्र र द्विजबन्धु एउटै श्रेणीमा पर्दछन् । द्विजबन्धु भनेको जुन व्यक्ति ब्राह्मण वा क्षत्रिय कुलमा जन्मन्छ तर ऊसँग ती गुण हुँदैनन्, त्यस्ता व्यक्तिलाई द्विजबन्धु भनिन्छ । त्यसैले,, वैदिक प्रणालीअनुसार र मानिसको गुणअनुसार उसको सामाजिक स्थान निर्धारण गरिन्छ । यो पद्धति अत्यन्त व्यावहारिक पनि छ । यदि कुनै व्यक्ति सर्वोच्च अदालतका न्यायधीशको छोरो भएर जन्मेको छ भने यसको अर्थ त्यो व्यक्ति पनि न्यायधीश हो भन्ने होइन । अहिले प्रचलनमा भने कुनै व्यक्ति ब्राह्मण कुलमा जन्मेको छ तर ऊसँग ब्राह्मणमा हुनपर्ने गुण छैन, साथै ऊ पहिलो श्रेणीको दुष्ट छ भने पनि उसले आफूलाई ब्राह्मण नै भन्दछ । उसका गुण शूद्रका भन्दा कम भएपनि सर्वसाधारणले उसलाई ब्राह्मण भनेर नै स्वीकार गर्दछन् । यसले गर्दा, वैदिक सभ्यताको पतन भएको छ । भारतका ब्राह्मणहरूले कहिलेकाहीँ

मेरो यो आन्दोलनको विरोध गर्दछन् किनभने मैले युरोप र अमेरिकाका व्यक्तिलाई प्रशिक्षण दिएको छु र तिनीहरूलाई ब्राह्मणका रूपमा स्वीकार गरेको छु । हामी तिनीहरूका तर्कलाई ध्यान दिँदैनौं । साथै, अन्य विवेकी व्यक्तिले पनि त्यसै गर्दछन् ।

श्री चैतन्य महाप्रभुले भन्नुभएको छ –

**पृथिवीते आछे यत नगरादि ग्राम ।**
**सर्वत्र प्रचार हैबे मोर नाम ॥**

संसारका प्रत्येक नगर, प्रत्येक सहर तथा प्रत्येक गाउँमा कृष्णचेतना वा कृष्ण भावनामृत आन्दोलनको प्रचार हुनेछ । यदि यसो हो भने युरोपेली र अमेरिकी कसरी ब्राह्मण बन्न सक्दैनन् ? वास्तवमा जुन व्यक्ति कृष्णभावनामृतको आन्दोलनमा आउँदछ वा त्यसलाई अङ्गिकार गर्दछ, त्यो व्यक्ति ब्राह्मणत्वभन्दा अघि पुगिसकेको हुन्छ । यो कुरा भगवद्गीतामा पनि भनिएको छ :

**मां च योऽव्याभिचारेण भक्तियोगेन सेवते ।**
**स गुणान् समतीत्यैतान् ब्रह्मभूयाय कल्पते ॥**

"जुन व्यक्तिले भक्तियोगको मार्गलाई स्वीकार गरेको छ, उसले प्रकृतिका गुणलाई पार गर्दछ र उसले तुरुन्त दिव्यस्थिति वा पद (ब्रह्मभूत) प्राप्त गर्दछ ।" ब्राह्मण बन्ने मात्र के कुरा, यस्ता भक्तियोगमा पूर्णरूपले लागेका व्यक्तिले परमपद वा सर्वोच्च दिव्य स्थिति प्राप्त गर्दछन् ।

ब्राह्मण कुलमा जन्मेको व्यक्ति नै ब्राह्मण बन्दछ भन्ने रुढीवादी विश्वासले नै वैदिक सभ्यतालाई नष्ट गरेको छ, तर अहिले हामीले प्रत्येक व्यक्तिले सिद्धि प्राप्त गर्न सक्दछ भन्ने वैदिक विचारलाई पुनर्जीवित गरिरहेका छौँ । भगवद्गीतामा (९.३२) भगवान् श्रीकृष्ण भन्नुहुन्छ –

**मां हि पार्थ व्यपाश्रित्य येऽपि स्युः पापयोनयः ।**
**स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति परां गतिम् ॥**

"हे पृथापुत्र ! जो मेरो शरण पर्दछ, त्यो निम्नकोटीमा जन्मेको व्यक्ति, स्त्री, वैश्य वा शूद्र नै किन नहोस् ती सबै परमधाम जान सक्दछन् ।" हुनत यसरी स्त्री, वैश्य र शूद्रलाई सामान्यरूपले निम्न वर्गका मानिन्छ तर यदि ऊ भक्त बन्यो भने त्यो स्त्री होस् वा पुरुष, सबै आफ्नो यस्तो उपाधि वा वर्गबाट माथि जान सक्दछन् । साधारणतया स्त्री, वैश्य र शूद्रलाई अल्पज्ञ ठानिन्छ तर यदि यी

कसैले कृष्णभावनामृत वा कृष्णचेतनालाई अङ्गिकार गर्दछन् भने तिनीहरू सर्वाधिक बुद्धिमान् बन्दछन् । यो कुरा चैतन्य-चरितामृतमा पनि भनिएको छ, **कृष्ण येइ भजे सेइ बड चतुर** चैतन्य महाप्रभुले भन्नुभएको छ :–

**एइ रूपे ब्रह्माण्ड भ्रमित कोन भाग्यवान् जीव ।**
**गुरु-कृष्ण-प्रसादे पाय भक्ति-लता-बीज ॥**

"यो सम्पूर्ण ब्रह्माण्डमा भ्रमण गर्ने सबै जीवहरूमा जो परम भाग्यशाली छ, उसले मात्र गुरु र भगवान् श्रीकृष्णको कृपा प्राप्त गरेर भक्तिको बीज प्राप्त गर्दछ ।" (श्री चैतन्य-चरितामृत-मध्य १९.१५१) । त्यसैले, कृष्णभावनामृत आन्दोलनमा अधम र अभागी व्यक्ति आउँदैनन् वा बस्दैनन् । यहाँ त परम भाग्यशाली व्यक्ति मात्र आउँदछन् । जसले कृष्णभावनामृतलाई अङ्गिकार गरेको छ, त्यस व्यक्तिलाई महान् भाग्यशाली ठान्नुपर्दछ किनभने उसले कर्म गर्ने त्यो विधि प्राप्त गरेको हुन्छ, जसले गर्दा उसको जीवन पूर्ण हुन सक्दछ । जुन व्यक्ति कृष्णचेतनाले युक्त छ र आफ्ना कर्तव्यहरू सही तरिकाले गर्न सक्दछ, त्यो व्यक्ति परम भाग्यशाली र परमपूर्ण हो । यो कुराको पुष्टि गर्दै कुन्तीदेवी विनम्र भएर भन्दै छिन् ।

हुनत कुन्ती स्त्रीको शरीरमा थिइन् तर उनी भगवान्की परम भक्त थिइन् । त्यसैले, उनी सामान्य बुद्धिहीन स्त्री जाति थिइनन् । उनी सर्वाधिक बुद्धिमान् थिइन् किनभने उनले कृष्णलाई भगवान्का रूपमा चिनिसकेकी थिइन् र भन्दै थिइन्, "उहाँ भौतिक कुराले मेरो भदा हुनुहुन्छ । त्यसैले, मलाई नमस्कार गर्न आउनु भयो तर वास्तवमा उहाँ भगवान् नै हुनुहुन्छ ।" त्यसैले, उनले यसअघिको श्लोकमा भनेकी छिन् – **अलक्ष्यं सर्वभूतानामन्तर्बहिरवस्थितम्** – हुनत हजुर सबैका भित्र-बाहिर र सर्वत्र हुनुहुन्छ तर सामान्य व्यक्तिले भने हजुरलाई देख्न सक्दैन । अर्को श्लोकमा उनले भनेकी छिन् – **न लक्ष्यते मूढदृशा** – "मूर्ख र दुष्टले हजुरलाई देख्न सक्दैनन् ।" यसको अर्थ कुन्तीले भने देखेकी थिइन् । यदि भगवान् श्रीकृष्णको यथारूप नदेखेका भए उनले "**न लक्ष्यते मूढदृशा** ?" कसरी भन्न सक्दथिन् ? उनले **प्रकृतेः परम** – हजुर यस भौतिक प्रकृति वा सृष्टिभन्दा पर हुनुहुन्छ भनेर भनेकी छिन् ।

यस श्लोकमा पनि कुन्तीले विनम्र भएर आफ्ना कुराहरू भनेकी छिन् किनभने विनम्रता भक्तका लागि उत्तम मानिएको छ । त्यसकारण, श्रीकृष्ण चैत्यन्य महाप्रभुले हामीलाई शिक्षा दिंदै भन्नुभएको छ – **तृणादपि सुनीचेन**

**तरोरपि सहीष्णुना** – आध्यात्मिक जीवनमा प्रगति गर्नुछ भने मानिस वृक्षभन्दा अधिक सहनशील र घाँसभन्दा अधिक विनम्र हुनपर्दछ । जसरी समुद्रमा यात्रा गर्दा विभिन्न प्रकारका विपत्ति आइपर्दछन् त्यसरी नै यस भौतिक जगत्मा बस्ने मानिसका जीवनमा पनि विभिन्न प्रकारका आपत्हरू आइरहन्छन् । त्यसैले, मानिस सहनशील र विनम्र बन्न आवश्यक छ । जसरी समुद्रको वातावरण शान्त हुन्छ भनेर आशा गर्नु व्यर्थ छ किनभने कुनै पनि समय ठुलोभन्दा ठुलो जहाजलाई पनि ठुलो स्वर गर्दै आएको लहरले हल्लाई दिन सक्दछ, त्यसरी नै हामी पनि यस भौतिक संसारमा शान्तसँग बस्न सक्दैनौं किनभने कुनै पनि समय आपत्-विपत् आउन सक्दछ । शास्त्र र वैदिक साहित्यको भनाइ छ – **पदं पदं यद विपदाम्** (भागवत् १०.१४.५८) प्रत्येक पाइला-पाइलामा विपत्ति छ तर यदि मानिस भक्त बन्यो भने ऊ यस्ता विपत्तिबाट वच्न सक्दछ (**मायामेतां तरन्ति ते**) ।

यदि कसैले कृष्णचेतना वा कृष्णभावनामृतको बाटो अङ्गिकार गर्दछ भने सुरु-सुरुमा मायाले विभिन्न प्रकारका अवरोधहरू गर्ने गर्दछिन् । हामी कृष्णभावनामृतमा कति दृढ भएर लागेका छौं भनेर मायाले परीक्षा लिन्छिन् किनभने माया भगवान् श्रीकृष्णकी दूत वा प्रतिनिधि हुन् । त्यसैले, कसैले पनि भगवान् श्रीकृष्णलाई अवरोध वा विचलित गरोस् भनेर उनले कसैलाई पनि स्वतन्त्रता प्रदान गर्दिनन । त्यसैले, हामीले कृष्णभावनामृत केवल भगवान् श्रीकृष्णलाई अवरोध वा विचलित गर्न अङ्गिकार गरेको हौं वा वास्तवमा हामी गम्भीर भएर नै लागेका हौं भनेर उनले हाम्रो कठिन परीक्षा लिन्छिन् र त्यो नै मायाको काम र कर्तव्य पनि हो । कृष्णचेतनाको मार्गमा प्रगति गर्दा प्रारम्भमा मायाले हाम्रो परीक्षा लिँदा हामीले धेरै अवरोधहरूको अनुभव गर्नुपर्दछ । तर जब हामीले विधि विधानको पालना गर्दै नियमितरूपले जय कीर्तन गर्न थाल्दछौं अनि हामी यस कार्यमा दृढ हुन सक्दछौं । यदि हामीले यी विधिविधानलाई तिरस्कार गर्‍यौं भने मायाले हामीलाई तुरुन्त पक्रन्छिन् । उनी यसो गर्न सधैं तयार भएर बसेकी हुन्छिन् । हामी सागरमा बसेका छौं र कुनै पनि समय हामी विचलित हुन सक्दछौं त्यसैले, जुन व्यक्ति विचलित हुँदैन, उसलाई नै परमहंस भनिन्छ । त्यसैले, कुन्तीदेवी भन्दछिन् – **"तथा परमहंसानाम्** – हजुर परमहंसद्वारा मात्र जानिने हुनुहुन्छ । परमको अर्थ चरम र हंसको अर्थ हाँस हो । त्यसैले, परमहंसको अर्थ "पूर्ण हाँस हो अर्थात् त्यस्तो हाँस जसलाई पानी

मिसिएको दूध दिएमा उसले दूध पिएर पानी छोड्दछ । त्यसरी नै, यो भौतिक जगत् पनि दुई प्रकृतिले बनेको छ – एउटा अपरा वा निम्नस्तरको प्रकृति र एउटा परा उच्चस्तरको प्रकृति । परा प्रकृतिको अर्थ आध्यात्मिक जीवन हो भने अपरा प्रकृतिको अर्थ भौतिक जीवन हो । त्यसैले, जुन व्यक्तिले यस भौतिक प्रकृतिको भागलाई त्यागेर केवल आध्यात्मिक प्रकृतिको भाग ग्रहण गर्दछ वा भौतिक जीवनसँग सम्बन्धित वस्तुको त्याग गरेर आध्यात्मिक जीवन अङ्गिकार गर्दछ ऊ नै परमहंस हो ।

यस शरीरका सबै क्रियाकलाप शरीरभित्र स्थित आत्माका कारणले मात्र सम्पन्न हुन्छन् र त्यो वास्तविकता पनि हो भनेर प्रत्येक मानिसले बुझ्नपर्दछ किनभने यो शरीर भनेको त्यस आत्माको बाहिरी आवरण वा खोल मात्र हो । त्यसरी नै, सम्पूर्ण क्रियाकलापका केन्द्रविन्दु भगवान् श्रीकृष्ण हुनुहुन्छ भनेर मानिसले बुझ्नपर्दछ र जसले यो बुझ्दछ त्यो नै परमहंस हो । जसले भगवान् श्रीकृष्ण केन्द्रविन्दुरूपी सत्य हुनुहुन्छ भनेर जान्दछ, त्यो परमहंस हो र भक्तियोग पनि उहाँको शक्ति हो । भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ – **अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते** – "म सबै वस्तुको उत्पत्तिको स्रोत हुँ र मबाट नै सबै वस्तुहरू उत्पन्न हुन्छन् ।" जुन व्यक्तिले केवल सिद्धान्तबाट मात्र होइन व्यावहारिकतामा पनि भगवान् श्रीकृष्ण नै सबै कारणहरूका मूल कारण हुनुहुन्छ भन्ने कुरा जानेर त्यस कुरामा विश्वस्त हुन्छ, त्यो व्यक्ति नै परमहंस हो ।

कुन्ती देवीले भनिन् – "हजुर परमहंसहरूका लागि मात्र हुनुहुन्छ, मूर्ख र दुष्टका लागि होइन । हजुर केवल परमहंस र मुनिहरूका लागि हुनुहुन्छ ।" **'मनीनाम्'** शब्दको अर्थ विचारवान् र ज्ञानी हो भने **'अमलात्मनम्'** शब्दको अर्थ त्यस व्यक्तिका लागि हुन्छ जसको हृदयमा कुनै खराब विचार हुँदैन अर्थात् स्वच्छ हृदयको व्यक्ति किनभने भौतिकवादी व्यक्तिको हृदय खराब विचारले भरिएको हुन्छ । ती खराब विचार के हुन् त ? ती काम र लोभ हुन् । सबै भौतिकवादी व्यक्तिहरूमा कामना र लोभ हुन्छन् त्यसैले, उनीहरूको हृदय खराब विचारले भरिएको हुन्छ भनेर बुझ्न सकिन्छ तर **'अमलात्मनाम्'** भने त्यस्तो व्यक्तिलाई भनिन्छ, जो यी दुई दूषित विचारबाट मुक्त छ ।

जसको मन शुद्ध पवित्र छ, भक्तियोग त्यसैका लागि हो तर जसको मनमा कामना र लोभ छ, उसका लागि होइन । कामना भएको र लोभी व्यक्तिले पनि

भक्तियोगमा अघि बढ्ने प्रयास गर्न सक्दछ किनभने यदि ऊ भक्तियोगमा स्थित भयो भने उसले बिस्तारै सफलता प्राप्त गर्न सक्दछ र तत्पश्चात् उसमा कामना र लोभ पनि रहँदैन । **विरक्तिरन्यत्र च** (भागवत् ११.२.४२) जब मानिस कामना र लोभबाट मुक्त हुन्छ अनि ऊ भक्तियोगमा स्थिर हुन सक्दछ । वास्तवमा ऊ नै परमहंस हो र यो नै मानिसका लागि परीक्षा पनि हो । कुन्तीदेवीले विनम्र भएर भनिन् – जसको हृदय शुद्ध पवित्र छ, भक्तियोगमा लागेको छ, त्यस्ता परमहंस र मुनिका लागि नै हजुर हुनुहुन्छ भने हामी के हौं त ? हामी त केवल स्त्री हौं र निम्न श्रेणीका हौं । त्यसैले, हामीले हजुरलाई कसरी जान्न र बुझ्न सक्दछौं ? हुनत उनलाई भगवान्‌का बारेमा सबै कुरा थाहा थियो तर पनि उनले सामान्य स्त्रीले जस्तै गरेर भनिन् “मैले हजुरलाई कसरी जान्न सक्दछु ?” यो नै उनको विनम्रता हो ।

***

# ४. सर्वव्यापक सत्यरूपी भगवान् श्रीकृष्णका समीप जानु

**कृष्णाय वासुदेवाय देवकीनन्दनाय च ।**
**नन्दगोपकुमाराय गोविन्दाय नमो नमः ॥**

त्यसैले, वसुदेवका पुत्र, देवकीका आनन्द रूप, नन्द र वृन्दावनका ग्वालाका छोरा एवम् गाई र इन्द्रियका प्राण भगवान्लाई सादर नमस्कार गर्दछु

**–(भागवत् १.८.२१)**

यसरी आफ्ना अनन्य भक्तहरूप्रति विशेष अनुग्रह गर्न र राक्षस र असुरहरूलाई दमन गर्न आफ्नो असीम र अहैतुकी कृपा गर्दै पृथ्वीमा अवतरित हुनुभएका भगवान्लाई कुनै पनि भौतिक वस्तुद्वारा प्राप्त गर्न सकिँदैन । महारानी कुन्तीले भगवान्का अन्य अवतार भन्दा यस कृष्ण अवतारको विशेष पूजा गर्दछिन् किनभने भगवान्को यसरूपमा उहाँलाई सरलतापूर्वक प्राप्त गर्न सकिन्छ । भगवान् राम अवतारमा राजाका छोरा भएर आउनुभयो र उहाँ वालककालदेखि नै राजाको छोराका रूपमा रहनुभयो भने कृष्ण अवतारमा उहाँ राजाको छोरा भएर पनि जन्मनासाथ आफ्ना वास्तविक माता-पिता (राजा वसुदेव र महारानी देवकी) को आश्रमलाई छोडेर यशोदा माताको काखमा जानुभयो अनि अति पुण्यभूमि वृन्दावनलाई पवित्र गर्दै सामान्य ग्वालाका छोराको जस्तो अभिनय र लीला गर्नुभयो । त्यसैले, भगवान् रामभन्दा भगवान् श्रीकृष्ण धेरै कृपालु हुनुहुन्छ । उहाँ कुन्तीका भाइ वसुदेव र उहाँका परिवार प्रति ज्यादै नै कृपालु हुनुहुन्थ्यो । यदि भगवान्, वसुदेव र देवकीका पुत्रको रूपमा जन्म नलिनुभएको भए महारानी कुन्तीले भगवान्लाई आफ्नो भदा मानेर यति वात्सल्य पूर्वक सम्बोधन गर्दैनथिन् । तर, नन्द, यशोदा अझ धेरै भाग्यशाली हुन्, जसले भगवान्का अन्य लीलाभन्दा धेरै नै मनोहर यस बाललीलाको रसको स्वाद लिन पाए । व्रजभूमिमा भगवान्ले जुन बाललीला प्रदर्शन गर्नुभयो त्यससमान अन्य

कुनै लीला छैनन् किनभने ती लीला भगवान्ले कृष्णलोकमा गर्नुहुने शाश्वत लीलाका नै आदि रूप हुन्। ती कुराको वर्णन ब्रह्म संहितामा चिन्तामणि धामको रूप हो भनेर गरिएको छ । भगवान् श्रीकृष्ण व्रजभूमिमा आफ्ना सबै दिव्य पार्षदहरू र सामग्रीसहित अवतरित हुनुभएको थियो । त्यसैले, व्रजभूमिका वासिन्दा जति भाग्यशाली अरू कोही पनि छैनन् । त्यसमा पनि ती गोपीहरू अझ बढी भाग्यशाली छन् किनभने उनीहरूले भगवान्को सन्तुष्टिका लागि आफ्नो सर्वस्व समर्पण गरे । त्यो कुराको पुष्टि श्रीचैतन्य महाप्रभुले पनि गर्नुभएको छ । उहाँले नन्द, यशोदासँग, ग्वालाहरूसँग विशेष गरेर ग्वालाका बालकहरूसँग र गाईहरूसँग गर्नुभएका लीलाका कारण नै उहाँको नाम गोविन्द भएको हो । भगवान् श्रीकृष्णको गोविन्दरूप ब्राह्मण र गाईप्रति विशेष प्रेम र कृपा गर्ने रूप हो। त्यसैले, ब्राह्मण संस्कृति र गाईको रक्षा यी दुई कुरा सम्पन्न गर्नुमा नै मानव सम्पन्नता निर्भर भएको छ। जहाँ यी दुई कुराको अभाव हुन्छ, त्यहाँ भगवान् श्रीकृष्ण सन्तुष्ट वा प्रसन्न हुनुहुन्न ।

कुन्ती देवीले स्तुतिको प्रारम्भमा भनेकी थिइन् – **नमस्ये पुरुषं त्वाद्यमीश्वरं प्रकृतेः परम्** – "म त्यो पुरुषलाई नमस्कार गर्दछु जो **प्रकृतेः परम** अर्थात् प्रकृति वा भौतिक जगत् भन्दा पर हुनुहुन्छ।" यसरी कुन्तीदेवीले प्रारम्भमा नै भगवान् नै परम पुरुष हुनुहुन्छ र उहाँ निर्विशेष र निराकार हुनुहुन्न भनेर हामीलाई जानकारी दिइन्। उहाँ पुरुष नै हुनुहुन्छ तर उहाँ यस जगत् वा सृष्टिका पुरुष हुनुहुन्न । उहाँको शरीर पनि भौतिक शरीर होइन भनेर हामीले बुझ्नुपर्दछ। निर्विशेषवादीहरूको अल्पज्ञानले गर्दा उनीहरूले परब्रह्म कसरी पुरुष हुन सक्दछ भनेर भन्न नै सक्दैनन् किनभने उनीहरूले जहिले पनि पुरुषको बारेमा सोचे भने केवल यस भौतिक जगत्का पुरुषको बारेमा मात्र सोच्दछन् र त्यो नै तिनीहरूको दोष हो । भगवान् यस भौतिक जगत्का पुरुष किन हुनपर्दछ ? त्यसैले, कुन्तीदेवीले प्रारम्भमा नै भगवान् **'प्रकृतेः परम'** अर्थात् भगवान् यस जगत्भन्दा पर हुनुहुन्छ भनेर यो भ्रम हटाइदिएकी छिन् । भगवान् अदृश्य हुनुहुन्छ तर कुन्तीको कृपाले उहाँ अदृश्य भए पनि अहिले कृष्णरूपमा देखिनुभएको छ भनेर हामीले बुझ्न वा जान्न सकेका छौं ।

कुन्ती देवीले **'कृष्णाय वासुदेवाय'** भनेकी छिन। कहिलेकाहीँ वासुदेव शब्दको अर्थ "सर्वव्यापी" भनेर बुझिन्छ। निर्विशेषवादीहरूमा वासुदेवको यही (सर्वव्यापी) धारणा छ त्यसैले, कुन्ती देवीले "सर्वव्यापी वासुदेव नै भगवान् श्रीकृष्ण हुनुहुन्छ"

भनेर सङ्केत गरेकी छिन् । गीतामा भनिएको छ – **ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति** – परमेश्वर भगवान् श्रीकृष्ण प्रत्येकका हृदयमा विराजमान हुनुहुन्छ । त्यसैले, उहाँ सर्वव्यापक हुनुहुन्छ ।

आदि पुरुष भगवान् श्रीकृष्ण तीनरूपमा विराजमान हुनुहुन्छ – पहिलो परमेश्वर रूपमा, दोस्रो सर्वव्यापी परमात्मा रूपमा र तेस्रो निर्विशेष ब्रह्मज्योतिरूपमा । जुन व्यक्तिको इच्छा भक्तियोगतर्फ छ, ऊ ब्रह्मज्योतिमा इच्छा राख्दैन किनभने ब्रह्मज्योति भनेको सामान्य व्यक्तिहरूका लागि हो । यदि कोही सूर्यमा स्थित छ भने उसको इच्छा सूर्यको प्रकाशमा हुने कुरै भएन किनभने त्यो उसका लागि नगण्य नै हुन्छ । त्यसरी नै आध्यात्मिक जीवनमा अघि बढिसकेको व्यक्ति निर्विशेष ब्रह्मज्योतिप्रति इच्छा राख्ने गर्दैन, बरु उसले पुरुष, परम पुरुष भगवान् श्री वासुदेवप्रति नै इच्छा राख्दछ । भगवद्गीतामा भनिएको छ – **बहूनां जन्मनामन्ते** अर्थात् धेरैधेरै जन्मपश्चात् मात्र मानिसले परमपुरुषको अनुभूति गर्न सक्दछ । ज्ञानी वा निर्विशेषवादी ब्रह्मज्योतिप्रति आसक्त हुन्छन् । उनीहरूलाई आफ्नो ज्ञान अपूर्ण छ र परब्रह्म कृष्ण असीमित हुनुहुन्छ भन्ने जानकारी नै हुँदैन । हामी हाम्रो सीमित ज्ञानले असीमित भगवान्सम्म पुग्न नै सक्दैनौं । त्यो सम्भव नै छैन ।

**(कृष्णाय वासुदेवाय)** सर्वव्यापी परब्रह्म परमात्मा नै भगवान् श्रीकृष्णका रूपमा विराजमान हुनुहुन्छ भन्ने कुरा हामीले कुन्तीदेवी जस्ती भक्तका कृपाले बुझ्न सक्दछौं । तर भगवान् वासुदेवको यो अनुभूति निर्विशेषवादीहरूले भने यति सजिलै गर्न सक्दैनन् । भागवद्गीता (७.१९) मा भगवान् श्रीकृष्णले भन्नुहुन्छ –

**बहूना जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते ।**
**वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः ॥**

"धेरै-धेरै जन्मपछि जसले साँचो ज्ञान प्राप्त गर्दछ, उसले मलाई नै सबै कारणहरूको कारण भन्ने जानेर मेरो शरणमा पर्दछ तर त्यस्ता माहात्मा पाउन ज्यादै दुर्लभ हुन्छ ।" **'महात्मा'** भनेको उदार विचार भएको हो । जसले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैन, ऊ महात्मा हुन सक्दैन ऊ त कमजोर बुद्धिको हुन्छ । जसको विचार उदार छ, उसलाई भगवान् श्रीकृष्णले कृपा गर्नुहुन्छ । त्यसपछि उसले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दछ ।

भगवान् श्रीकृष्णलाई बुझ्ने जुन विधि छ, त्यसलाई **'सेवान्मुखे'** भनिन्छ ।

**सेवान्मुखे हि जिह्वादौ** – भगवान् श्रीवासुदेवको अनुभूति गर्ने विधि जिब्रोबाट प्रारम्भ हुने सेवा (जप कीर्तन) बाट सम्भव हुन्छ । जिब्रोका दुईवटा कार्य छन् – उच्चारण गर्नु र स्वाद लिनु । यदि कसैले बारम्बार हरे कृष्ण मन्त्र सुन्दछ र उच्चारण गर्दछ अनि भगवान् श्रीकृष्णलाई अर्पण गरेको प्रसादको स्वाद लिन्छ भने उसले यस विधिद्वारा भगवान् श्रीवासुदेव कृष्णको अनुभूति गर्न सक्दछ, भगवान् श्रीकृष्ण उसका अघि स्वयम् प्रकट हुनुहुन्छ । हामीले आफ्नै साधारण प्रयासले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनौं तर यदि हामीले प्रेम र भक्तिका लागि प्रयास गर्‍यौं भने र हामी त्यसमा योग्य भएपछि भगवान् श्रीकृष्ण स्वयम् प्रकट हुनुहुन्छ (**स्वयमेव स्फुरत्यदः**) ।

भगवान् श्रीकृष्ण हामीलाई भगवान्को धाममा फिर्ता लैजान ज्यादै उत्सुक हुनुहुन्छ तर हामी नै हठी छौं त्यसैले, जान चाहन्नौं । त्यसैले, उहाँ सधैं हामीलाई धाम फिर्ता लैजाने मौका मिलोस् भनेर अवसरको प्रतीक्षामा बस्नुहुन्छ । उहाँ एउटा वात्सल्यले युक्त पिता जस्तै हुनुहुन्छ । जब कुनै दुष्ट छोरो आफ्ना पितालाई छोडेर सडकमा खाना र आवास नपाएर भौंतारिरहेको हुन्छ, त्यससमय पितालाई उसले यस्तो कष्ट पाएको देखेर उसलाई घर फर्काउने उत्सुकता भइरहेको हुन्छ । त्यसरी नै, भगवान् श्रीकृष्ण सबैका परमपिता हुनुहुन्छ भने यस भौतिक संसारका सबै जीव धनी पिताका दिग्भ्रमित भएका सन्तान जस्तै घर छोडेर सडकमा भौंतारिएका छन् । त्यसैले, मानिसले आफ्नो साथी मानिसलाई सबैभन्दा ठुलो उपकार गर्न सक्दछ भने त्यो उसलाई कृष्णभावनामृत प्रदान गर्नु हो । जीवलाई कुनै पनि भौतिक लाभले सन्तुष्ट गर्न सक्दैन तर यदि उसलाई कृष्णभावनामृत प्रदान गरियो भने ऊ वास्तवमा पूर्ण सन्तुष्ट हुन्छ । मोहले भ्रमित भएर सडकमा भौंतारिरहेको वालकलाई स्मरण गराउँदै भन्न सकिन्छ, "हे बालक ! तिमी त धेरै धन सम्पत्ति भएका धनी मानिसका छोरा हौ । त्यसैले,, तिमीले यति धेरै कष्ट किन पाइरहेका छौ ? तिमी किन यसरी सडकमा भौंतारिएर हिंडिरहेका छौ ?" यस्तो भनेपछि यदि उसले बुझेर हो म धनी र महत्त्वपूर्ण व्यक्तिको छोरा हुँ, म किन सडकमा भौंतारिएर हिंडिरहेको छु ? भन्ने सोचे पछि अनि ऊ आफ्नो घर फर्कन्छ । त्यसैले, भगवान् श्रीकृष्णलाई भुलेका छन्, बिर्सेका छन् । "तिमीहरू भगवान् श्रीकृष्णका अंश हौ । तिमीहरू भगवान् श्रीकृष्णका छोरा हौ र उहाँ सम्पूर्ण सम्पत्तिले पूर्ण हुनुहुन्छ । त्यसैले, तिमीहरू यस भौतिक जगत्मा बसेर किन कुहिरहेका छौ ?" यसो भनेर उनीहरूलाई

सम्झाउनु नै सबैभन्दा उत्तम सेवा हो । माया वा भ्रम अत्यन्त शक्तिशाली हुन्छ तैपनि भगवान् श्रीकृष्णका भक्तको कर्तव्य नै हो, उसले प्रत्येक व्यक्तिलाई कृष्णचेतनाले प्रकाशित गर्ने प्रयास गर्नुपर्दछ । उदाहरणका लागि कुन्तीदेवीले प्रारम्भमा भनेकी थिइन्, हुनत परम पुरुष श्रीकृष्ण सबैका भित्र पनि र बाहिर पनि हुनुहुन्छ तर मूर्ख र दुष्टहरूले भने देख्न सक्दैनन् । त्यसैले, उनले भगवान् श्रीकृष्ण यहाँ हुनुहुन्छ भनेर सङ्केत गरेकी हुन् ।

कृष्ण सर्वव्यापक भगवान् हुनुहुन्छ (**कृष्णाय वासुदेवाय**) तर उहाँ देवकीका पुत्र बन्नुहुँदा अत्यन्त प्रसन्न हुनुहुन्छ (**देवकीनन्दनाय**) । देवकी नन्दनसम्बन्धी उल्लेख अथर्ववेदमा पनि भएको छ । जब भगवान् श्रीकृष्ण देवकीनन्दनका रूपमा आउनुहुन्छ त्ससमय उहाँको पिता नन्दगोपत्वानन्द महाराज हुने गर्नुहुन्छ । भगवान् श्रीकृष्णलाई आफ्ना भक्तहरू माता-पिता भएको राम्रो लाग्दछ । हुनत यस भौतिक जगत्मा हामीले भने परमेश्वरलाई पिता मानेर उहाँसँग सम्बन्ध स्थापित गर्न चाहन्छौँ तर भगवान् श्रीकृष्ण भने भक्तको पुत्र बन्दा हर्षको अनुभव गर्नुहुन्छ । त्यसैले, भक्तको पुत्र बन्न चाहनुहुन्छ । सामान्य व्यक्तिहरूले भगवान्लाई आफ्नो पिताका रूपमा चाहन्छन् तर भगवान् श्रीकृष्णलाई भने यसले प्रसन्नता हुँदैन किनभने जहिले पनि पुत्रले पितालाई "मलाई यो दिनुहोस्, त्यो दिनुहोस्" भनेर साँच्चै चिन्तित बनाइरहेको हुन्छ ।

निस्सन्देह भगवान् श्रीकृष्णसँग अति धेरै नाप्न नसकिने शक्ति छ, जसबाट उहाँले प्रत्येकले जे इच्छा गर्दछन्, त्यो प्रदान गर्न सक्नुहुन्छ । (**एको बहूनां यो विदधाति कामान्**) उहाँले हामीलाई भोजन दिनुहुन्छ, कमिलालाई पनि भोजन दिनुहुन्छ, भने मानिसलाई किन दिनु हुन्न र ? दुष्टहरूले भने यो बुझ्न सक्दैनन् । तर मानिसहरू भने रोटी प्राप्त गर्नका लागि दिन-रात काम गर्दछन् । उनीहरू चर्च गएर त्यहाँ पनि "मलाई रोटी दिनुहोस्" भनेर प्रार्थना गर्दछन्, उनीहरूको चिन्ताको विषय भनेको केवल रोटी मात्र हुन्छ ।

हुनत हामी अत्यन्त धनी र ऐश्वर्यले युक्त पुरुषका पुत्र हौँ, तैपनि व्यक्तिको अल्पज्ञानले गर्दा जहिले पनि ऊ रोटीको समस्याले त्रसित भइरहेको हुन्छ । उसले सोच्दछ, "यदि मैले रोटीको समस्यालाई निराकरण गरिनँ भने, मैले रातदिन ट्रक चलाइन वा कमाई गरिन भनें म कसरी बाच्न सक्दछु ?" यो विचार नै हाम्रो आधुनिक सभ्यताको मूर्खता हो । रोटीको समस्या कहाँ छ ? भगवान् श्रीकृष्णले असीमित सङ्ख्यामा रोटी दिन सक्नुहुन्छ । अफ्रिकामा हजारौं हात्तीहरू

छन् । ती सबैलाई भगवान् श्रीकृष्णले भोजन प्रदान गरिरहनु भएको छ । यदि उहाँले हात्तीलाई भोजन प्रदान गर्नुहुन्छ भने मानिसलाई किन प्रदान गर्नु हुन्न ? त्यसैले, भागवत्मा भनिएको छ – "केवल रोटीको समस्याका लागि आफ्नो समय व्यर्थमा नष्ट नगर ।"

**तस्यैव हेतोः प्रयतेत कोविदो ।**
**न लभ्यते यद् भ्रमतामुपर्यधः ॥**

हामीले आर्थिक समस्याको निराकरण गर्नका लागि आफ्नो समय नष्ट गर्नुहुँदैन किनभने आर्थिक विकास निरर्थक नै छ । हुनत यो प्रस्ताव क्रान्तिकारी छ । यसो भन्यो भनेर मानिसले मलाई घृणा पनि गर्लान्- "किन स्वामीजीले यस्तो भन्नुभएको हो ?" भनेर मलाई सोध्न पनि सक्दछन् तर वास्तवमा यो यथार्थ नै हो । यो आर्थिक विकास भनेको एकप्रकारको पागलपन नै हो । यदि कसैले पिता धनी व्यक्ति छ, ऊसँग प्रशस्त अन्न छ र उसले "मेरा पिता सहरका सबैभन्दा धनी व्यक्ति हुनुहुन्छ" भनेर जान्दछ, त्यहाँ कहाँ आर्थिक समस्या पर्दछ र ? वास्तवमा हाम्रो स्थिति पनि त्यस्तै छ । हामीलाई कुनै आर्थिक समस्या छैन । हामीलाई आवश्यक सबै वस्तु पूर्णरूपले प्रदान गरिएको छ । यदि हामीलाई पानी आवश्यक भए पानीका सागरहरू छन् । तर हामीलाई पिउन शुद्ध पानी चाहिन्छ । हुनत सागरमा प्रशस्त पानी छ तर त्यो पिउन योग्य छैन । त्यसैले, जब पानीको आवश्यकता पर्दछ, हामीले भगवान् श्रीकृष्णको सहयोग लिनुपर्दछ । उहाँले सागरको पानीलाई बाफ बनाएर बादलमा परिणत गरिदिनुहुन्छ, अनि त्यसले पानी पारेर तल झार्दछ र त्यो पानी पिउन मीठो हुन्छ । अन्यथा, हामीले पानी पिउन सक्दैनौं ।

प्रत्येक वस्तु भगवान्को नियन्त्रणमा छन् । प्रत्येक वस्तु जस्तैः– पानी, प्रकाश, ताप आदि सबै आवश्यकताअनुसार पूर्ण छन् ।

**ॐ पूर्णमदः पूर्णमिदं पूर्णात् पूर्णमुदच्यते ।**
**पूर्णस्य पूर्णमादाय पूर्णमेवावशिष्यते ॥**

"भगवान् पूर्ण हुनुहुन्छ, पूर्ण भएका हुनाले उहाँबाट उत्पन्न हुने सबै वस्तु जस्तै यो कारणस्वरूप जगत् पनि उहाँको पूर्णरूप नै हो । पूर्णबाट उत्पन्न सबै वस्तु आफैंमा पूर्ण नै हुन्छन् । भगवान् पूर्ण हुनुहुन्छ । त्यसैले, उहाँबाट उत्पन्न भएका प्रत्येक इकाई पनि पूर्ण नै रहिरहन्छन् र बाँकी पनि पूर्ण नै रहिरहन्छ ।"

(ईशोपनिषद्) भगवान् श्रीकृष्णको भण्डार कहिल्यै पनि खाली हुँदैन । हामीले केवल भगवान्का आज्ञाको पालना गर्नुपर्दछ अनि हामीलाई प्रत्येक वस्तु प्राप्त हुन्छ । त्यसैले, कृष्णचेतनाले युक्त व्यक्तिका लागि कुनै पनि आर्थिक समस्या पर्दैन । भगवान् श्रीकृष्णले उसलाई आवश्यक प्रत्येक वस्तु पर्याप्त मात्रामा प्रदान गरिदिनुहुन्छ । लसएन्जल्सको हाम्रो मन्दिरका छिमेकीहरूले कहिलेकाहीँ हाम्रो ईर्ष्या गर्दै हाम्रा भक्तहरूलाई भन्दथे – "तिमीहरू केही काम पनि गर्दैनौ । तिमीहरूलाई कुनै चिन्ता पनि छैन । तिमीहरूसँग चारवटा गाडी पनि छन् । तिमीहरू असल भोजन गर्दछौ । यो सबै कसरी सम्भव भयो ?" वास्तवमा तिनीहरूले ठीक भनेका छन् । भगवान् श्रीकृष्णप्रति निष्ठा राखेर उहाँको दास भएपछि हामीले हाम्रा आवश्यकताका वस्तुहरू कुनै न कुनै उपायले प्राप्त गरिरहेका छौं । हामीलाई कुनै समस्या नै परेको छैन । उनीहरूले ईर्ष्या गरेको ठीकै हो किनभने हामीहरू केही कार्य गर्दैनौं तैपनि आवश्यक वस्तु प्रशस्त छन् । त्यसो हो भने उनीहरू हामीसँग किन आउँदैनन् ? उनीहरू त्यसो गर्न सक्दैनन् । "हामीसँग आऊ अनि हरे कृष्ण मन्त्र जप" भनेर हामी भन्दछौं तर उनीहरू भने "हुँदैन म त्यसो गर्न सक्दिन" भन्दछन् । ठीकै छ त्यसो हो भने तिमी आफ्नो ट्रक नै चलाऊ । मानिसहरू आफ्नै कार वा ट्रकसँग बाँधिएर आफ्नो जीवन पनि सङ्कटमय बनाएका छन् र अरूको जीवनमा पनि सङ्कट ल्याएका छन् । त्यसैले, कुनै पनि समय दुर्घटना हुन सक्दछ । तर, उनीहरू भने यो सभ्यता हो भन्दछन् । मूर्खतापूर्ण कुरा हो र यो सभ्यता नै होइन । सभ्यताको अर्थ शान्ति र सम्पन्नता हो । अनि शान्ति र सम्पन्नतासहित मानिस सधैं कृष्णचेतनाले युक्त पनि हुनपर्दछ ।

मानिसहरू थोरै भोजनका लागि दिन-रात कठोर परिश्रम गर्दछन् । उनीहरूलाई उसको भोजनको व्यवस्था पहिला नै भैइसकेको छ भन्ने जानकारी नै छैन । **अविद्या कर्मसंज्ञान्या तृतीया शक्तिरिष्यते** (विष्णुपुराण ६.७.६१) । यो भौतिक जगत् अविद्या वा अज्ञानताले पूर्ण छ । त्यसैले, हाम्रो प्रयास यस अविद्याबाट छुट्कारा पाउने हुनपर्दछ । त्यसैले, हाम्रा कार्यहरू यस अविद्याबाट छुटकारा पाउने किसिमका हुनुपर्दछन् । यदि हामीले "म यो शरीर हुँ, मैले रातदिन काम गर्नुपर्दछ अनि मात्र मैले भोजन प्राप्त गर्न सक्दछु र म जीवित रहन सक्दछु" भनेर सोच्नु नै अविद्या वा अज्ञानता हो । हामीले यस्तो अज्ञानता सहितको जीवन मानव जीवनबाहेक अन्य जीवनमा पनि बिताइरहेका छौं । अहिले हामीले पक्षीको, पशुको तथा अन्य जीवको जीवन बिताइसकेका छौं ।

यस मानव जीवनमा हामी सुख शान्तिसँग बाँच्नुपर्दछ अनि एक मात्र परब्रह्मका विषयमा जिज्ञासा राख्नुपर्दछ (**जीवस्य तत्त्वजिज्ञासा, अथातो ब्रह्म जिज्ञासा**) र मानिसमा यो मात्र कार्य हुनपर्दछ ।

हामीहरू बसेर केवल भगवान् श्रीकृष्णका विषयमा जिज्ञासा गरिरहन्छौं । मानिसले यही कार्य गर्नुपर्दछ र यो नै मानव जीवन हो । मानिसले दिनरात गधाले जस्तै किन काम गर्नुपर्‍यो ? यो कस्तो जीवन हो ? यो जीवन नै होइन । त्यसैले, भगवान्‌ले बुद्धिमान् (कोविद) लाई भन्नुहुन्छ – "तिम्रो जीवन केवल परब्रह्मलाई बुझ्ने उद्देश्यका लागि लगाउ ।" त्यसो हो भने मेरो आर्थिक समस्या कसरी समाधान हुन्छ ? भन्ने प्रश्न उठ्न सक्दछ । आर्थिक विकासबाट जुन सुखको कामना गरिएको छ, त्यो समयको साथसाथै आफैं स्वतः पुरा हुन्छ भन्ने त्यस प्रश्नको उत्तर हो । **तल्लभ्यते दुःखवेदन्यत** (भागवत् १.५.१८) । हामीहरू सुखको खोजीमा छौं । के तिमी दुःखको खोजीमा छौ ? अहँ म दुःखको खोजीमा छैन । त्यसो हो भने तिमीलाई दुःख किन परिरहन्छ ? यदि तिमी दुःख र विपत्तिप्रति उत्सुक छैनौ, ती नआए हुन्थ्यो भन्छौ भने पनि किन ती तिमीमाथि नै आइरहन्छन् ? हाम्रा कर्मअनुसार हाम्रो जीवनमा केही अंश सुखको र केही अंश दुःखको हुने गर्दछ । त्यसैले, दुःख पनि विना कुनै निमन्त्रणा आउँदछ र सुख पनि विना कुनै निमन्त्रणा आउने गर्दछ ।

हाम्रो भाग्यमा केही सुख र केही दुःख निश्चित रहेको छ । त्यसलाई हामीले परिवर्तन गर्न सक्दैनौं । हामीले परिवर्तन गर्न सक्ने भनेको यस भौतिक जीवनबाट छुट्कारा पाउनु मात्र हो । त्यसैले, हाम्रो एक मात्र कार्य यही हुनपर्दछ । हामी हाम्रो कर्म अनुसार कहिले उच्चस्तरको लोकमा देवता भएर जन्मन्छौं भने कहिले कुकुर, बिरालो वा दिशा खाने सुँगुर वा दिसाको किरा भएर जन्मन्छौं । त्यसैले, चैतन्य महाप्रभुले भन्नुभएको छ –

**एइ रूपे ब्रह्माण्ड भ्रमिते कोन भाग्यवान् जीव ।**
**गुरु-कृष्ण-प्रसादे पाय भक्त-लता-बीज ॥**

जीवहरू आफ्ना कर्मअनुसार सम्पूर्ण ब्रह्माण्डमा घुमिरहन्छन् । कहिले माथिल्लो स्तरको लोकमा पुग्दछन् भने कहिले तल्लो स्तरको लोकमा पुग्दछन् । यसरी करोडौं पटकको भ्रमण वा घुमाइपछि जुन अत्यन्त भाग्यशाली छ, उसले भगवान् श्रीकृष्णको कृपा पाएर प्रामाणिक गुरुको सङ्गत प्राप्त गर्ने अवसर

पाउँदछ । अनि भगवान् श्रीकृष्ण र गुरु दुवैको कृपा पाएर उसले भक्तिरूपी लताको बीज प्राप्त गर्दछ (श्री चैतन्य चरितामृत, मध्य १९.१५१) । केवल भाग्यशाली जीवले मात्र भगवान् श्रीकृष्ण र उहाँका भक्तहरूसँगको समागम प्राप्त गर्दछ अनि मात्र उसले भक्तिको बीज अर्थात् हरे कृष्ण मन्त्र जप्ने मौका पाउँदछ । त्यसपछि उसको जीवन उत्कृष्ट वा अलौकिक बन्दछ ।

त्यसैले, कुन्ती देवीले हाम्रो ध्यान परम पुरुष भगवान् श्रीकृष्णतर्फ लक्षित गर्दैछिन् । जो अलक्ष्य वा कसैले नदेखिने हुन्छ । त्यस्ता अलक्ष्य पुरुष को हो ? कसैले उहाँ त कृष्ण हुनुहुन्छ भन्लान् । कसैले कृष्ण त धेरै छन् भन्लान् । त्यसैले, कुन्ती देवीले भन्दछिन् – "होइन, मैले त वसुदेवका छोरा भगवान् श्रीवासुदेवको प्रार्थना गरिरहेकी छु ।" फेरि कसैले भन्ला वासुदेव पनि धेरै छन् । कुन्ती भन्दछिन्, होइन – **नन्दगोपकुमाराय** – "मैले त महाराज नन्दले पाल्नु भएको छोराको प्रार्थना स्तुति गरेकी छु ।" यसरी उनले तीन पटकसम्म भगवान् श्रीकृष्ण यहाँ हुनुहुन्छ वा उहाँ हुनुहुन्छ भनेर सङ्केत गरेकी छिन् ।

भगवान् श्रीकृष्ण आधिकारिकरूपमा देवकी र वसुदेवका छोरा भएर जन्मनुभयो तर उहाँले बाल्यकालको मजा वा सुख भने यशोदा र नन्द महाराजकहाँ लीला गर्दै लिनुभयो यो नै भगवान् श्रीकृष्णको लीला हो । **आनन्दलीलामय विग्रहाय**– भगवान् श्रीकृष्णका सबै लीलाहरू आनन्दमय छन् । **आनन्दमयोऽभ्यासात्** (वेदान्त सूत्र १.१.१२) उहाँ स्वभावले नै आनन्दमय हुनुहुन्छ । हामीले भगवान् श्रीकृष्णलाई कहिल्यै पनि अप्रसन्न भएको देख्दैनौं उहाँ सधैं प्रसन्न हुनुहुन्छ र उहाँको सङ्गत गर्नेहरू पनि सधैं प्रसन्न हुन्छन् । त्यसैले, उहाँलाई गोविन्द पनि भनिन्छ । 'गो' को अर्थ "इन्द्रियहरू" हामीहरू सबै इन्द्रियतृप्तिको मौका खोजिरहेका हुन्छौं यदि हामीले भगवान् श्रीकृष्णको सङ्गत गर्‍यौं भने जसरी भगवान् श्रीकृष्णसँग नाचेका गोपीहरूले आनन्द लिएका थिए, त्यसरी नै हामीले पनि हाम्रा इन्द्रियहरूबाट पूर्ण आनन्द प्राप्त गर्न सक्दछौं । यसो गर्‍यौं भने हाम्रो इन्द्रियतृप्ति गर्न गरिने कार्यमा कहिल्यै पनि कमी हुँदैन र यसरी भगवान् श्रीकृष्णसँगको सङ्गतमा गरिएको इन्द्रियतृप्ति स्थूल इन्द्रियतृप्ति वा शरीरद्वारा गरिने इन्द्रियतृप्ति नभएर आध्यात्मिक जगत्मा भोग गरिने आध्यात्मिक इन्द्रियतृप्ति हुन्छ । **आनन्दचिन्मयसदुज्ज्वल विग्रहस्य** – यस्तो आनन्द हाम्रा शरीरले भोग गर्ने जस्तो तल्लो स्तरको हुँदैन । यस्तो शरीरद्वारा भोगिने आनन्द आनन्द नभएर मोह वा भ्रम मात्र हुन्छ । "मैले भोग गरिरहेको

छु" भनेर जुन हामीले सोच्दछौं, वास्तवमा त्यो आनन्द नै होइन किनभने भौतिक इन्द्रियबाट प्राप्त हुने आनन्द लामो समय रहँदैन वा स्थायी हुँदैन । सबैले अनुभव गरेकै हो भौतिक आनन्दको अन्त्य निश्चित छ तर आध्यात्मिक आनन्दको अन्त्य कहिल्यै पनि हुँदैन । बरु त्यसको वृद्धि भइरहन्छ । यी दुईमा यही अन्तर छ । **आनन्दचिन्मयसदुज्ज्वलविग्रहस्य गोविन्दमादिपुरुषं तमहं भजामि** (ब्रह्म संहिता ५.३२) त्यसैले, हामीले भगवान् श्री गोविन्दको सङ्गत गर्नुपर्दछ ।

यहाँ **'गोविन्दाय नमो नमः'** पनि भनिएको छ अर्थात् म भगवान् श्री गोविन्दलाई नमस्कार गर्दछु । कृष्णभावनामृत आन्दोलन यति उत्कृष्ट छ, यसले सीधा भगवान् श्रीगोविन्दको सम्पर्कमा पुऱ्याइदिन्छ । त्यसै गरेर, मन्दिरमा भगवान् श्रीकृष्णको अर्चाविग्रहको पूजासेवा गरेको पनि सीधा भगवान् श्रीगोविन्दसँग सम्पर्क नै हो । **श्रीविग्रहाराधननित्यनाना–श्रृंगारतन्मन्दिरमार्जनादौ** (श्रीगुर्वाष्टक ३) विग्रह भनेको भगवान् श्रीकृष्णको अर्चाविग्रह हो, जुन भगवान् श्रीकृष्णका कृपाले प्रकट हुन्छ । वास्तवमा भगवान् श्रीकृष्ण अलक्ष्य वा नदेखिने हुनुहुन्छ तर हामीलाई दर्शन दिनका लागि उहाँ देखिने गर्नुहुन्छ । हुनत भगवान् श्रीकृष्ण ढुङ्गा, धातु वा काठका हुनुहुन्न । भगवान् श्रीकृष्ण सधैं भगवान् श्रीकृष्ण नै हुनुहुन्छ तर हामीले भने काठ, धातु र ढुङ्गाजस्ता भौतिक वस्तुभन्दा परको देख्न नसक्ने हुनाले भगवान् यिनै तत्त्वले बनेको रूपमा प्रकट हुने गर्नुहुन्छ । तर, उहाँ काठ, ढुङ्गा र धातुले बन्नुभएको होइन । जब हामी अर्चाविग्रहसँगको सङ्गत गर्दछौं अनि हामीले साक्षात् वा व्यक्तिगतरूपले भगवान् श्रीकृष्णको सङ्गत गर्दछौं । हुनत भगवान् श्रीकृष्ण अलक्ष्य वा नदेखिने हुनुहुन्छ तर उहाँले हामीलाई कृपा गर्दै हामीले देख्न सक्ने रूप धारण गर्नुहुन्छ र त्यो नै कृष्ण कृपा हो । "अहो यो ढुङ्गारूपी कृष्ण हो ।" तिमीले यस्तो सोच्नुहुँदैन । हुनत भगवान् श्रीकृष्ण सबै वस्तु हुनुहुन्छ त्यसैले, उहाँ ढुङ्गा पनि हुनुहुन्छ तर, उहाँ कुनै पनि कार्य नगर्ने ढुङ्गा भने हुनुहुन्न । उहाँले ढुङ्गा वा धातु जुनरूपमा भए पनि भगवान् श्रीकृष्णकै जस्तो कार्य गर्नुहुन्छ अनि जसले त्यस्तो अर्चाविग्रहको पूजासेवा गर्दछ उसले त्यस कुराको अनुभव गर्दछ । **स्वयमेव स्फुरत्यदः** – बाहिरबाट ढुङ्गाजस्तो देखिने अर्चाविग्रहले आफ्ना भक्तसँग कुरा गर्न सक्दछ । यस्ता धेरै दृष्टान्त छन् वा यस्ता धेरै घटनाहरू भएका छन् ।

जब मेरा शिष्यहरूले अर्चाविग्रहलाई सुन्दर वस्त्र लगाइदिन्छन्, स्वादिष्ट भोजन अर्पण गर्दछन् र मन्दिर ज्यादै सफा राख्दछन् अनि म ज्यादै प्रसन्न हुन्छु ।

**'श्रीमन्दिर मार्जनादौ'** – मार्जनको अर्थ सफा गर्नु हो । कसैले भगवान् श्रीकृष्णलाई सुन्दर वस्त्र लगाइदिओस् वा कसैले मन्दिर सफा गरोस् । यी जुन पनि कार्यबाट प्राप्त हुने आध्यात्मिक लाभ एक समान हुन्छ । त्यसैले, "म केवल सफाई गर्ने मात्र हुँ र ऊ भने वस्त्र लगाइदिने हो" भनेर कहिल्यै पनि नसोच्नु । मन्दिरको सफाइ गर्ने र अर्चाविग्रहलाई सुन्दर वस्त्र लगाउने व्यक्ति समान हुन्छन् किनभने मानिसले आफूलाई भगवान् श्रीकृष्णको जुनसुकै प्रकारको भएपनि सेवामा लगाउनुपर्दछ अनि मात्र उसको जीवन सफल हुन्छ र यो नै कृष्णचेतना वा कृष्णभावनामृत आन्दोलन हो ।

कुन्तीदेवीको कृपाले गर्दा हामीले भगवान् श्रीवासुदेव कृष्ण भगवान् हुनुहुन्छ भनेर जान्न सक्यौं । वासुदेव शब्दले यस्तो सङ्केत गर्दछ, जब मानिस पूर्ण शुद्धता र सत्त्वको स्थितिमा पुग्दछ अनि उसले भगवान्लाई जान्न र बुझ्न सक्दछ । त्यसलाई नै वसुदेव वा विशुद्ध तत्त्व पनि भनिन्छ । **सत्त्वम् विशुद्धं वसुदेव शब्दितम्** (भागवत् ४.३.२३) । भगवान्लाई बुझ्नका लागि हामी पहिला सत्त्व पदको स्थितिमा पुग्नुपर्दछ तर कहिलेकाहीँ यस भौतिक जगत्मा त्यस सत्त्वलाई तल्लोस्तरको रज र तम गुणले दूषित गरिदिन्छ । तर, भगवान् श्रीकृष्णका बारेमा श्रवण गरेपछि मानिसले शुद्धसत्त्वको स्थिति प्राप्त गर्न सक्दछ । **श्रृंण्वतां स्वकथाः कृष्णः पुण्यश्रवणकीर्तनः** । त्यसैले, हामीले सधैँ र चौबीस घण्टा नै भगवान् श्रीकृष्णका बारेमा सुन्ने र उहाँका नामको जप गर्ने प्रयास गर्नुपर्दछ । त्यसो गरेमा हाम्रो हृदयको मैलो सफा गर्न सकिनेछ । त्यसको अर्थ मानिस सात दिनसम्म वाचन गरिने भागवत् सप्ताहमा उपस्थित हुनु वा सम्मिलित हुनु भनेको होइन किनभने यो पनि एक प्रकारको शोषण वा दुरूपयोग हो । भागवत्मा भनिएको छ – **नष्ट प्रायेष्वभद्रेषु नित्यं भागवतसेवया** – **नित्यं** को अर्थ दिनहुँ वा चौबीस घण्टा हो । त्यसैले, मानिसले निरन्तर र दिनहुँ भागवत् पढ्नुपर्दछ र आफ्ना आध्यात्मिक गुरुको आदेशको पालना गर्नुपर्दछ । भागवत् शब्दले गुरु र श्रीमद्भागवत् दुवैलाई सम्बोधन गर्दछ । त्यसैले, मानिसले सधैं भागवत्रूपी व्यक्ति र भागवत्रूपी ग्रन्थ दुवैको सेवा गर्नुपर्दछ । **भगवत्युत्तमश्लोके भक्तिर्भवति नैष्ठिकी** – त्यसपछि मानिस विनाहलचल स्थिर (नैष्ठिकी) भएर भगवान्को भक्तिमा लाग्दछ ।

यसरी, जुन आध्यात्मिक विधिको निर्देशन गरिएको छ, त्यसद्वारा कृष्णभावनामृत आन्दोलनबाट प्राप्त लाभको अनुभव गर्दै यस लाभलाई अन्य

व्यक्तिहरूमा पनि वितरण गर्ने प्रयास गर्नुपर्दछ। अन्य व्यक्तिमा सुषुप्त अवस्थामा रहेको कृष्णचेतनालाई जागृत गर्नु नै यस जगत्मा सबैभन्दा ठुलो कल्याणको कार्य हो। चारपाँच वर्षअघि जुन व्यक्तिमा कृष्णचेतना थिएन ती भक्तको चेतना जागृत भएर अहिले उनीहरू कृष्णचेतनाले युक्त छन्। त्यसैगरेर, अन्य व्यक्तिको चेतना पनि जागृत हुन सक्दछ। त्यसमा कुनै समस्या छैन र विधि सबैलाई एउटै र समान हो। कुन्ती जस्ती भक्तिनीका पदचिन्हको अनुसरण गरेर हामीले पनि भगवान्को परिचयलाई बुझ्न सक्नेछौं। उदाहरणका लागि – हामीले कुनै व्यक्तिलाई परिचयका लागि "तिम्रा पिताको नाम के हो ?" भनेर सोध्दछौं। श्रीमद्भागवत्ले भगवान्का पिताको नाम, आमाको नाम र उहाँको ठेगानाका बारेमा जानकारी दिएको छ। हामी निर्विशेषवादी होइनौं जसलाई भगवान्को बारेमा स्पष्ट जानकारी नै छैन। यदि कसैले कृष्णचेतना वा कृष्णभावनामृत आन्दोलनको लाभ लिन सक्दछ भने उसले भगवान्का बारेमा स्पष्टसँग र पूर्ण तरिकाले बुझ्न सक्दछ।

***

# ५. कमलको दृश्य

**नमः पंकजनाभाय नमः पंकजमालिने ।**
**नमः पंकजनेत्राय नमस्ते पंकजाङ्घ्रये ॥**

जसको नाभी कमलको फूलजस्तै छ, जसले सधैँ कमलको फूलको माला धारण गर्नुहुन्छ, जसको आँखा कमलको फूलजस्तो शीतल छ र जसका पैतालामा कमल अङ्कित छ त्यस्ता भगवान्लाई म सादर नमस्कार गर्दछु ।

**–(श्रीमद्भागवत् १.८.२२)**

भगवान्को दिव्य शरीरमा केही विशिष्ट चिन्हहरू हुन्छन्, जुन यहाँ दिइएको छ जसले गर्दा भगवान्को शरीर अन्य व्यक्तिको शरीर भन्दा भिन्दै हुन्छ । यी भगवान्का शरीरका विशेष चिन्हहरू हुन् । भगवान् हामी जस्तै देखिए पनि उहाँका शारीरिक लक्षणका कारण हामीभन्दा सधैँ भिन्न देखिनुहुन्छ । श्रीमती कुन्तीले भने आफू स्त्री भएको हुनाले आफूलाई भगवान्को दर्शन गर्न असक्षम भएको दाबी गर्दछिन् । स्त्री, शूद्र र द्विजबन्धु (तीन द्विज जातिका दुष्ट सन्तान) हरूले भने आफ्नो असक्षम बुद्धिको कारणले गर्दा दर्शन गर्न सक्दैनन् भन्ने दाबी गरिन्छ वा भनिन्छ । हुनत यस्ता व्यक्तिहरू भगवान्का आध्यात्मिक क्रियाकलाप वा लीलाहरूमा प्रवेश पाउन सक्षम हुँदैनन् तर माथि भनिएका स्त्री, शूद्र र द्विजबन्धु र अन्य पतित आत्माहरूलाई अनुग्रह गर्नका लागि भगवान्ले अर्चाविग्रहको रूपमा अवतरित भएर उनीहरूलाई दर्शन दिनुहुन्छ । यस्ता पतित आत्माले पदार्थभन्दा पर केही देख्न नसक्ने हुनाले भगवान् उनीहरूका लागि आफ्नो पेटको बीचमा राम्रो गहिरो नाभीबाट कमलको डाँठ उत्पन्न गरेर त्यसमा ब्रह्माण्डको प्रथम जीवस्वरूप ब्रह्मालाई जन्म दिने भएर असङ्ख्य ब्रह्माण्डमा प्रवेश गरेर गर्भोदशायी विष्णुको रूपमा दर्शन दिनुहुन्छ । त्यसैले, भगवान्लाई पङ्कजनाभी भनिन्छ । यस्ता पङ्कजनाभी भगवान्ले विभिन्न तत्त्वले बनेको अर्चाविग्रह जस्तै – मानसिक रूप, काठले बनेको रूप, माटोले बनेको रूप,

धातुले बनेको रूप, रत्नले बनेको रूप, रङ्गले बनेको चित्रको रूप र बालुवाले बनेको रूपलाई स्वीकार गर्नुहुन्छ। भगवान्का यी सबै रूपलाई कमलको मालाले सजाइएको हुन्छ। त्यस्ता अर्चाविग्रहको पूजासेवा गरिने मन्दिरमा यस्तो शान्त वातावरण बनाइएको हुनपर्दछ, जसले गर्दा भौतिक कार्यमा लागिरहेका अभक्तहरूलाई आकर्षित गर्न सकियोस्। ध्यानीहरूले भगवान्को पूजा आफ्नो मनभित्र नै गर्दछन्। त्यसैले,, यदि स्त्री, शूद्र र द्विजबन्धुहरू मन्दिर जान स्वीकार गर्दै त्यहाँ गएर भगवान्का विभिन्नरूपको पूजा गरे भगवान् तिनीहरूप्रति पनि कृपालु बन्नुहुन्छ। तर त्यस्ता मन्दिर जानेहरू मूर्ति पूजा गर्ने हुँदैनन्। तर, अल्पज्ञहरूले भने तिनीहरू मूर्ति पूजा गर्ने हुन् भनेर त्यसको समर्थन गर्दछन्। ठूलाठूला आचार्यहरूले अल्पज्ञहरू प्रति दया गर्नका लागि धेरै ठाउँमा मन्दिरमा पूजा गर्ने व्यवस्थाको स्थापना गरिदिनुभएको छ। त्यसैले, कसैले पनि आफूले मन्दिर पूजाको अवस्थालाई पार गरेको छु भनेर देखाउन हुँदैन किनभने वास्तवमा ऊ शूद्र, स्त्री वा त्योभन्दा निम्न स्तरमा रहेको हुन्छ। मानिसले भगवान्को दर्शन गर्दा सर्वप्रथम उहाँको चरण कमलको दर्शन गर्दै त्यसपछि बिस्तारै माथि तिर, जस्तै जाँघ, कम्मर, वक्षस्थल र अनुहारको दर्शन गर्नुपर्दछ। मानिसले भगवान्को चरणकमलको दर्शन गर्ने अभ्यास नगरी भगवान्को अनुहारको दर्शन गर्ने प्रयास गर्नुहुँदैन। हुनत श्रीमती कुन्ती भगवान्की फुपू हुन् तर पनि उनले भगवान्का चरणकमलको दर्शनबाट प्रारम्भ गरिनन् किनभने यसो गर्दा भगवान्ले लाज मान्न सक्नुहुन्थ्यो। त्यसैले, कुन्तीदेवीले भगवान्लाई त्यो अप्ठ्यारो स्थिति नआओस भनेर भगवान्का चरणकमलभन्दा माथिल्लो भाग, जस्तै भगवान्को जाँघको दर्शनबाट सुरु गरेर विस्तारै अनुहारको दर्शन गरेर फेरि पुनः तल चरणको दर्शन गरिन् किनभने गोलो घेरामा प्रत्येक वस्तु क्रममा नै भएको हुन्छ।

यदि कसैले वच्चालाई प्रेम गर्दछ र उसले त्यस वच्चाका वस्त्र, जुत्ता, खेलौना देख्दछ भने उसले तुरुन्त आफ्नो बच्चालाई सम्झन्छ अनि भन्दछ "अहो ! यो मेरो वच्चाको जुत्ता हो, उसको खेलौना हो र उसको वस्त्र हो।" त्यसरी यदि कसैले कमलको फूल देख्यो भने उसले तुरुन्त भगवान् श्रीकृष्णको स्मरण गर्दछ किनभने यो प्रेमको स्वभाव नै हो। यदि कसैले भगवान् श्रीकृष्णलाई वास्तवमा प्रेम गर्दछ भने उसले भगवान् श्रीकृष्णलाई सधैं स्मरण गरिरहन सक्दछ। भगवान् श्रीकृष्णको स्मरण गर्न कठिन छैन। यहाँ कुन्तीदेवीले भगवान् श्रीकृष्णको वर्णन कमलको फूलसँग सम्बद्ध गरेर गरेकी छिन्। त्यसैगरेर भगवान्

श्रीकृष्णले भगवद्गीतामा आफ्नो बारेमा वर्णन गर्दै भन्नुभएको छ – **रसोऽहमप्सु कौन्तेय** – "म तरल पदार्थको स्वाद हुँ ।" त्यसैले, कसैले पानी पिउँदै त्यसको स्वाद लिंदा पनि भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दछ । यदि कसैले रक्सी पिउँदा पनि "यो रक्सीको स्वाद पनि भगवान् श्रीकृष्ण हुनुहुन्छ" भनेर सोच्दछ भने कुनै दिन ऊ महान् सन्त बन्न सक्दछ । त्यसैले, मैले रक्सी पिउनेहरूलाई पनि कृष्णचेतनाले युक्त बन भनेर अनुरोध गर्दछु भने अन्य व्यक्तिका बारेमा के भन्नु किनभने भगवान् श्रीकृष्णले भन्नुभएको छ – **रसोऽहमप्सु कौन्तेय** – "म तरल पदार्थको स्वाद हुँ ।" साधारणतया तरल भन्नाले पानीलाई बुझ्ने गरिन्छ तर रक्सी पनि तरल नै हुन्छ । केवल त्यो चिनी र चिनी बनाउँदा उखुबाट निस्केको सार (मोलासेस) र अन्य त्यसलाई कुहाउन प्रयोग हुने वस्तु हुन्छ । ती सबै मिसाइएर त्यसलाई उमालिन्छ । तर यसले मानिसलाई प्रयोगपश्चात् मत्त गराउँदछ त्यसैले, त्यो खराब नै हो । हुनत कुनै विचारबाट कुनै पनि वस्तु खराब हुँदैन भन्ने पनि छ तर रक्सी भने खराब हो र यसले नराम्रो असर देखाउँदछ । यहाँ अमेरिकामा यस्तै धेरै रक्सी पिउने व्यक्ति छन् र त्यस्ताको कमी पनि छैन । तर, मैले उनीहरूलाई अनुरोध गर्दछु "कृपया रक्सी पिउँदा पनि त्यसको स्वादमा भगवान् श्रीकृष्ण हुनुहुन्छ भन्ने ठानेर पिउनुहोस् । यसरी सुरुवात गर्नुभयो भने कुनै न कुनै दिन तपाईं कृष्णचेतनाले युक्त बनेर सन्त बन्न सक्नुहुन्छ ।"

त्यसैले, भगवान् श्रीकृष्ण जुनसुकै परिस्थितिमा पनि प्राप्त हुनुहुन्छ तर उहाँलाई समात्ने हाम्रो इच्छा हुनुपर्दछ । भगवान् श्रीकृष्ण भगवद्गीतामा (१०.१०) मा भन्नुहुन्छ –

**तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम् ।**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ॥**

"जुन व्यक्ति निरन्तर र प्रेमपूर्वक मेरो सेवामा लागिरहन्छ, उसलाई म ज्ञान प्रदान गर्दछु अनि त्यस ज्ञानद्वारा ऊ मसँग आइपुग्दछ ।" यदि कुनै व्यक्तिले भगवान् श्रीकृष्णलाई गम्भीरतापूर्वक खोज्दछ भने उहाँ सर्वत्र हुनुहुन्छ । **अण्डान्तरस्थपरमाणुचयान्तरस्थं गोविन्दमादि पुरुषं तमहं भजामि** - (ब्रह्म संहिता ५.३५) मा भनिएको छ- भगवान् श्रीकृष्ण सम्पूर्ण ब्रह्माण्ड भित्र, हाम्रा हृदयभित्र र यहाँ सम्म कि प्रत्येक परमाणुभित्र उपस्थित हुनुहुन्छ । त्यसैले, उहाँलाई खोज्न र पाउन गाह्रो छैन तर त्यसको लागि प्रत्येकलाई निश्चित विधिको जानकारी

हुनुपर्दछ । श्रीचैतन्य महाप्रभुको आज्ञाअनुसार हामीले त्यो अति सरल विधि निःशुल्क सबैलाई बाँडिरहेका छौं । त्यो विधि भनेको हरे कृष्ण मन्त्रको जप र कीर्तन गर्नु हो । जब मानिसले हरे कृष्ण मन्त्र जप्दछ र त्यसको कीर्तन गर्दछ, तत्काल उसले भगवान् श्रीकृष्णको बारेमा बुझ्न सक्दछ ।

त्यसैगरेर, मानिस श्रीमद्भागवत् सुनेर, ती श्लोक पढेर वा उच्चारण गरेर पनि शुद्ध बन्न सक्दछ । सम्पूर्ण विश्वमा जे जति ज्ञान छन् ती सबै श्रीमद्भागवत्मा छन् । साहित्य, कविता, ज्योतिष, दर्शन, धर्म र भगवत प्रेम सबै विषय भागवत्भित्र नै छन् । – **श्रीमद् भागवतं प्रमाणममलम्** – जसले केवल एक मात्र श्रीमद्भागवत्को अध्ययन गर्दछ उसले सर्वोच्च शिक्षा प्राप्त गर्दछ किनभने श्रीमद्भागवत्को अध्ययन गर्ने मानिस प्रत्येक विषयमा पारङ्गत वा विशेषज्ञ बन्दछ । यदि कसैले श्रीमद्भागवत्को मन्त्रको एउटा शब्दको अर्थसम्म पनि बुझ्न सक्दैन भने पनि श्रीमद्भागवत्को शब्द ध्वनि यति धेरै शक्तिशाली छ, त्यसको उच्चारणले मात्र पनि मानिसलाई शुद्ध बनाइदिन्छ । **शृण्वतां स्वकथाः कृष्णः पुण्यश्रवणकीर्तनः ।** जसले श्रीमद्भागवत्का श्लोकहरुको उच्चारण गर्दछ वा सुन्दछ, ऊ स्वतः पवित्र बन्दछ । साधारणतया मानिसलाई पवित्र बन्नका लागि अन्य धेरै प्रयासहरू गर्नुपर्दछ तर यदि उसले श्रीमद्भागवत् वा भगवद्गीताका श्लोक सुन्दछ भने ऊ स्वतः पवित्र र शुद्ध बन्दछ । त्यसैले, हाम्रो कृष्णभावनामृत आन्दोलनका प्रत्येक मन्दिरमा प्रतिदिन श्रवण र कीर्तनका कक्षाहरू अनिवार्य सञ्चालन गर्ने कठोर सिद्धान्त र नियम छ । हाम्रो आन्दोलनको उद्देश्य भनेको आध्यात्मिक नेतृत्व गर्न सक्ने व्यक्ति उत्पादन गर्नु हो तर श्रवण र कीर्तनविना कुनै पनि व्यक्तिले नेतृत्व लिन सम्भव छैन । निश्चय नै भौतिक जगत्मा त्यो सम्भव होला तर आध्यात्मिक जगत्मा त्यो सम्भव छैन ।

**माली हञा सेइ बीज करे आरोपण ।**<br>**श्रवण-कीर्तन-जले करये सेचन ॥**<br>**(चैतन्य चरितामृत, मध्य, १९.१५२)**

जसले भक्तिको बीजलाई श्रवण र कीर्तनरूपी पानीले सिंचाई गर्दछ, त्यस व्यक्तिले आदि चेतनाको विकास गर्दछ । त्यसैले, यहाँ परम भक्त कुन्तीदेवीले आफ्नो स्तुतिद्वारा हामीलाई पङ्कज वा कमलमा आफ्नो मनलाई एकाग्र गर्दै कृष्णचेतनाले युक्त हुने अवसर दिएकी छिन् । पङ्कको अर्थ हिलो हो र ज को अर्थ उत्पन्न गराउनु हो । हुनत कमल त्यही हिलोबाट नै उत्पन्न हुन्छ तर त्यो

अति महत्त्वपूर्ण फूल हो किनभने त्यो फूल भगवान् श्रीकृष्णलाई साह्रै मन पर्दछ । त्यसैले, कुन्तीदेवीले भगवान् श्रीकृष्णको सम्पूर्ण शरीरका अङ्गलाई कमल फूलसँग दाँज्दै वा त्यस्तै छ भनेर वर्णन गरेकी छिन् किनभने यसले गर्दा मानिसले कमलको फूल देख्ने बित्तिकै तुरुन्त भगवान् श्रीकृष्णको बारेमा सोच्दछ अनि भन्न सक्दछ – “अहो ! भगवान् श्रीकृष्णको नाभी कमल समान छ । भगवान् श्रीकृष्णको नाभीबाट कमलको डाँठ उत्पन्न भयो र त्यसमा यस ब्रह्माण्डका स्रष्टा वा सृजना गर्ने श्रीब्रह्मा उत्पन्न हुनुभयो । यस ब्रह्माण्डमा धेरै लोकहरू छन् । त्यस्तै, समुद्र, पर्वत, मोटरकार र अन्य विभिन्न सामानहरूले भरिएका सहरहरू छन् । यो सम्पूर्ण ब्रह्माण्ड यही कमलबाट सुरु भएको हो ।”

**नमः पङ्कजमालिने** – भगवान् श्रीकृष्णबाट अनौठो कमलको फूल उत्पन्न हुन्छ र त्यही फूलमा नै यो सम्पूर्ण ब्रह्माण्डको वीज रहेको हुन्छ । तर, भगवान् केवल एउटा यस्तो फूलका स्रोत मात्र हुनुहुन्न किनभने उहाँ त्यति दरिद्र हुनुहुन्न, केवल यस्तो एउटा फूल उत्पादन गर्ने बित्तिकै उहाँ समाप्त हुने । जसरी एउटा मालामा प्रशस्त फूल हुन्छन्, त्यसरी नै भगवान् श्रीकृष्ण असङ्ख्य ब्रह्माण्डका स्रोत हुनुहुन्छ । त्यसैले, उहाँलाई कमलको विशाल मालासँग तुलना गरिएको छ र त्यसैकारण उहाँ भगवान् हुनुहुन्छ । **यस्यैकनिश्वसितकालमथावलम्ब्य । जीवन्ति लोमविलजा जगदण्डनाथाः** (ब्रह्मसंहिता ५.४८) । हामी केवल यस लोकका बारेमा सोच्दछौं तर भगवान् श्रीकृष्ण भने असीमित हुनुहुन्छ र भगवान् श्रीकृष्णको सृष्टिमा असीमित लोकहरू छन् । जसरी शिरमा भएको कपालका रौंको गणना गर्न सकिंदैन, त्यसरी नै हामीले ती लोकहरूको गणना गर्न सक्दैनौं । भगवान् श्रीकृष्णको सृष्टिको प्रकृति यस्तो छ । अर्को उदाहरण, जसरी कुनै वृक्षमा अनगिन्ती पातहरु हुन्छन्, त्यसरी नै अनगिन्ती लोक र अनगिन्ती ब्रह्माण्ड छन् । त्यसैले, भगवान् श्रीकृष्ण पनि असीमित हुनुहुन्छ ।

भगवान् श्रीकृष्णको नाभी कमल समान छ । उहाँको घाँटीमा कमलको फूलको माला छ र उहाँका आँखालाई कमलको फूलको दलसँग तुलना गरिएको छ- **आलोल चन्द्रकलसद्वनमाल्यवंशी** (ब्रह्मसंहिता ५.३१) । यदि हामीले केवल यो एउटा श्लोकलाई मात्र पनि मनन गर्न सक्यौं भने जसमा भगवान् श्रीकृष्णका शरीरको वर्णन कमलसँग तुलना गरेर गरिएको छ र उहाँ कति सुन्दर हुनुहुन्छ, उहाँ कति ज्ञानी हुनुहुन्छ र उहाँले कसरी आफ्नो ब्रह्माण्ड सृष्टि गर्नुहुन्छ भन्ने कुरामा आफ्नो ध्यानलाई सम्पूर्ण जीवनभरी एकाग्र गर्न सक्दछौं । यो भगवान्

श्रीकृष्णका बारेमा मनन र चिन्तन गरिएको ध्यान हो । **ध्यानावस्थित तद् गतेन मनसा पश्यन्तिऽयं योगिनः** – जसले सधैँ र निरन्तर भगवान् श्रीकृष्णको ध्यान गर्दछ, त्यो नै योगी हो ।

जसले निर्विशेषको चिन्तन गर्दछ ऊ योगी होइन किनभने तिनीहरूको चिन्तन वा ध्यानमा धेरै परिश्रम पर्दछ (**क्लेशोऽधिकरस्तेषामण्यक्तासक्त चेतसाम्**) तर उनीहरूले त्यसबाट कुनै महत्त्वपूर्ण उपलब्धि प्राप्त गर्न सक्दैनन् । त्यसैले, उनीहरूले ध्यान सकिए पछि भन्दछन् "मलाई चुरोट देऊ, मेरो घाँटी सुकेको छ ।" यस्तो ध्यान ध्यान होइन । किनभने ध्यान भनेको निरन्तर भगवान् श्रीकृष्णको चिन्तन (**सततं चिन्तयन्तो माम्**) गर्नु हो र दृढ व्रतसँग कृष्णचेतनातर्फ अग्रसर हुने प्रयास गर्नु हो (**यतन्तश्च दृढव्रताः**) ।

**परं ब्रह्म परं धाम पवित्रं परमं भवान्** – भनिएको छ । हामी पवित्र बन्नुपर्दछ किनभने भगवान् श्रीकृष्ण पवित्र हुनुहुन्छ । त्यसैले, हामी अपवित्र छौं भने अपवित्र भएर हामी भगवान् श्रीकृष्णसम्म पुग्न सक्दैनौं । यदि हामीले निरन्तर भगवान् श्रीकृष्णको चिन्तन र ध्यान गर्‍यौं भने हामी पवित्र बन्न सक्दछौं । **पुण्य श्रवण कीर्तनः** – श्रवण र कीर्तन विधिद्वारा भगवान् श्रीकृष्णको ध्यान गर्न सम्भव छ । तत्पश्चात् भगवान् श्रीकृष्णको चिन्तन स्वतः हुन थाल्दछ । त्यो नै कृष्णभावनामृत वा कृष्णचेतना प्राप्त गर्ने विधि हो । **श्रवणं कीर्तन विष्णों स्मरणं** – स्मरणको अर्थ सम्झना गरिरहनु हो । यदि हामीले उहाँका बारेमा सुन्ने र उहाँका नामको जप गर्न सुरु गर्‍यौं भने उहाँको स्मरण स्वतः हुने गर्दछ र हामी मन्दिरमा पूजा (**अर्चनम्**) मा लाग्दछौं अनि प्रार्थना अर्पण (**वन्दनम्**) गर्दछौं । त्यसपछि आफूलाई भगवान् श्रीकृष्णको सेवकका रूपमा अर्पण गर्दछौं । त्यसपछि हामीले हाम्रा प्रत्येक वस्तु भगवान् श्रीकृष्णमा अर्पण (**आत्म निवेदनम्**) गर्न सक्दछौं र यो नै कृष्णचेतना वा कृष्णभावनामृतको विधि हो ।

***

# ६. इन्द्रियका स्वामी (हृषीकेश)

**कुन्त्युवाच –**

**यथा हृषीकेश खलेन देवकी कंसेन रुद्धातिचिरं शुचार्पिता ।**
**विमोचिताहं च सहात्मजा विभो त्वयैव नाथेन मुहुर्विपद्गणात् ॥**

हे हृषीकेश ! हे इन्द्रियका स्वामी ! देवताका पनि देवता ! हजुरले धेरै लामो समयसम्म बन्दीगृहमा बन्दी भएर बसेकी र दुष्ट राजा कंसबाट कष्ट दिइएकी आफ्नी आमा देवकीलाई मुक्त गर्नुभयो भने निरन्तर खतरा र विपत्तिमा परेकी म र मेरा छोराहरूलाई पनि बचाउनुभयो

**–(श्रीमद्भागवत् १.८.२३)**

भगवान् श्रीकृष्णकी आमा, राजा कंसकी बहिनी देवकी आफ्ना पति वसुदेवसहित बन्दीगृहमा राखिएकी थिइन् किनभने दुष्ट राजा कंसलाई देवकीको आठौं पुत्र (भगवान् श्रीकृष्ण) बाट आफू मर्दछु भन्ने भय थियो । राजा कंसले भगवान् श्रीकृष्णभन्दा पहिला देवकीका गर्भबाट जन्मिएका सबै छोराहरूलाई मारिदियो तर भगवान् श्रीकृष्ण भने बालवधबाट बच्नुभयो किनभने उहाँ बन्दीगृहबाट आफूलाई पालनपोषण गर्ने पिता नन्द कहाँ पुऱ्याइनुभएको थियो । त्यसरी नै कुन्तीदेवी पनि आफ्ना पुत्रसहित बारम्बार विपत्तिबाट बचेकी थिइन् । भगवान् श्रीकृष्णले देवकीका छोराहरूलाई मर्नबाट बचाउनु भएन तर कुन्तीदेवीले भने धेरै अनुग्रह गर्नुभएकाले उनका छोराहरूलाई भने बचाउनु भयो । त्यसो किन गर्नुभयो भने देवकीका पति वसुदेव जीवित थिए । उनले देवकीको रक्षा र सहायता गर्न सक्दथे भने कुन्तीदेवी विधवा थिइन् । उनको रक्षा गर्ने भगवान् श्रीकृष्णबाहेक अरू कोही पनि थिएन । यसबाट के निष्कर्ष निस्कन्छ भने जुन भक्त ज्यादै सङ्कटमा परेको छ, त्यसलाई भगवान् श्रीकृष्णले धेरै अनुग्रह गर्नुहुन्छ । कहिलेकाहीँ भगवान्‌ले आफ्ना शुद्ध भक्तहरूलाई अरू बढी सङ्कट दिनुहुन्छ अनि त्यस्तो असहाय अवस्थामा भक्त भगवान्प्रति अरू बढी

आसक्त बन्दछ । यसरी जति धेरै भगवान्प्रति आसक्ति बढ्छ, भक्तले त्यति नै धेरै सफलता प्राप्त गर्दछ ।

भक्तिनी देवकी, जो भगवान् श्रीकृष्णकी आमा बनिन्, उनी कुनै साधारण महिला थिइनन् । आखिरमा भगवान्को आमा को बन्न सक्दछ ? धेरै अघि बढिसकेको भक्तको पुत्र बन्न मात्र भगवान् श्रीकृष्णले स्वीकार गर्नुहुन्छ ।

देवकी र उनका पतिले पूर्वजन्ममा कठोर तपस्या गरेका थिए । जब भगवान् श्रीकृष्ण उनीहरूलाई वरदान दिन उनीहरूका अघि प्रकट हुनुभयो, उनीहरूले भगवान्जस्तै छोरो पाउने इच्छा व्यक्ति गरे । तर, भगवान्समान अन्य व्यक्ति कहाँ हुन सक्दछ र ? त्यो सम्भव नै छैन । भगवान् **असमौर्ध्व** हुनुहुन्छ अर्थात उहाँसमान वा उहाँका भन्दा माथि अरू कोही हुन नै सक्दैन । त्यसैले, त्यहाँ कुनै प्रकारको प्रतियोगिता हुने सम्भावना नै छैन । कसैले पनि "म भगवान् हुँ, तिमी भगवान् हौ, ऊ पनि भगवान् हो, हामी सबै भगवान् हौं" भन्न सक्दैन । जसले यसो भन्दछ त्यो कुकुर नै हो, त्यो भगवान् होइन किनभने भगवान् महान् हुनुहुन्छ । उहाँको समकक्षी वा प्रतिद्वन्द्वी कोही पनि हुन सक्दैन । उहाँ समान कोही पनि हुन सक्दैन सबै नै उहाँभन्दा तल नै हुन्छन् । **एकले ईश्वर कृष्ण आर सब भृत्य** – भगवान् श्रीकृष्ण केवल एक मात्र स्वामी हुनुहुन्छ । अरू सबै उहाँका सेवक हुन् । ती सेवकमा श्रीब्रह्मा, श्रीविष्णु र श्री शिवजस्ता महान् देवता पनि पर्नुहुन्छ भने अरूको के कुरा ? वैदिक शास्त्रमा – **शिवविरिञ्चि नुतम्** – श्रीशिव र श्रीब्रह्माजस्ता सर्वोच्च देवताले पनि भगवान् श्रीकृष्णलाई आदर अर्पण गर्नुहुन्छ भनिएको छ ।

निम्नस्तरको पशुभन्दा हामी मानिस माथि हौं । हामीभन्दा माथि देवताहरू छन् र ती सबै देवताभन्दा महत्त्वपूर्ण देवता श्रीब्रह्मा र श्रीशिव हुनुहुन्छ । श्रीब्रह्मा यस ब्रह्माण्डका सृष्टिकर्ता हुनुहुन्छ, श्रीशिव संहारकर्ता हुनुहुन्छ भने भगवान् श्रीविष्णु जो साक्षात् भगवान् श्रीकृष्ण हुनुहुन्छ, उहाँ पालनकर्ता हुनुहुन्छ । यस भौतिक जगत्लाई पालनपोषण गर्नका लागि तीन वटा गुणहरू छन् । ती सत्त्वगुण रजोगुण र तमोगुण हुन् । भगवान् श्रीविष्णु, श्रीब्रह्मा र श्री शिव सबैले एक-एक गुणको अधिकार लिनुभएको छ जस अनुसार भगवान् श्री विष्णुले सत्त्वगुण, श्रीब्रह्माले रजोगुण र श्रीशिवले तमोगुण । तर, उहाँ तीनै जना नियन्त्रकहरू गुणको अधीनमा वा प्रभावमा हुनुहुन्न । जसरी बन्दीगृहको निरीक्षकले सम्पूर्ण बन्दीगृहको नियन्त्रण गर्दछ तर ऊ बन्दी होइन । त्यसै गरेर

भगवान् श्रीविष्णु, श्रीब्रह्मा र श्रीशिव पनि तीन गुणका नियन्त्रक हुनुहन्छ र गुणको नियन्त्रण वा प्रभावमा पर्नुहुन्न । तर, उहाँहरू सबैभन्दा माथि र सबैका नियन्त्रक भगवान् श्रीकृष्ण हुनुहुन्छ र उहाँ हृषीकेश नामले चिनिनुहुन्छ । हृषीक शब्दको अर्थ इन्द्रिय हो । हामीले हाम्रा इन्द्रियहरूको भोग गर्दछौं तर यी सबै इन्द्रियहरूका परम नियन्त्रक भगवान् श्रीकृष्ण हुनुहुन्छ । उदाहरणका लागि मेरो हात नै लिऊँ । म भन्दछु "यो मेरो हात हो । म तिमीसँग मुक्का हानेर लड्न सक्दछु" अनि मैले घमण्ड पनि गर्दछु तर वास्तवमा यस हातको नियन्त्रक म होइन । यसको नियन्त्रक भगवान् श्रीकृष्ण नै हुनुहुन्छ किनभने यदि भगवान् श्रीकृष्णले मेरो हातको काम गर्ने शक्ति फिर्ता लिनुभयो भने मेरो हात शक्तिहीन हुन्छ अनि मैले केही पनि गर्न सक्दिनँ । त्यसैले, भगवान् श्रीकृष्णका कृपाले मैले यी हात पाएको छु । उहाँ नै यसका नियन्त्रक हुनुहुन्छ र म होइन भनेर मैले बुझ्नुपर्दछ । यो नै कृष्णचेतना वा कृष्णभावनामृत हो ।

"यदि यो हातको परम नियन्त्रक भगवान् श्रीकृष्ण हुनुहुन्छ भने यो हात भगवान् श्रीकृष्णका निमित्त हो" भनेर बुद्धिमान् व्यक्तिले भन्दछ । यो सामान्यतया बुझ्ने कुरा हो । "यो मेरो हात हो, यो मेरो गोडा हो र यो मेरो कान हो भनेर मैले दाबी गर्दछु र सामान्य बालकले पनि यस्तै भन्दछ । यदि तिमीले कुनै बालकलाई यो के हो ? भनेर सोध्यौ भने उसले "यो मेरो हात हो" भन्दछ । तर, हामीले जेजस्ता दाबी गरेपनि वास्वतमा यो हाम्रो हात होइन । यो हामीलाई दिइएको मात्र हो किनभने मैले हातलाई विभिन्न प्रकारले प्रयोग गर्न चाहन्छु । त्यसैले, भगवान् श्रीकृष्णले मलाई दिएर "ल यो हात प्रयोग गर" भन्नुभएको हो । त्यसैले, बुद्धिमान् व्यक्तिले यो सबै भगवान् श्रीकृष्णबाट प्रदान गरिएको उपहार हो भन्ने बुझ्दछ र आफू सचेत भएर सोच्दछ "मसँग जे जति छ, त्यो शरीर, इन्द्रिय आदि वास्वतमा मेरा होइनन् । यी सबै मैले उपयोग गर्नका लागि भगवान् श्रीकृष्णले प्रदान गर्नुभएको हो । अन्ततः यी सबै भगवान् श्रीकृष्णको सेवाका लागि किन नगर्ने ?" यो नै सही बुद्धि हो र यो नै कृष्णचेतना हो ।

हामी सबै जीव भगवान् श्रीकृष्णका अंश हौं (**ममैवांशो जीवलोके जीवभूताः**) त्यसैले, सबै जीवका इन्द्रियहरू पनि भगवान् श्रीकृष्णका नै हुन् । जब हामी ती इन्द्रियहरूलाई भगवान् श्रीकृष्णको सेवामा लगाउँदछौं अनि हामीले जीवनमा सिद्धि वा पूर्णता प्राप्त गर्न सक्दछौं । त्यसैले, **हृषीकेण हृषीकेशसेवनमं भक्तिरुच्यते** – जब हामीले हाम्रा इन्द्रियद्वारा (**हृषीकेश**) इन्द्रियहरूका स्वामी भगवान्

श्रीकृष्णको सेवा गर्दछौं, त्यो सेवालाई भक्ति भनिन्छ । यो नै भक्तिको सामान्य परिभाषा पनि हो । यहाँ **हृषीकेशसेवनं** भनिएको छ । **हृषीकसेवन** होइन अर्थात् इन्द्रियका स्वामीको सेवा गर्नु भनेको हो स्वयम् आफ्ना इन्द्रियको सेवा गर्नु भनेको होइन । जब हामीले हाम्रा इन्द्रियहरूलाई इन्द्रियतृप्तिका लागि उपयोग गर्दछौं, त्यसलाई माया वा भ्रम भनिन्छ भने जब त्यही इन्द्रियको उपयोग इन्द्रियका स्वामी भगवान् श्रीहृषीकेशको सेवामा लगाउँदछौं, त्यसलाई भक्ति भनिन्छ ।

यस भौतिक जगत्मा प्रत्येक व्यक्तिले आफ्ना इन्द्रियहरूको उपयोग केवल इन्द्रियतृप्तिका लागि मात्र गर्दछन् । यो माया वा भ्रम हो र यो माया नै हाम्रो बन्धनको कारण हो । जब मानिस कृष्णचेतनाले युक्त हुन्छ वा कृष्णभावनामृतमा आउँदछ अनि उसले यी हाम्रा इन्द्रियहरू वास्तवमा भगवान् श्रीकृष्णलाई सन्तुष्ट गर्नका लागि हुन् भनेर जान्दछ, बुझ्दछ अनि मात्र त्यो व्यक्ति मुक्त पुरुष बन्दछ वा बन्धनबाट मुक्त भएको हुन्छ ।

**ईहा यस्य हरेर्दास्ये कर्मणा मनसा गिरा ।**
**निखिलाष्वप्यवस्थासु जीवन्मुक्तः स उच्यते ॥**

"जुन व्यक्तिले आफ्नो शरीर, मन, बुद्धि र शब्दले भगवान् श्रीकृष्णको सेवा गर्दछ, त्यो व्यक्ति यस भौतिक जगत्मा भए पनि ऊ मुक्त पुरुष हुन्छ ।" "मेरा इन्द्रियहरू, इन्द्रियहरूका स्वामी भगवान् श्रीहृषीकेशको सेवा गर्नका लागि हुन्" भनेर प्रत्येकले यो कुरा बुझ्नुपर्दछ । सबै इन्द्रियका स्वामी भगवान् श्री हृषीकेश प्रत्येक प्राणीका हृदयमा विराजमान हुनुहुन्छ । भगवद्गीता (१५.१५) मा भगवान् श्रीकृष्णले भन्नुभएको छ – **सर्वस्य चाहं हृदि सन्निविष्टो** – "म प्रत्येकको हृदयमा विराजमान छु", **मत्तःस्मृतिर्ज्ञानमपोहनं च** – "मबाट नै स्मरण, ज्ञान र भुल्ने काम उत्पन्न हुन्छन् ।"

भगवान् श्रीकृष्ण यति धेरै कृपालु हुनुहुन्छ, यदि हामीले हाम्रा इन्द्रियहरू कुनै निश्चित प्रक्रियाले प्रयोग गर्न चाह्यौं भने उहाँले हामीलाई त्यस्तै अवसरहरू प्रदान गर्नुहुन्छ । हुनत यी इन्द्रियहरू हाम्रा होइनन्, भगवान् श्रीकृष्णका नै हुन् तर भगवान् श्रीकृष्ण हामीलाई यी इन्द्रियहरू हाम्रो इच्छाअनुसार प्रयोग गर्ने वा सञ्चालन गर्ने अवसर प्रदान गर्नुहुन्छ । उदाहरणका लागि हामीसँग जिब्रो छ । यदि हामीले दिसा खाने इच्छा गर्‍यौं भने र "हे कृष्ण ! म दिसा खान चाहन्छु" भन्यौं भने भगवान् श्रीकृष्णले "हुन्छ, तिमी सुँगुरको शरीर धारण गर अनि दिसा

खाऊ" भन्नुहुन्छ । किनभने सबैका स्वामी भगवान् श्रीकृष्ण हुनुहुन्छ । त्यसैले, हाम्रो इच्छाअनुसारको कार्य गर्न उपयुक्त शरीर प्रदान गर्दै हामीलाई सम्झना पनि गराउँदै भन्नुहुन्छ – "हे मेरा जीव ! तिमीलाई दिसा खाने इच्छा छ । त्यसैले, तिमीलाई अब यो शरीर प्राप्त भएको छ, त्यसैले, इच्छाअनुसारको काम गर ।" त्यसैगरेर, यदि हामीलाई देवता बन्ने इच्छा भए भगवान् श्रीकृष्णले हामीलाई देवता बन्ने अवसर पनि प्रदान गर्नुहुन्छ । जीवका जम्मा चौरासी लाख योनि छन् । जीवले जेजस्तो विशेष प्रकारको शरीरमा आफ्ना इन्द्रियहरू केन्द्रित गरेको हुन्छ, भगवान् श्रीकृष्णले उसलाई त्यस्तै शरीर प्राप्त गर्ने अवसर प्रदान गर्नुहुन्छ र भन्नुहुन्छ "आऊ तिमीले जुन शरीरको इच्छा गरेका थियौ त्यो यहाँ छ लिएर जाउ ।" यसरी मानिस इन्द्रियको उपयोग गर्दागर्दा क्रोधित वा उत्तेजित हुन्छ र अन्त्यमा इन्द्रिय विहीन बन्दछ । त्यसैले, भगवान् श्रीकृष्णले भन्नुहुन्छ – **सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज** – तिमीले यसरी कार्य नगर किनभने तिम्रा इन्द्रियहरू केवल मेरो सेवा गर्नका लागि हुन् तर तिमीले भने ती इन्द्रियहरूको दुरुपयोग गर्‍यौ वा अर्कै ठाउँमा प्रयोग गर्‍यौ त्यसैले, तिमी विभिन्न प्रकारका शरीरमा बाँधिएका छौ । यसरी एकपछि अर्को शरीर धारण गरिरहन पर्ने कष्ट र झन्झटबाट मुक्त हुनका लागि इन्द्रियतृप्ति गर्ने कार्य वा विधिलाई त्याग गर र केवल एक मात्र मेरो शरणमा आऊ अनि मात्र तिमी सुरक्षित हुनेछौ । यो विषय नै कृष्णचेतना वा कृष्णभावनामृत हो ।

अहिले हाम्रा सबै इन्द्रियहरू दूषित भएका छन् । त्यसैले, मैले सोच्दछु – "म अमेरिकी हुँ र मेरा इन्द्रियहरू, मेरो देश, मेरो समाज र मेरो राष्ट्रको सेवाका लागि प्रयोग हुनुपर्दछ" वा मैले सोच्दछु, "म भारतीय हुँ, मेरा इन्द्रियहरू भारतीय हुन् त्यसैले, मैले इन्द्रियहरू भारतको सेवाको लागि प्रयोग गर्नुपर्दछ ।" त्यो सबै अज्ञानताले गर्दा हो । उसलाई यी इन्द्रियहरू भगवान् श्रीकृष्णका हुन् भन्ने जानकारी पनि हुँदैन । त्यसैले, उसले इन्द्रियहरू अमेरिकी इन्द्रिय, भारतीय इन्द्रिय वा अफ्रिकी इन्द्रिय हुन् भन्ने सोच्दछ । यस्तो सोच्नु नै माया वा भ्रम हो । यस भौतिक जीवनका सबै इन्द्रियहरू म अमेरिकी हुँ, भारतीय हुँ भन्नेजस्ता उपाधिले ढाकिएको हुन्छ तर जब हाम्रा इन्द्रियहरू यस्ता उपाधिहरूबाट दूषित हुँदैनन् र मुक्त हुन्छन् (**सर्वोपाधिविर्मुक्तं**) अनि मात्र भक्ति प्रारम्भ हुन्छ ।

"म अमेरिकी हुँ, त्यसैले, कृष्णभावनामृतमा किन लागौं र हिन्दू देवताको पूजा किन गरुँ ?" भनेर सोच्नु मूर्खता हो । यदि कसैले म मुस्लिम हुँ, म

क्रिश्चियन हुँ र म हिन्दू हुँ भन्ने सोच्दछ भने ऊ भ्रममा वा मायामा फँसेको हुन्छ । त्यसैले, मानिसले आफ्ना इन्द्रियहरूलाई शुद्ध पवित्र बनाउनुपर्दछ अनि मात्र उसले "म आत्मा हुँ । भगवान् श्रीकृष्ण परमात्मा हुनुहुन्छ अनि म भगवान् श्रीकृष्णको अंश हुँ त्यसैले, मेरो कर्तव्य भनेको उहाँको सेवा गर्नु हो" भनेर बुझ्न सक्दछ । जसले यसप्रकारले सोच्दछ ऊ तुरुन्त सबै बन्धनबाट मुक्त हुन्छ । त्यसपछि ऊ न अमेरिकी, न भारतीय, न अफ्रिकी वा यो वा त्यो भन्ने नै हुन्न । ऊ केवल कृष्णमय वा कृष्णभावनामृतमय बन्दछ । हामीले चाहेको पनि यही नै हो । त्यसैले, कुन्तीदेवीले "हे मेरा प्रिय कृष्ण हृषीकेश ! हजुर नै सबै इन्द्रियका स्वामी हुनुहुन्छ" भनेर भन्दछिन् ।

हामीहरू इन्द्रियतृप्तिका लागि नै यस भौतिक अवस्थामा झरेका छौं र यहाँ विभिन्न प्रकारका दुःख र कष्टले युक्त जीवन बिताइरहेका छौं किनभने यो भौतिक जगत् हो त्यसैले, यहाँ भगवान् श्रीकृष्णकी आमालाई पनि कष्टमा पर्नुपरेको थियो । देवकी भक्तिमा धेरै अघि थिइन् । त्यसैले, उनी भगवान् श्रीकृष्णकी आमा बन्न पाइन् । तैपनि, उनको आफ्नै भाइ कंसले उनलाई धेरै कष्ट दियो । यो नै भौतिक जगत्को स्वभाव र प्रकृति पनि हो । यस भौतिक जगत्का जीवहरू ईर्ष्यालु हुन्छन् । त्यसैले, यदि कसैले आफ्नो हितमा बाधा दियो भने आफ्नै नजिकको नातेदार भए पनि उसलाई कष्ट दिन तयार हुन्छ । **खल** शब्दको अर्थ ईर्ष्यालु हो । यो भौतिक जगत् ईर्ष्यालु र द्वेषले युक्त संसार हो । म तिमीसँग ईर्ष्या गर्दछु, तिमी मसँग ईर्ष्या गर्दछौ । यो कृष्णभावनामृत आन्दोलन भनेको त्यस्तो व्यक्तिका लागि हो, जसको ईर्ष्या र द्वेष गर्ने भावना समाप्त भएको छ किनभने जो ईर्ष्या र द्वेषको भावनाबाट मुक्त भएको, छ ऊ नै पूर्ण मानव बन्दछ । **धर्मः प्रोज्झितकैतवोऽत्र परमो निर्मत्सराणां सताम्** (भागवत् १.१.२) । जुन व्यक्ति ईर्ष्या र द्वेषले युक्त छन्, तिनीहरू यस भौतिक जगत्मा हुन्छन् । जुन व्यक्ति ईर्ष्या र द्वेबाट मुक्त छ, ऊ आध्यात्मिक जगत्मा हुन्छ । हामीले आफैंले आफैंलाई जाँच्न सक्दछौं । यदि हामी आफ्ना मित्र र सहयोगीहरूप्रति ईर्ष्या र द्वेष गर्दछौं भने हामी भौतिक जगत्मा हुन्छौं । यदि ईर्ष्या र द्वेष गर्दैनौं भने हामी आध्यात्मिक जगत्मा हुन्छौं । यसरी, हामी आध्यात्मिक विकासमा अग्रसर छौं, छैनौं भन्ने कुरामा कुनै सन्देह नै हुँदैन र हामीले आफैंलाई जाच्न सक्दछौं । **भक्तिः परेशानुभवो विरक्तिन्यत्र च** (भागवत् ११.२.४२) । जब हामीले केही खानेकुरा खान्छौं खाएपछि हाम्रो भोक शान्त

भयो, भएन भनेर हामी स्वयम् आफैंले जान्न सक्दछौं । त्यसका लागि अरूहरूबाट प्रमाणपत्र लिन आवश्यक पर्दैन । त्यसरी नै हामीले हामी आफैंलाई हामी भौतिक जगत्मा छौं कि आध्यात्मिक जगत्मा छौं भनेर जाच्न सक्दछौं । यदि हामी ईर्ष्यालु र द्वेष राख्ने छौं भने हामी भौतिक जगत्मा हुन्छौं र यदि त्यसबाट मुक्त छौं भने आध्यात्मिक जगत्मा हुन्छौं ।

यदि कोही ईर्ष्यालु छैन भने उसले भगवान् श्रीकृष्णको सेवा धेरै राम्रोसँग गर्न सक्दछ किनभने ईर्ष्या र द्वेष भगवान् श्रीकृष्णसँग ईर्ष्या गर्नाले नै सुरु हुन्छ । उदाहरणका लागि – कुनै पनि दार्शनिकले सोच्दछ, "भगवान् श्रीकृष्ण कसरी ईश्वर हुनुहुन्छ ? म पनि ईश्वर नै हुँ" यस्तो सोच्नु भगवान् श्रीकृष्णसँग ईर्ष्या गर्ने भौतिक जीवन प्रारम्भ हुनु हो । "भगवान् श्रीकृष्ण किन भोक्ता हुने ? म पनि भोक्ता बन्न सक्दछु" भनेर उनीहरू सोच्दछन् । "भगवान् श्रीकृष्णले मात्र गोपिहरूसँग किन रमाइलो गर्ने ? म पनि गोपिहरूको समाज बनाएर आफू कृष्ण बनेर रमाइलो गर्दछु" भनेर सोच्दछन् । यसरी सोच्नु नै भ्रम वा माया हो किनभने भगवान् श्रीकृष्णबाहेक अन्य कोही पनि भोक्ता बन्न सक्दैन । त्यसैले, भगवान् श्रीकृष्णले भगवद्गीतामा भन्नुभएको छ – **भोक्तारं यज्ञ** – "केवल म मात्र एक भोक्ता हुँ ।" यदि हामीले भगवान् श्रीकृष्णको आनन्दका लागि वस्तुहरू अर्पण गर्‍यौं भने हामीले जीवनमा सिद्धि वा पूर्णता प्राप्त गर्दछौं । तर, यदि हामीले भगवान् श्रीकृष्णको अनुकरण गर्दै "म पनि भगवान् बन्दछु वा उहाँले जस्तै आनन्द गर्दछु" भन्ने सोच्नु माया वा भ्रम हो । हाम्रो स्वाभाविक वा प्राकृतिक अवस्था भनेको नै भगवान् श्रीकृष्णलाई आनन्द प्राप्त हुने वस्तु अर्पण गर्नु हो । उदाहरणका लागि आध्यात्मिक जगत्मा दिव्य गोपीहरूले भगवान् श्रीकृष्णको आनन्दका लागि वस्तुहरु अर्पण गर्नुहुन्छ, भगवान् श्रीकृष्णले ती वस्तुको भोग गर्नुहुन्छ । यो नै भक्ति हो ।

भक्ति भनेको स्वामी र दासबीचको सम्बन्ध हो । दासको कर्तव्य भनेको स्वामीको सेवा गर्ने हो भने स्वामीले दासलाई आवश्यक सबै वस्तु प्रदान गर्नु हो ।

**नित्यो नित्यानां चेतनश्चेतनानाम् ।**
**एको बहूनां यो विदधाति कामान् ॥**
**(कठ उपनिषद् २.२.१३)**

वैदिक साहित्यले भगवान् श्रीकृष्णले मानिसका जीवनका सबै आवश्यकता प्रदान

गर्नुहुन्छ भनेर हामीलाई जानकारी दिन्छ । यदि हामीले भगवान् श्रीकृष्णको सेवा गर्ने प्रयास गर्‍यौं भने हामीमा कुनै कुराको अभाव पनि हुँदैन र आर्थिक समस्या पनि पर्दैन अनि सबै कार्यहरू पनि पूरा हुन्छन् ।

यदि भगवान् श्रीकृष्णले चाहनुभयो भने हामीलाई प्रत्येक वस्तु प्रशस्त मात्रामा प्राप्त हुन्छ । उदाहरणका लागि अमेरिकामा मानिसलाई आवश्यक पर्ने प्रत्येक वस्तु प्रशस्त मात्रामा प्राप्त छ तर अन्य देशमा भने यस्तो छैन । उदाहरणका लागि म जब स्वीजरल्यान्ड गएँ, त्यहाँ वस्तु आयात गरेको मैले देखें । त्यहाँ केवल हिउँ मात्र स्थानीयस्तरमा पूर्ति भएको पाएँ । यी सबै व्यवस्थाहरू भगवान् श्रीकृष्णको नियन्त्रणमा छन् । यदि मानिस भगवान्‌को भक्त भएमा उसलाई प्रशस्त मात्रामा आवश्यक वस्तु प्राप्त हुन्छ यदि ऊ भक्त नबनेमा ऊ हिउँले ढाकिन्छ । प्रत्येक कार्य भगवान् श्रीकृष्णको नियन्त्रणमा छ । त्यसैले, कुनै कुराको अभाव हुने कुरै छैन । केवल अभाव छ भने त्यो कृष्णचेतनाको अभाव छ ।

निश्चय नै यो संसार सङ्कट र अनिष्टले पूर्ण छ तैपनि कुन्तीदेवी भन्दछिन् "देवकी हजुरकी भक्त भएकी हुनाले उनको भाइ नै उनीसँग द्वेष गर्ने भए र उनलाई सङ्कट पर्दा पनि हजुरले बचाउनुभयो ।" जब देवकीको आठौं सन्तान छोरोले मार्दछ भन्ने सुन्यो अनि देवकीको भाइले तत्काल उनलाई मार्न तयार भयो तर देवकीका पतिले उनलाई शान्त गर्दै त्यसो गर्नबाट रोके । यसरी पत्नीको रक्षा गर्नु पतिको कर्तव्य पनि हो । देवकीका पतिले भने– "हे मेरा साला ! तिमीले आफ्नी बहिनीसँग यस्तो द्वेष र ईर्ष्या किन गर्दछौ ?" तिम्री बहिनीले तिमीलाई मार्ने होइन, उसको छोरोले तिमीलाई मार्ने हो र समस्या भनेको पनि त्यही नै हो । म तिमीलाई ती सबै सन्तान ल्याएर दिनेछु अनि तिमीलाई जे मन लाग्छ, त्यही गर । यी नव विवाहित र निर्दोषलाई किन मार्न चाहन्छौ ? यी तिम्री बहिनी हुन् । त्यसैले, जसरी तिमीले तिम्री छोरीको रक्षा गर्दछौ, त्यसरी नै यिनको पनि रक्षा गर । किन मार्दछौ ? यसरी उनले कंसलाई शान्त पार्दै आफ्नो अनुकूल बनाए अनि कंस, जसले ती दुवैलाई मार्न सक्दथ्यो, तैपनि वसुदेवले सबै छोरा ल्याएर दिन्छु भनेका हुनाले ती कुरालाई विश्वास गरेर मार्ने इच्छा त्याग गर्‍यो । यता वसुदेवले सोचे, "अहिलेको यो समयबाट बाच्न सके भने कंसले आफ्नो भान्जो प्राप्त गरेपछि यो सबै द्वेष र ईर्ष्या भुल्ने छ ।" तर कंसले भने यो कुरा कहिल्यै बिर्सेन । त्यसैले, उसले देवकी र

वसुदेवलाई लामो समय (**अतिचिरम्**) सम्म बन्दिगृहमा राख्यो र उनका छोराहरूलाई माऱ्यो अन्त्यमा भगवान् श्रीकृष्ण प्रकट हुनुभयो र देवकीसहित वसुदेवको रक्षा गर्नुभयो ।

जसरी देवकी र कुन्ती भगवान् श्रीकृष्णमा आश्रित थिए, त्यसरी नै हामी पनि भगवान् श्रीकृष्णमा आश्रित हुनपर्दछ । जब कुन्ती विधवा भइन्, उनीप्रति द्वेष र ईर्ष्या गर्ने धृतराष्ट्रले उनका छोरा पाण्डवलाई मार्ने षडयन्त्र मात्र गरिरहन्थे किनभने उनले सोच्दथे "म भाग्यवश अन्धो भएर जन्मे । त्यसकारण, राजसिंहासनको उत्तराधिकारी बन्न सकिंन । मेरो साटो भाइलाई सिंहासन प्राप्त भयो । अहिले उनको मृत्यु भइसकेको छ । त्यसैले, त्यो सिंहासन मेरो छोरोलाई प्राप्त हुनुपर्दछ ।" यो नै भौतिकवादी इच्छा र आकाङ्क्षा हो । मानिसहरू सोच्दछन् "म सुखी हुनुपर्दछ, मेरो छोरा सुखी हुनपर्दछ, मेरो समाज सुखी हुनपर्दछ र मेरो राष्ट्र सुखी हुनपर्दछ" यस्तो सोच्नु नै स्वार्थ हो । तर कसैले पनि भगवान् श्रीकृष्णको बारेमा सोच्दैन उहाँको चिन्तन गर्दैन अनि भगवान् श्रीकृष्ण कसरी सुखी हुनुहुन्छ ? प्रत्येक व्यक्ति केवल आफ्नो सुखको बारेमा मात्र सोच्दछ ? अनि भन्दछ, "म कसरी सुखी हुने हो ?" मेरो सन्तान कसरी सुखी हुन सक्दछ, मेरो जाति, मेरो समाज र मेरो राष्ट्र कसरी सुखी होलान् ?" हामीले सर्वत्र यस्तै मात्र विचार पाउँदछौं । सबै व्यक्ति आफू कसरी सुखसँग बाच्न सकूँ भनेर सङ्घर्ष गरिरहेका छन् तर कसैले पनि भगवान् श्रीकृष्णको सुखको बारेमा सोचेकै छैनन् । कृष्णभावनामृत अत्यन्त प्रकाशित छ त्यसैले, हामी श्रीमद्भागवत् र भगवद्गीतालाई बुझ्ने प्रयत्न गर्दै आफ्ना इन्द्रियका सेवाहरू सबै इन्द्रियहरूका स्वामी (**हृषीकेण हृषीकेशसेवनम्**) मा लगाउने प्रयास गर्दछौं अनि मात्र वास्तवमा हामी सुखी हुन सक्दछौं ।

***

# ७. खतरनाक मुठभेड वा घातक आकस्मिक भेट

**विषान्महाग्नेः पुरुषाददर्शनादसत्सभाया वनवासकृच्छ्रतः ।**
**मृध मृधेऽनेकमहारथास्त्रतो द्रौण्यस्त्रतश्चास्म हरेऽभिरक्षिताः ॥**

हे प्रिय कृष्ण ! हजुरले हामीलाई विषले युक्त भोजनबाट, ठुलो अग्नि काण्डबाट, मानिस खाने राक्षसबाट, दूषित सभाबाट, जङ्गल वास भएको समयमा कष्टहरूबाट, महारथीहरूसँगको युद्धबाट बचाउनुभयो । अहिले अश्वत्थामाको अस्त्रबाट हामीलाई बचाउनुभयो ।

**–(श्रीमद्भागवत् १.८.२४)**

यहाँ विभिन्न प्रकारका घातक मुठभेडको सूची दिइएको छ । देवकीले भने एकपटक मात्र आफूसँग द्वेष गर्ने भाइबाट कष्ट पाएकी थिइन् अन्यथा उनी कुशलतापूर्वक नै रहेकी थिइन् । तर कुन्तीदेवीलाई भने आफ्ना छोराहरूसहित वारम्बार निरन्तर र वर्षौंवर्षसम्म कष्ट भइरह्यो । दुर्योधन र उसका पक्षका व्यक्तिहरूले राज्य प्राप्त गर्नका लागि उनीहरूलाई बारम्बार कष्ट दिइरहे तर प्रत्येक समय कुन्तीका छोराहरूलाई भगवान् श्रीकृष्णले बचाई दिनुभयो । एक पटक भीमलाई मीठो भोजनमा विष हालेर खान दिए, एक पटक उनीहरूलाई लाक्षागृहमा बस्न दिएर आगो लगाइयो भने एक पटक द्रौपदीको वस्त्र हरण गरेर दुष्ट कौरव सभामा नाङ्गै बनाएर बेइज्जत गर्ने प्रयास गरे । भगवान्ले द्रौपदीको वस्त्र धेरै नै लामो बनाइदिनुभयो, जसले गर्दा दुर्योधनका पक्षका व्यक्तिले द्रौपदीलाई नाङ्गै भएको हेर्न पाएनन् । यसै गरेर, जब पाण्डवहरू वनवासमा थिए, त्यससमय भीमलाई मानिस खाने राक्षस हिडिम्बसँग लड्नुपर्‍यो । त्यससमय पनि भीमलाई भगवान्ले रक्षा गर्नुभयो । यस्तो सङ्कट यतिमा सकिएन । यी सबै कष्टपछि कुरुक्षेत्रको महान् युद्धमा द्रोण, भीष्म र कर्णजस्ता महारथी र महाशक्तिहरूसँग अर्जुनले युद्ध गर्न पर्‍यो । जब सबै युद्ध समाप्त भएर सबै ठीक

जस्तो भएको थियो, त्यससमय द्रोणाचार्यका छोराले कुरुवंशका एक मात्र जीवित सन्तान महाराज परीक्षित शिशु अवस्थामा भएको समयमा मार्नका लागि छोडेको ब्रह्मास्त्रबाट भगवान्ले उनको रक्षा गर्नुपऱ्यो । यहाँ कुन्तीले पाण्डवले आफ्नो राज्य प्राप्त गर्ने समयसम्म भोगेका सम्पूर्ण सङ्कट र कष्टहरूको स्मरण गरेकी छिन् । भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ – **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति** –"हे प्रिय अर्जुन ! तिमी संसारलाई घोषणा गर, मेरा भक्तको कहिल्यै पनि नाश हुँदैन ।" हुनत पाण्डुका छोरा पाण्डवहरू भगवान् श्रीकृष्णका महान् भक्त थिए तैपनि भौतिक जगत्मा मानिसहरू भौतिक वस्तुहरूप्रति इच्छुक र आकर्षित हुने हुनाले उनीहरूलाई विभिन्न प्रकारका सङ्कटहरू आइपर्दछन् । तिनीहरूका भौतिकवादी ठूलाबुबा जहिले पनि उनीहरूलाई मारेर उनीहरूको राज्य हडप गरेर आफ्ना छोराहरूलाई प्रदान गर्ने योजना बनाइरहन्थे र उनको सुरुदेखि नै त्यही नीति थियो ।

एक पटक धृतराष्ट्रले लाहाको घर बनाउन लगाए, जुन यति धेरै प्रज्ज्वलनशील थियो, एउटा सलाईको झिल्का पर्नासाथ विशाल आगोमा परिणत हुन सक्दथ्यो । त्यस्तो बनाए पछि एक दिन उनले बुहारी कुन्ती र भतिजाहरूलाई भने, "मैले ज्यादै सुन्दर घर बनाएको छु । तिमीहरू त्यहाँ गएर केही दिन बस ।" "धृतराष्ट्रले तिमीहरूलाई त्यस घरमा किन पठाउन चाहन्छन् भने तिमीहरू त्यहाँ गएर आगोमा डढेर खरानी होऊ" भन्ने नीतिको बारेमा धृतराष्ट्रका भाइ विदुरले पाण्डवहरूलाई यो जानकारी दिए । जब धृतराष्ट्रको छोरा दुर्योधनले त्यस नीतिका बारेमा पाण्डवहरूलाई विदुरले जानकारी दिए भनेर थाहा पायो अनि ऊ ज्यादै रिसायो । राजनीति भनेको यस्तो हुन्छ । हुनत पाण्डवलाई आफ्ना ठुलो बुबाको आफूहरूलाई त्यस घरमा पठाएर आगो लगाएर मार्ने योजनाका बारेमा जाकारी भयो तैपनि उनीहरू त्यस घरमा जान तयार भए । धृतराष्ट्र उनीहरूका अभिभावक थिए त्यसैले, उनी जस्ता वृद्धले दिएको आदेशको अवज्ञा गर्न चाहेनन् । तर, उनीहरूले घरमुनि सुरुङ खने अनि जब घरमा आगो लाग्यो, उनीहरू त्यस सुरुङबाट भागेर बाँचे ।

अर्को पटक जब पाण्डवहरू घरमा नै थिए धृतराष्ट्रले मीठो खानेकुरामा विष हालेर खान दिए तैपनि पाण्डवहरू त्यस विषले युक्त खानेकुराबाट पनि बच्न सफल भए । त्यसपछि – पुरुषाद-दर्शनात्-पाण्डवहरूले मान्छे खाने हिडिम्बा नाम गरेको राक्षसलाई भेटे तर भीमले त्यसलाई युद्ध गरेर मारे ।

एक पटक राजसभामा भएको जुवामा पाण्डवहरू ठगिए । धृतराष्ट्र, भीष्मदेव, द्रोणाचार्य र अन्य वयोवृद्ध उपस्थिति सभामा भएको जुवामा पाण्डवकी पत्नी द्रौपदीलाई जुवाको दाउमा राखियो कौरवले भने "यदि यस दाउमा तिमीहरू हार्‍यौ भने द्रौपदी तिमीहरूको पत्नी रहने छैनन्" जब त्यस दाउमा पाण्डवहरू हारे तत्काल कर्ण र दुःशासनले तुरुन्त द्रौपदीलाई समाते । त्यसपछि उनीहरूले भने "आजदेखि तिमी यी पतिहरूकी पत्नी होइनौ, तिमी हाम्री सम्पत्ति होऊ र हामीले जे चाहन्छौं तिमीसँग त्यही गर्न सक्दछौं ।"

पहिला द्रौपदी स्वयम्वरमा कर्णलाई अपमानित हुनपरेको थियो । त्यससमय स्वयम्बरको कार्यक्रममा अत्यन्त योग्य राजकुमारीले आफूलाई मन पर्ने पतिको आफैं चयन गर्दथिन् । आधुनिक अमेरिकामा पनि कुनै पनि युवतीले आफ्नो इच्छाअनुसारको युवकको चयन गर्न सक्दछिन् तर सामान्य युवतीका लागि भने यो त्यति शोभनीय मानिँदैन । साथै त्यससमयमा पनि धेरै नै असामान्य, अत्यधिक योग्य र जसले योग्य पति रोज्न जान्दछे उसलाई मात्र यस्तो अवसर प्रदान गरिन्थ्यो । यस्तो स्वयम्वर गर्ने कार्य ज्यादै नै सीमित र कठोर अवस्थामा मात्र गर्ने गरिन्थ्यो । उदाहरणका लागि – द्रौपदीका पिताले एउटा माछालाई घरको भित्री छतमा झुन्ड्याइदिए र जसले उनकी पुत्रीसँग विवाह गर्न चाहन्छ उसले छतमा रहेको माछालाई नहेरी तल भूइँमा रहेको पानीमा त्यस माछाको प्रतिविम्बलाई हेरेर माछाको आँखामा जसले वाण हान्न सक्दछ, उसैले विवाह गर्न पाउँदछ भन्ने सर्त राखेका थिए । जब यस सर्तको घोषणा गरियो चुनौती स्वीकार गर्नु क्षत्रियको सिद्धान्त भएको हुनाले धेरै राजकुमारहरू प्रतिस्पर्धा गर्न आए ।

द्रौपदीको स्वयम्वरमा कर्ण पनि उपस्थित थिए । द्रौपदीको मुख्य उद्देश्य भनेको अर्जुनलाई आफ्नो पति रोज्नुथियो तर यदि कर्णले प्रतियोगितामा भाग लिए, त्यो स्पर्धामा अर्जुन सफल हुन नसक्ने जानेकी थिइन् । फेरि त्यस समयमा कर्ण क्षत्रिय हुन् भन्ने पनि जानकारी थिएन किनभने कर्ण कुन्तीको विवाहपूर्व नै उनीबाट जन्मेका थिए । यो कुरा गोप्य राखिएको थियो । कर्णको पालन-पोषण एउटा सिकर्मीको घरमा भएको थियो । त्यसैले, उनी शूद्र भनेर चिनिन्थे । त्यही कुराको फाइदा लिँदै द्रौपदीले भनिन् "यस सभामा केवल क्षत्रियले मात्र भाग लिन सक्दछन् । त्यसैले, कुनै पनि सूतले यहाँ राखिएको सर्तअनुसार प्रतियोगितामा भाग लिएको हेर्न म चाहन्नँ" त्यसकारण, कर्ण त्यस प्रतियोगिताबाट बाहिरिन पुगे ।

कर्णले यसो हुनु आफ्नो ज्यादै अपमान भएको ठाने । त्यसैले, जब पाण्डवले जुवामा द्रौपदीलाई हारे त्यससमय सबैभन्दा अघि कर्ण नै आए । उनी दुर्योधनका घनिष्ठ मित्र थिए । उनले भने, "हामी द्रौपदीको नग्न सौन्दर्य हेर्न चाहन्छौं ।" उनले त्यसोभन्दा पनि त्यससभामा उपस्थित धृतराष्ट्र, भीष्म, द्रोणाचार्यजस्ता वयोवृद्ध पुरुषले पनि त्यस कुराको विरोध गरेनन् । उनीहरूले "यो के गर्न लागेका हौ ?" भनेर पनि भनेनन् । "तिमीहरूले यस सभामा स्त्रीलाई किन नाङ्गै बनाउन लागेका हौ ?" पनि भनेनन् । उनीहरूले त्यस्तो कार्यको विरोध नगरेका हुनाले उनीहरूलाई **असत् सभायाः** – असभ्य पुरुषको सभा भनियो । केवल असभ्य पुरुषले मात्र स्त्रीलाई नाङ्गै हेर्न चाहन्छ । हुनत अहिले त्यस्तो गर्नु प्रचलनजस्तै भइसक्यो । वैदिक संस्कृतिअनुसार कुनै पनि स्त्री आफ्नो पतिबाहेक अन्य पुरुषको अघि नाङ्गै हुनुहुँदैन । त्यसैले, त्यस विशाल सभामा द्रौपदीलाई नाङ्गै हेर्न चाहनेहरू सबै दुष्ट हुन् । सत् शब्दको अर्थ "भद्र" र असत् शब्दको अर्थ "अभद्र" हो । त्यसैले, कुन्तीदेवीले प्रार्थना गर्दै भनिन् – "हजुरले अभद्र पुरुषहरूको सभामा द्रौपदीको रक्षा गर्नुभयो ।" जब कुरुहरूले द्रौपदीलाई नाङ्गै भएको हेर्नका लागि उनको साडी तानिरहेका थिए त्यससमय भगवान् श्रीकृष्णले त्यो साडीमा यति धेरै कपडा थपिदिनुभयो, जसले गर्दा उनीहरूले त्यसको अन्त नै पाउन सकेनन् । अन्त्यमा सभा कक्षमा साडीको थुप्रो लाग्यो, उनीहरू पनि साडी तान्दातान्दै थाके अनि उनीहरूले द्रौपदी कहिल्यै पनि नाङ्गै हुन सक्दिनन् भन्ने अनुभव गरे । यो असम्भव छ भन्ने कुरा बुझे । पहिला त द्रौपदीले आफ्नो साडी समातिरहेकी थिइन् तर अन्त्यमा उनले के नै गर्न सक्दथिन् र ? उनी स्त्री थिइन् भने कुरुहरू उनलाई नाङ्गै बनाउने प्रयास गरिरहेका थिए । त्यसपछि उनले रुँदै भगवान् श्रीकृष्णको प्रार्थना गरिन् "मेरो लाज वचाउनुहोस् ।" तर, आफ्नो साडी भने आफैँले समातेर आफ्नो रक्षा गर्ने प्रयास गरिन् । उनले सोचिन् "यसरी मैले मेरो लाज बचाउन असम्भव छ" अनि आफ्ना दुवै हात माथि उठाएर प्रार्थना गर्दै भनिन्, "हे कृष्ण ! यदि हजुरले चाहनुभयो भने मलाई बचाउनुहोस् ।" त्यसपछि भगवान् श्रीकृष्णले उनको प्रार्थनालाई स्वीकार गर्नुभयो ।

त्यसकारण, मानिसले आफ्नो रक्षा गर्ने प्रयास गर्नु त्यति राम्रो होइन, बरु मानिस एक मात्र भगवान् श्रीकृष्णमा निर्भर हुँदै भन्नुपर्दछ, "हे भगवान् श्रीकृष्ण ! यदि हजुरले मेरो रक्षा गर्नुहुन्छ भने धेरै असल हुनेछ । होइन भने

मलाई मार्नुहोस्, हजुरलाई जे इच्छा लाग्छ, त्यही गर्नुहोस् ।" भक्ति विनोद ठाकुरले भन्नुहुन्छ –

**मानस, देह, गेह - जो किछु मोरे ।**
**अर्पिलुँ तुया पदे, नन्दकिशोर ॥**

"हे प्रिय प्रभु ! मसँग जे छ, सबै हजुरको चरणमा अर्पण गर्दछु । अरू मसँग के नै छ र ? मसँग यो शरीर छ, मन छ, सानो घर छ, मेरी पत्नी र बच्चाहरू छन् तर मसँग जे छ त्यो सबै हजुरमा समर्पण गर्दछु ।" यो नै पूर्ण समर्पण हो ।

भगवान् श्रीकृष्णका भक्तहरूले विनासङ्कोच आफूलाई भगवान् श्रीकृष्णमा समर्पित गर्दछन् । त्यसैले, यसलाई अकिञ्चन भनिन्छ । किञ्चनको अर्थ केही न केही आफूलाई बचाएर राख्नु हो भने अकिञ्चनको अर्थ आफूसँग बचाएर केही पनि नराख्नु र सम्पूर्ण समर्पण गर्नु हो । वास्तवमा मानिसले यसरी नै समर्पण गर्नुपर्दछ तर यस भौतिक जगत्मा मानिसले यसरी पूर्णरूपले समर्पित व्यक्तिको कृत्रिम तरिकाले नक्कल गर्नुहुँदैन । रूप गोस्वामीले प्रस्तुत गर्नुभएको उदाहरणअनुसार मानिसले आफ्नो सम्पत्तिको पचास प्रतिशत धन भगवान् श्रीकृष्णलाई अर्पण गर्नुपर्दछ । बाँकी पच्चीस प्रतिशत धन आफ्ना नातेदारहरू, जसले त्यस सम्पत्तिको आशा गरेका हुन्छन्, तिनीहरूलाई र बाँकी पच्चीस प्रतिशत आफ्नो निजी आवश्यकता र अपर्झट हुने खर्चका लागि राख्नपर्दछ । रूप गोस्वामीले आफूले कार्यबाट अवकाश पाउनुभन्दा अघि आफ्नो धनलाई यसरी नै बाँड्नु भएको थियो तर पछि आफ्ना भाइ सनातन गोस्वामी र अन्य महान् भक्तहरूलाई जब बन्दी बनाइयो, उनीहरूलाई बन्दी मुक्त गर्न रूप गोस्वामीले सबै धन खर्च गर्नुभयो । यो पूर्ण समर्पण भाव हो । यसरी नै, द्रौपदी पनि आफूले आफ्नो रक्षा नगरी पूर्णरूपले भगवान् श्रीकृष्णमा आफूलाई समर्पण गरेकी थिइन् । त्यसकारण, त्यहाँ असीमित लामो वस्त्र बढ्ने क्रम भयो, जसले गर्दा कुरुहरूले उनी नाङ्गै भएको हेर्न पाएनन् ।

तर, त्यसपछिको जुवाको दाउमा यदि पाण्डवले हारे उनीहरू बाह्र वर्षको वनवास जान पर्ने, एक वर्षको अज्ञातवास बस्नुपर्ने र यदि अज्ञातवासमा उनीहरूलाई चिनियो भने पुनः बाह्र वर्षको वनवासमा जानपर्ने सर्त राखियो । यो दाउ पनि पाण्डवले हारे त्यसैले, उनीहरू बाह्र वर्षको वनवास र एक वर्षको अज्ञातवासमा गए । जब पाण्डवहरू अज्ञातवासमा थिए, त्यहीसमय अर्जुनले उत्तरालाई जितेका थिए ।

यी सबै घटनाहरूको वर्णन महाभारत नामको ग्रन्थमा लेखिएको छ। महाको अर्थ विशाल र भारतको अर्थ भारतवर्ष हो। त्यसैले, महाभारत भनेको विशाल भारतवर्षको इतिहास हो। कहिलेकाहीँ कसैकसैले यो एउटा कथा वा पौराणिक भनाइ हो भन्दछन् तर त्यो सबै मूर्खतापूर्ण कुरा हो। महाभारत र सम्पूर्ण पुराण इतिहास हुन् हुनत तिनमा घटनाको बारेमा तिथि र बार उल्लेख गरेको पाइँदैन तर यदि ती इतिहासका घटनाहरूको विस्तृत रूपमा तिथि बार पनि उल्लेख गरिएको भए त्यो ग्रन्थ कति धेरै पृष्ठको हुन्थ्यो होला ? त्यसैले, अति महत्त्वपूर्ण घटनाहरू रोजेर र तिनको वर्णन महाभारतमा गरिएको छ।

भगवान् श्रीकृष्णले पाण्डवहरूलाई कुरुक्षेत्रको युद्धस्थलमा कसरी रक्षा गर्नुभयो त्यसको वर्णन गर्दै कुन्तीले भगवान्को प्रार्थना गरिन् – **मृधे मृधेऽनेकमहारथास्त्रतः** – कुरुक्षेत्रको युद्धस्थलमा महान् योद्धा जसलाई महारथ भनिन्छ, उनीहरू उपस्थित थिए। जसरी अहिले आधुनिक समयमा सैनिकका पदहरू लेफ्टीनेन्ट, क्याप्टन, कमान्डर र कमान्डर इन चिफ भनिन्छ, त्यसरी प्राचीन कालमा उनीहरूलाई एकरथ, अतिरथ र महारथजस्ता पद दिइन्थ्यो। कुनै योद्धा एउटा रथको विरुद्ध लड्दथ्यो भने उसलाई एकरथ भनिन्थ्यो। यदि ऊ हजारौँ रथका विरुद्ध लड्दथ्यो भने उसलाई महारथ भनिन्थ्यो। कुरुक्षेत्रको त्यस युद्धस्थलका सबै कमाण्डरहरू महारथ थिए। तीमध्ये धेरैको नाम भगवद्गीतामा पनि उल्लेख गरिएको छ र तिनमा मुख्य - भीष्म, द्रोणाचार्य र कर्ण हुन्। ती विशेष महान् कमाण्डर थिए। हुनत अर्जुन पनि महारथ हुन् तर उनीहरूका अघि उनी केही पनि होइनन्। भगवान् श्रीकृष्णका कृपाले गर्दा अर्जुन कर्ण, भीष्म र द्रोणाचार्यसहित अन्य योद्धाको वध गरेर विजयी हुन समर्थ भए। शुकदेव गोस्वामीसँग वार्ता गर्दा महाराज परीक्षितले यस कुराको उल्लेख गरेका छन्। "त्यो कुरुक्षेत्रको युद्धस्थल महासागरजस्तो हो र योद्धाहरू धेरै हिंस्रक जलचरजस्ता हुन् तर भगवान् श्रीकृष्णका कृपाले गर्दा मेरा हजुरबुबा अर्जुनले त्यो महासागर सजिलै पार गरे" भनेर उनले भनेका थिए।

हाम्रा धेरै र अति नै शक्तिशाली शत्रुहरू हुन सक्दछन् तर यदि हामी भगवान् श्रीकृष्णको संरक्षणमा बस्दछौँ भने हामीलाई कसैले पनि क्षति पुऱ्याउन सक्दैन। त्यसैले, यो परीक्षितले भनेको कुरा अति महत्त्वपूर्ण र सान्दर्भिक छ। **रखे कृष्ण मारे के मारे कृष्ण रखे के** – "यदि कसैलाई भगवान् श्रीकृष्णले रक्षा गर्नुहुन्छ भने त्यसलाई कसैले पनि मार्न सक्दैन र जसलाई भगवान् श्रीकृष्णले

मार्न चाहनुहुन्छ, त्यसलाई कसैले पनि रक्षा गर्न सक्दैन ।" उदाहरणका लागि – कुनै धनी व्यक्ति कुनै रोगले पीडित छ भने उसलाई अति उत्तम चिकित्सक, औषधी र अस्पताल उपलब्ध भए पनि ऊ मर्न सक्दछ र त्यसको अर्थ हुन्छ, भगवान् श्रीकृष्ण त्यस व्यक्तिको मृत्यु चाहनुहुन्छ । यदि यसरी भगवान्ले "त्यो व्यक्ति मर्नुपर्दछ" भन्ने चाहनुहुन्छ भने त्यसको मृत्यु हुन्छ । त्यसैले, यदि भगवान् श्रीकृष्णले हामी जीवित रहिरहेको चाहनुभएन भने हामीले अनुसन्धान गरेर पत्ता लगाएका कुनै पनि तथाकथित सुरक्षा उपायहरू सबै व्यर्थ नै हुन्छन् । असुर रावण ज्यादै शक्तिशाली थियो तर जब भगवान् श्रीकृष्ण रामचन्द्र अवतारमा आएर उसलाई मार्न चाहनुभयो कसैले पनि उसलाई बचाउन सकेनन् । रावण श्रीशिवको महान् भक्त थियो । जब ऊ सङ्कटमा पऱ्यो अनि उसले प्रार्थना गर्दै भन्यो – "हजुर आएर मलाई यो सङ्कटबाट रक्षा गर्नुहोस् ।" तर, श्रीशिव आउनुभएन । त्यो देखेर शिव पत्नी पार्वतीले श्री शिवसँग सोध्नुभयो – "यो के गर्नुभएको हो ? उनी हजुरका महान् भक्त हुन् र हजुरको धेरै सेवा पनि गरेका छन् । अहिले उनी सङ्कटमा परेका छन् र हजुरसँग सहायताका लागि प्रार्थना पनि गरेका छन् तर हजुरले भने उनको सहायता किन गर्नुहुन्न ?" त्यसपछि श्रीशिवले उत्तर दिँदै भन्नुभयो – "हे प्रिय पार्वती ! म के गरुँ ? मैले उसलाई सुरक्षा दिन सक्दिनँ त्यो सम्भव नै छैन अनि म के गरुँ ?" त्यसैले, भगवान्ले कसैलाई मार्न चाहनुभयो भने उसको कसैले पनि रक्षा गर्न सक्दैन र यदि भगवान्ले कसैलाई बचाउन चाहनुभयो भने उसलाई कसैले पनि मार्न सक्दैन – **रखे कृष्ण मारे के मारे कृष्ण रखे के ।**

यसरी, भगवान्ले कुन्ती र उनका छोराहरूलाई एकपछि अर्को सङ्कटबाट कसरी रक्षा गर्नुभयो भनेर कुन्तीले स्मरण गरेकी छिन् । यो नै स्मरण अर्थात् भगवान् श्रीकृष्णको चिन्तन हो "हे कृष्ण ! हजुर हामी प्रति ज्यादै कृपालु हुनुहुन्छ । त्यसैले, हामीलाई ठूलाठूला र धेरै महान् सङ्कटबाट बचाउनुभयो हजुरविना हाम्रो अरू कोसँग नै आशा थियो र !"

अन्तिम सङ्कट भनेको द्रोणाचार्यका पुत्र अश्वत्थामाबाट प्रहार गरिएको द्रौण्यास्त्र थियो । अश्वत्थामाले पाण्डवका पाँच पुत्रलाई मारेर ज्यादै घृणित कार्य गरेका थिए । हुनत कुरुक्षेत्रको युद्धमा युद्ध गर्ने दुवै पक्षमा एउटै वंशका योद्धाहरू थिए । एक प्रकारले सबै नै मरिसकेका पनि थिए भने केवल पाण्डवका पाँच छोरा जीवित थिए । त्यसैले, अश्वत्थामाले सोचे "यदि मैले यी पाण्डवका

पाँच छोरालाई मारेर तिनको टाउको दुर्योधनलाई भेट गरेँ भने उनी प्रसन्न हुनेछन् ।" त्यसकारण, उनले जब पाँच छोराहरू सुतेका थिए तिनीहरूको टाउको काटेर ती टाउको दुर्योधनलाई भेंट गरे । त्यससमय दुर्योधनको शक्ति क्षीण भइरहेको थियो । उनको मेरुदण्डको हड्डी भाँच्चिएकाले हिँड्डुल गर्न पनि सकेका थिएनन् । "मैले पाँच वटा टाउको ल्याएको छु, प्रिय दुर्योधन" भनेर अश्वत्थामाले भने । त्यो देखेर पहिला त दुर्योधन निकै प्रसन्न भए तर उनलाई ती टाउका पाण्डवका कि होइनन् भनेर परीक्षा लिन आउँदथ्यो । त्यसैले, ती टाउकाहरूलाई बलपूर्वक अठ्याए । ती टाउका फुटे । त्यसपछि दुर्योधनले भने, "अहो ! यी त पाण्डवका टाउका होइनन्, यी त तिनका पाँचवटा छोराका हुन् ।" जब अश्वत्थामाले त्यो कुरा स्वीकार गरे, दुर्योधन मूर्छित भए अनि जब उनको होस फर्क्यो उनले भने, "तिमीले हाम्रो सम्पूर्ण आशालाई मारिदियौ । हाम्रो परिवारमा कम्तीमा यी पाँचवटा छोरा त बाँचेका छन् भन्ने जुन आशा थियो त्यो पनि तिमीले यिनलाई मारेर समाप्त गरिदियौ ।" त्यो शोकले गर्दा उसको मृत्यु भयो ।

त्यसपछि अर्जुनले अश्वत्थामालाई समातेर बन्दी बनाए अनि उसलाई मार्न तयार भए । वास्तवमा भगवान् श्रीकृष्णले नै अर्जुनलाई अदेश दिनुभएको थियो, "यसलाई मार यो ब्राह्मण होइन र यो शूद्रभन्दा तल्लोस्तरको हो" भनेर तर त्यही समयमा द्रौपदीले भनिन्, "म आफ्ना पुत्रहरूको मृत्युको कारणले गर्दा कष्ट भोगिरहेकी छु । यो दुष्ट हाम्रा गुरु महाराज द्रोणाचार्यका पुत्र हुन् । गुरुले हाम्रा लागि धेरै कार्य गर्नुभएको छ । यदि यस अश्वत्थामालाई मार्‍यौं भने द्रोणाचार्यकी पत्नी र हाम्री गुरुआमा पनि दु:खी हुनु हुनेछ त्यसैले, यसलाई छोडिदिनुहोस् ।" त्यसपछि अर्जुनले छोडिदिए । यसरी आफू अपमानित भएका कारणले गर्दा अश्वत्थामाले आणविक शस्त्रसमानको ब्रह्मास्त्र प्रहार गरेर त्यस अपमानको बदला लिए । त्यो ब्रह्मास्त्रले शत्रु जहाँ भएपनि त्यहाँ गएर शत्रुलाई मार्दछ । अश्वत्थामालाई कुरुवंशको अन्तिम वंशज अभिमन्युको छोरा परीक्षित उत्तराका गर्भमा छन् भन्ने थाहा थियो । त्यसैले, यदि मैले त्यसलाई मारेँ भने कुरु वंश नै समाप्त हुन्छ भन्ने सोचे ।

जब ब्रह्मास्त्र प्रहार भयो अनि महाराज परीक्षितकी आमा उत्तरालाई आफ्नो गर्भ पतन हुन लाग्यो भन्ने आशङ्का भयो । त्यसैले, उनी भगवान् श्रीकृष्ण भएका स्थानमा गएर भनिन् - "कृपया मलाई बचाउनुहोस् ।" त्यसपछि भगवान्

श्रीकृष्णले आफ्नो योगशक्तिद्वारा उत्तराको गर्भमा प्रवेश गरेर शिशुलाई बचाउनुभयो । कुरुक्षेत्रको युद्धपछि महाराज परीक्षित आफ्नी आमाको गर्भमा थिए । उनी नै पाण्डवहरूका अन्तिम जीवित सन्तान थिए । समय पूरा भएपछि उनको जन्म भयो उनी जन्मदा उनका हजुरबुबा मात्र जीवित थिए । महाराज परीक्षित अभिमन्युका छोरा थिए र अभिमन्यु भगवान् श्रीकृष्णकी बहिनी सुभद्रा र अर्जुनका छोरा थिए । अभिमन्यु जब सोह्र वर्षका थिए, उनी पनि युद्ध गर्न गए उनलाई युद्धमा सात जना सेनापतिहरू मिलेर मारेका थिए । त्यसैले, सुभद्राका एउटा मात्र नाति महाराज परीक्षित थिए । जब उनी बढेर युवा भए अनि पाण्डवले आफ्नो साम्राज्य उनलाई सुम्पेर आफूहरू हिमालतिर गए । यो सबै कथा महाभारतमा वर्णन गरिएको छ । पाण्डवहरू धेरै कष्ट र विपत्तिहरूमा परे तर उनीहरू प्रत्येक परिस्थितिमा केवल भगवान् श्रीकृष्णमा नै निर्भर रहन्थे । उनीहरूलाई उहाँले सधैँ रक्षा गर्नुभयो । यी विपत्तिहरूप्रतिको कुन्तीको प्रतिक्रिया अब आउने श्लोकमा उल्लेख गरिएको छ ।

***

# ८. विपत्ति आए पनि हुन्छ

**विपदः सन्तु ताः शश्वत तत्र तत्र जगद्गुरो ।**
**भवतो दर्शनं यत् स्यादपुनर्भवदर्शनम् ॥**

म त यस्ता कष्ट र विपत्ति बारम्बार आइरहोस् भन्ने चाहन्छु किनभने त्यसले गर्दा हामीले बारम्बार हजुरको दर्शन गर्न सक्दछौं । हजुरको दर्शनको अर्थ बारम्बार हुने जन्म-मृत्युलाई हामीले देख्नपर्दैन ।

**–(श्रीमद्भागवत् १.८.२५)**

साधारणतया जुन व्यक्ति कष्टमा परेको छ, उसलाई कुनै कुराको आवश्यकता परेको छ, बुद्धिमान् छ वा जिज्ञासु छ भने त्यस्ता व्यक्तिले केही पुण्य कर्म गरेपछि मात्र उसले भगवान्को पूजा गर्दछ वा पूजा गर्न प्रारम्भ गर्दछ । तर, अन्य व्यक्ति, जसले दुष्कर्म गरेर सम्पन्न भएर वा फस्टाएर जुनस्तरमा पुगेको भए पनि मायाद्वारा भ्रमित भएको हुनाले भगवान्तर्फ आउने प्रयास गर्दैन । त्यसैले, पुण्य आत्माहरूलाई विपत्ति आयो भने उनीहरूलाई भगवान्का चरणकमलको शरण लिनुबाहेक अन्य कुनै विकल्प नै हुँदैन । निरन्तर भगवान्का चरणकमलको स्मरण गर्नु भनेको जन्ममृत्युको चक्रबाट मुक्ति पाउने तयारी हो । त्यसैले, त्यस्ता तथाकथित आपत्ति र विपत्ति आए पनि त्यसको स्वागत गर्नुपर्दछ किनभने त्यसैका कारणले भगवान्को स्मरण गर्ने अवसर प्राप्त हुन्छ र त्यसको अर्थ मुक्ति प्राप्त गर्नुहुन्छ ।

जसले भगवान्का चरणकमलको शरण लिएको हुन्छ, त्यसलाई अविद्या र अज्ञानताको सागर पार गराउने उपयुक्त नाउँ मानिएको छ । उसले जसरी गाईको खुरले बनाएको खाल्डोलाई सजिलै फड्केर जान सकिन्छ त्यसरी नै सरलतापूर्वक मुक्ति प्राप्त गर्न सक्छ । यस्ता व्यक्तिहरू भगवान्को धाममा निवास गर्नका लागि हुन् । त्यस्तो स्थान, जहाँ विपत्ति आइरहन्छ, त्यहाँ उनीहरूको कुनै काम नै हुँदैन ।

यो भौतिक जगत् आपत् र विपत्‌ले परिपूर्ण स्थान हो भनेर भगवान्‌ले भगवद्‌गीतामा भन्नुभएको छ। अल्पज्ञानीहरू भने यो जगत् आपत र विपत्तिले भरिएको छ भन्ने नजानीकनै त्यस आपत् र विपत्तिलाई समायोजन वा आफ्नो अनुकूल बनाउने प्रयास गर्दछन्। उनीहरूलाई विपत्तिरहित र आनन्दले युक्त भगवान्‌को धामका बारेमा अलिकति पनि जानकारी हुँदैन। त्यसैले, यस्ता भौतिक जगत्‌का विपत्तिहरूमा अविचलित भएर बस्नु नै ज्ञानी व्यक्तिको कर्तव्य हो किनभने विपत्ति जुनसुकै परिस्थितिमा पनि हुने कुरा निश्चित नै हुन्छ। कुनै पनि अवस्थामा विपत्तिबाट मुक्त हुन नसक्ने हुनाले तिनको सामना गर्दै मानिसले आध्यात्मिक साक्षात्कारको मार्गमा अघि बढ्नुपर्दछ। मानव जीवनको उद्देश्य पनि त्यही नै हो। हुनत आत्मा यी सबै भौतिक आपत् विपत्‌भन्दा माथि हुन्छ, त्यसैले यी तथाकथित विपत्तिहरू झुटा हुन्। मानिसले सपनामा आफूलाई बाघले निलेको देख्छ र ऊ ठुलो स्वरले कराउँदछ तर वास्तवमा बाघ पनि हुँदैन र त्यो विपत्ति पनि हुँदैन। त्यो केवल एउटा सपना मात्र हुन्छ। यसरी यी जीवनका सबै विपत्तिहरू व्यक्तिले भक्तिद्वारा भगवान्‌को सामीप्य प्राप्त गर्न सक्दछ भने त्यो भाग्यशाली नै हो। नौ प्रकारका भक्ति (नवधा भक्ति) मध्ये कुनै पनि एउटाको माध्यमद्वारा भगवान्‌को सामीप्य प्राप्त गर्न सकिन्छ भने त्यो कार्य भगवान्‌को धाम जाने मार्गमा राखिएको पहिलो पाइलो हुन्छ।

यो अति मनोहर श्लोकमा विपत्तिको वर्णन गरिएको छ र विपद आउनुभनेको असल हो किनभने यस्ता आपत्‌विपत्‌ले भगवान् श्रीकृष्णको स्मरण गराउँदछन्।

**तत्तेऽनुकम्पां सुसमीक्षमाणो ।**
**भुञ्जन एकवात्मकृतं विपाकम् ॥**
**(भगवत १०.१४.८)**

भक्तहरूले विपत्तिलाई कसरी ग्रहण गर्दछन्? यो भौतिक जगत् सङ्कट र विपत्तिले पूर्ण छ। त्यसैले, विपत्ति त हुने नै भयो। तर, मूर्खहरूलाई यस्ता विपत्ति हुन्छन् भन्ने जानकारी नभएको हुनाले त्यसबाट बच्न चाहन्छन् वा त्यसलाई अस्वीकार गर्न चाहन्छन्। त्यसैले, तिनीहरूले बाँच्नका लागि सङ्घर्ष गरिरहन्छन्। प्रत्येक व्यक्ति कष्ट र विपत्तिबाट मुक्त भएर सुखी हुने प्रयास गर्दछ। यो नै हाम्रो भौतिक कार्य पनि हो। प्रत्येक व्यक्ति – **अत्यन्तिकं सुखम्** – चरम सुखको लागि प्रयास गरिरहन्छ। भौतिक कार्यमा लागेको व्यक्तिले सोच्दछ "अहिले ज्यादै कठिन परिश्रम

गर्दछु अनि प्राप्त धनलाई बैङ्क राख्नेछु र जब म वृद्ध हुन्छु, त्यो धन खर्च गरी विनाकार्य नै सुखसँग जीवन बिताउँदछु ।" प्रत्येक व्यक्तिको भित्री आकाङ्क्षा यस्तै हुन्छ । कुनै पनि व्यक्ति काम गर्न चाहँदैन जब उसले धन प्राप्त गर्दछ, तत्काल ऊ काम गर्नबाट अवकाश लिन चाहन्छ र सुखी हुन चाहन्छ । यसो गरेर मानिस सुखी हुन सम्भव छैन । यो तरिकाले मानिस सुखी हुन सक्दैन ।

यहाँ कुन्तीदेवीले **अपुनर्भवदर्शनम्** भनेकी छन् । 'अ' को अर्थ होइन हुन्छ र **'पुनर्भवको'** अर्थ जन्म-मृत्यु भइरहने हो । त्यसैले, मानिसको मुख्य खतरा वा सङ्कट भनेको नै जन्म-मृत्यु भइरहनु हो र यो उसले रोक्नपर्दछ ।

यो भौतिक जगत् कष्ट र विपत्तिले पूर्ण छ वा भरिएको छ, (**पदं पदं यद् विपदाम्**) । प्रत्येक पाइलापाइलामा विपत्ति छन् । उदाहरणका लागि, यदि कुनै व्यक्ति आफ्नो बलियो जहाज लिएर समुद्रमा जान्छ भने पनि उसको जहाज त्यति सुरक्षित हुँदैन किनभने समुद्रमा यात्रा गर्ने कहिल्यै पनि सुरक्षित हुँदैन । जुनसुकै समय खतरा भइरहन्छ । टाइटेनिक नाम गरेको पानी जहाज सुरक्षित थियो तर उसको पहिलो सामुद्रिक यात्रामा नै त्यो डुब्यो र धेरै महत्त्वपूर्ण व्यक्तिहरूको जीवन समाप्त भयो । हामी खतरनाक अवस्थामा छौँ । त्यसैले, हामीमाथि खतरा आइरहन्छ । यो भौतिक जगत् पनि स्वयम्मा खतरनाक छ । त्यसैले, यो खतराले युक्त समुद्रबाट जति सक्दो चाँडो पार गर्नु नै हाम्रो कर्तव्य हो । जबसम्म हामी समुद्रमा छौं हामीसँग जतिसुकै बलियो र सुरक्षित जहाज भएपनि हामी सधैं खतरनाक अवस्थामा रहिरहन्छौं र त्यो वास्तविक सत्य पनि हो तर हामीहरू समुद्रका लहर देखेर विचलित हुनहुँदैन । बरु, समुद्रलाई पार गर्ने प्रयास गर्दै अर्को किनारातर्फ पुग्ने प्रयास गर्नुपर्दछ । त्यो नै हाम्रो कार्य र कर्तव्य हुनपर्दछ ।

जबसम्म हामी यस भौतिक जगत्मा बस्दछौं तबसम्म विपत्तिहरू आइरहन्छन् किनभने यो जगत् विपत्ति हुने स्थान हो । तर जति विपत्तिहरू आए पनि हाम्रो कार्य भनेको कृष्णचेतना वा कृष्णभावनामृत विकास गर्ने हुनुपर्दछ जसले गर्दा यो शरीर छोडेपछि हामी भगवान् श्रीकृष्णका समीप भगवान्को धाम फर्कन सकौं ।

कुरुक्षेत्रको युद्धस्थलमा अर्जुनले भगवान् श्रीकृष्णसँग भने – "हजुरले जे भन्नुभएको छ, त्यो सबै सत्य हो । म शरीर होइन, म आत्मा हुँ ।" साथै यो सबैका लागि पनि सही वा सत्य नै हो । जब यो शरीर नष्ट हुन्छ, त्यससमय

पनि आत्मा भने रहिरहन्छ तर जब मैले मेरो छोरो मरेको वा मेरो हजुरबुबा मरेको देख्दछु वा उनीहरूलाई मैले मार्दछु त्यससमय तिनीहरू मरेका छैनन् । केवल तिनीहरूको शरीरमा परिवर्तन आएको छ भनेर मैले कसरी सान्त्वना प्राप्त गर्न सक्दछु वा विश्वस्त हुन सक्दछु ? म तिनीहरूको शरीरको रूपमा नै प्रेम र स्नेहपूर्वक सोच्न अभ्यस्त छु । त्यसैले, उनीहरूको शरीर मर्दा शोक र कष्ट हुनु स्वाभाविक नै हो ।

अर्जुनले भनेका ती कुरालाई भगवान् श्रीकृष्णले होइन भन्नुभएन । स्वीकार गर्दै हो, त्यो सत्य हो भन्नु भयो किनभने तिमी शारीरिक बुद्धीमा छौ । त्यसैले, कष्ट त हुन्छ नै तर त्यो तिमीले सहनुपर्दछ । त्यसको अन्य कुनै समाधान नै छैन । भगवद्गीतामा (२.१४) उल्लेख भएअनुसार भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभयो ।

**मात्रास्पर्शस्तु कौन्तेय शीतोष्णसुखदुःखदाः ।**
**आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत ॥**

हे कुन्ती पुत्र ! जसरी गर्मी र जाडो क्षणिक छन् र आउनेजाने गर्दछन्, त्यसरी नै सुख-दुःख पनि कालचक्र वा समयअनुसार आउनेजाने गर्दछन् । हे भरतवंशी ! ती सबै इन्द्रियद्वारा जानेपछि उत्पन्न हुन्छन् र मानिसले अविचलित भएर सहन सिक्नुपर्दछ ।

अमेरिकामा कहिलेकाहीँ बिहान ज्यादै जाडो हुन्छ । त्यसैले, भक्तलाई बिहानको स्नान गर्न कठिन हुन्छ तर त्यसको अर्थ भक्तलाई तोकिएको बिहानको स्नान कार्य बन्द गर्नु हो त ? होइन । जतिसुकै जाडो भए पनि उनीहरूले स्नान गर्नैपर्दछ । आफूलाई केही कष्ट भएपनि आफ्नो कर्तव्य पूरा गर्नैपर्दछ । त्यसलाई नै तपस्या भनिन्छ । तपस्याको अर्थ हामीलाई जस्तोसुकै कष्ट वा विपत्ति आए पनि हामी कृष्णचेतना वा कृष्णभावनामृतको कार्यमा अघि बढ्नुपर्दछ । यसलाई, तपस्या अथवा स्वेच्छाले विपत्ति र कष्टलाई स्वीकार गर्नु भनिन्छ ।

कहिलेकाहीँ कठोर व्रत धारण गर्ने व्यक्तिले गर्मी महिनामा माथिबाट पोल्ने घाम र आफ्नो चारैतिर आगो बालेर बिचमा बसेर ध्यान गर्दछन् । तपस्याको कठोर प्रणालीमा यस्ता व्रत गर्नु भनेर उल्लेख गरिएको छ । तर, श्रीचैतन्य महाप्रभुले हामीलाई यस्तो आदेश वा निर्देशन दिनुभएन, उहाँले हामीलाई कीर्तन गर्ने, नाच्ने र भगवान् श्रीकृष्णलाई अर्पण गरेको भोजन ग्रहण गर्ने उत्तम कार्यक्रमको आदेश दिनुभयो । तैपनि हामी त्यसो गर्ने इच्छा पनि गर्दैनौं ।

हामीहरू यति पतित छौं, यस्तो सजिलो तपस्या पनि स्वीकार गर्दैनौं । यस्तो तपस्या सम्पन्न गर्न अति सरल र अत्यन्त सुखद हुन्छ **(सुसुखं कर्तुमव्ययम्)** तैपनि हामी त्यो स्वीकार गर्न तयार छैनौं बरु हामी सडकमा सडेर बस्न तयार छौं । कति मानिस रक्सी पिउन, सम्भोग गर्न र सडकमा नै बस्न रुचाउँछन् भने हामीले के नै गर्न सक्दछौं र ?

यस कृष्णभावनामृत आन्दोलनले त्यस्ता व्यक्तिहरूलाई हाम्रोमा आएर कीर्तन गर्ने, नाच्ने, शान्तिपूर्वक बस्ने र कृष्णप्रसाद ग्रहण गर्दै सुखपूर्वक बस्ने सबै सुविधा प्रदान गरेको छ तर मानिसहरूलाई त्यो स्वीकार्य नै छैन । त्यसलाई दुर्भाग्य नै भनिन्छ । त्यसैले, यस युगका मानिसहरूको चित्रण गर्दै श्रीचैतन्य महाप्रभुले भन्नुहुन्छ "म यति अभागी छु मेरो हरे कृष्ण कीर्तनप्रति कुनै अनुराग नै छैन ।" त्यसैले, चैतन्य महाप्रभुले स्तुति गर्दै भन्नुहुन्छ –

**नाम्नामकारि बहुधा निजसर्वशक्ति-**
**स्तत्रार्पिता नियमितः स्मरणे न कालः ।**
**एतादृशी तव कृपा भगवन् ममापि**
**दुर्दैवमीदृशमिहाजनि नानुरागः ॥**
**(शिक्षाष्टक २)**

भगवान्को दिव्य पवित्र नाम "कृष्ण" मा सम्पूर्ण शक्ति विद्यमान हुन्छ – चैतन्य महाप्रभुले भन्नुभएको छ । भगवान् श्रीकृष्णसँग असीमित शक्तिहरू छन् । यसैगरेर उहाँको नाममा पनि "कृष्ण" मा पनि असीमित शक्तिहरू छन् । भगवान् श्रीकृष्णका हजारौं नाम छन् । तीमध्ये "कृष्ण" नाम मुख्य हो । त्यसैले, यो नामको जप गर्न कुनै कठोर नियम र विधान छैन । यो नाम कुनै विशेष समयमा मात्र जप्नुपर्दछ भन्ने छैन, यो कुनै पनि समय जप्न सकिन्छ । भगवान् श्रीकृष्णको नाम स्वयम् भगवान् श्रीकृष्ण भन्दा भिन्न छैन । त्यसैले, भगवान् श्रीकृष्णको पवित्र नाम नै कृष्ण हो ।

भगवान् श्रीकृष्ण आफ्नो धाम गोलोक वृन्दावनमा बस्नुहुन्छ र उहाँको नाम उहाँबाट भिन्न छ भनेर हामीले सोच्नुहुँदैन । भौतिक जगत्मा हाम्रा भौतिक विचारअनुसार यहाँका नाम भने उसले प्रदर्शन गर्ने तथ्यभन्दा भिन्न हुन्छ । तर, परम जगत्मा भने यस्तो भिन्नता हुँदैन । भगवान् श्रीकृष्णमा जति शक्ति हुन्छ, उहाँको नाममा पनि त्यति नै शक्ति हुन्छ । हामीसँग जिब्रो छ । यदि हामीले त्यो जिब्रोलाई हरे कृष्ण जप्न र कीर्तन गर्न प्रयोग गर्‍यौं भने हामी तुरुन्त भगवान्

श्रीकृष्णको सम्पर्कमा हुनेछौं किनभने व्यक्तिरूपी भगवान् श्रीकृष्ण र उहाँको नाममा कुनै भिन्नता नै छैन । हामीले सोच्न सक्दछौं भगवान् श्रीकृष्ण हामीभन्दा धेरै पर हुनुहुन्छ तर वास्तवमा उहाँ हामीसँगै हुनुहुन्छ । उहाँ हामीभन्दा धेरै पर हुनुहुन्छ तर त्यही समयमा नै उहाँ हाम्रो सबैभन्दा नजिक पनि हुनुहुन्छ तर फेरि पनि हामीले भगवान् श्रीकृष्ण हामीभन्दा धेरै पर हुनुहुन्छ भनेर सोचे पनि उहाँको नाम भने हामीसँगैं हुन्छ । हामीले हरे कृष्ण जपौं र कीर्तन गरौं, भगवान् श्रीकृष्ण तुरुन्त हामीलाई प्राप्त हुनुहुन्छ । भगवान् श्रीकृष्णलाई यो अति सरल विधिबाट प्राप्त गर्न सकिन्छ र यो विधिको प्रयोग गर्न कुनै नियम र विधानको बन्धन छैन । कुनै पनि समय जपौं वा कीतर्न गरौं, हामीले भगवान् श्रीकृष्णलाई प्राप्त गर्न सक्दछौं । हेर त भगवान् श्रीकृष्णको कृपा !

त्यसैले, श्री चैतन्य महाप्रभुले भन्नुभएको छ – **एतादृशी तव कृपा भगवन् ममापि दुर्दैवमीदृशम् इहाजनि नानुरागः** – "हे प्रिय प्रभु ! हजुरले मलाई यति उदार सुविधा प्रदान गर्नुभएको छ, जसले गर्दा मैले हजुरलाई सजिलै सम्पर्क गर्न सक्दछु तर म यति अभागी छु, मलाई ती वस्तुप्रति कुनै आसक्ति नै छैन । मेरो अन्य धेरै वस्तुप्रति आसक्ति छ तर हरे कृष्ण जप गर्नेतर्फ मेरो आकर्षण छैन र यो नै मेरो दुर्भाग्य हो ।" भगवान् श्रीकृष्ण यति उदार र विशाल हृदयको हुनुहुन्छ । उहाँ हाम्राअघि आफ्नो नामको दिव्य ध्वनिसहित उपस्थित हुनुहुन्छ । त्यस नाममा स्वयम् भगवान् श्रीकृष्णका शक्ति विद्यमान रहेका हुन्छन् र पनि हामी त्यस नामको सम्पर्कमा आयौं भने भगवान् श्रीकृष्णबाट प्राप्त हुने सबै वरदान प्राप्त गर्ने लाभ लिन सक्दछौं । तर पनि, हामी हरे कृष्णको जप र कीर्तन गर्नतिर लाग्दैनौं, त्यो नै हाम्रो दुर्भाग्य हो ।

भक्तहरू खतरा, पराजय र विपत्ति, कुनैबाट पनि विचलित हुँदैनन् । उनीहरू त झन् त्यसको स्वागत नै गर्दछन् किनभने उनीहरूजस्ता शरणमा परेकाहरूलाई यस्ता खतरा र उत्सव सबै परमसत्य भगवान् श्रीकृष्णले देखाउनुभएका विभिन्न प्रकारका प्रदर्शन हुन् भन्ने जानकारी हुन्छ । वैदिक साहित्य वा शास्त्रमा भनिएको छ, धर्म र अधर्म जुन एक अर्कामा विपरीत हुन् ती दुवै भगवान्को शरीरका अघिल्ला भाग र पछिल्ला भाग हुन् । तर, के भगवान्को अघिल्लो र पछिल्लो भागमा केही फरक छ ? भगवान् सर्वोच्च र परम हुनुभएका हुनाले भक्तहरू ऐश्वर्य र सङ्कट दुवै अवस्थामा अविचलित हुन्छन् किनभने यी दुवै अवस्थामा भगवान् श्रीकृष्ण हुनुहुन्छ भनेर तिनले जानेका हुन्छन् ।

जब भक्तलाई सङ्कट आइपर्दछ, उसले "अहिले भगवान् श्रीकृष्ण मेराअघि सङ्कटका रूपमा देखा पर्नुभएको छ" भन्ने सोच्दछ । भगवान् जब नृसिंहदेवकारूपमा आउनुभयो, त्यो रूप राक्षस हिरण्यकशिपुका लागि खतरापूर्ण थियो भने सोही नृसिंहदेवको रूप भक्त प्रह्लाद महाराजका लागि परम मित्रवत् थियो । भगवान् भक्तका लागि कहिल्यै पनि सङ्कटपूर्ण वा खतरनाक हुनुहुन्न र भक्त कहिल्यै पनि सङ्कट आइपऱ्यो भनेर डराउँदैन किनभने उसलाई सङ्कट भनेको भगवान्को अर्को रूप हो भन्ने कुरामा पूर्ण विश्वास हुन्छ । अनि, भक्तले सोच्दछ, "म उहाँसँग किन डराऊँ ? म त उहाँको शरणमा परेको छु ।"

त्यसैले, कुन्तीदेवीले भन्दछिन् – **विपदः सन्तु** – विपत्तिहरू आइरहून् ।" **विपदः सन्तु ताः शश्वत्** – "विपत्तिहरू बारम्बार आइरहुन्" किनभने उनलाई सङ्कटको समयमा भगवान् श्रीकृष्णको स्मरण कसरी गर्ने जानकारी थियो । त्यसैले, उनले सङ्कटलाई स्वागत गरिरहेकी छिन् "हे भगवान् ! म सङ्कटलाई स्वागत गर्दछु किनभने जब सङ्कट आउँदछ अनि म हजुरको स्मरण गर्न सक्दछु ।" जब प्रह्लाद महाराजलाई उनका पिताले सङ्कटले युक्त यातना दिइरहन्थे, त्यससमय प्रह्लादले निरन्तर भगवान् श्रीकृष्णको स्मरण गरिरहन्थे । जब हामीलाई सङ्कट आइपर्दछ, त्यस सङ्कटले हामीलाई भगवान् श्रीकृष्णको स्मरण गर्ने प्रेरणा प्रदान गर्दछ । त्यसैले, त्यस्तो सङ्कटलाई स्वागत गर्दै भन्दछौं "अहो ! मैले भगवान् श्रीकृष्णको स्मरण गर्ने अवसर प्राप्त गरें ।" यस्तो स्वागत किन गर्नपऱ्यो ? स्वागत किन गर्नपऱ्यो भने त्यस्तो सङ्कटले भगवान् श्रीकृष्णको दर्शन हुन्छ वा स्मरण हुन्छ । त्यसको अर्थ हामी आध्यात्मिक जीवनमा प्रगति गर्दै अघि बढ्दछौं अनि त्यसले गर्दा हामीले यी अरू सङ्कटबाट कष्ट पाउनुपर्दैन । **त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन** (भगवद्गीता ४.९) । यदि कोही पनि कृष्णचेतना वा कृष्णभावनामृतमा अघि बढ्दछ त्यसको परिणामस्वरूप यस शरीरलाई त्यागेपछि (**त्यक्त्वा देहं**) उसले फेरि यस भौतिक जगत्मा जन्म लिनुपर्दैन (**पुनर्जन्म नैति**) । हाम्रो यस्तै इच्छा हुनुपर्दछ ।

अनुमान गरौं, अहिले म अति आरामपूर्वक छु । अहिले यस शरीरमा म आरामपूर्वक भएपनि मेरो मृत्यु हुने निश्चित छ र मृत्युपश्चात् अर्को जन्म हुनेछ । अहिलेको यो मेरो शरीरलाई त्याग गरेपछि मैले कुकुर वा बिरालोको शरीर पाएँ भने अहिलेको यो आरामदायक अवस्थाको के नै अर्थ हुन्छ र ? मृत्यु निश्चित छ र मृत्युपश्चात् अर्को शरीर धारण गर्नुपर्ने पनि निश्चित नै छ ।

हामीले मृत्युपछि कस्तो शरीर प्राप्त गर्दछौं भन्ने जानकारी हामीलाई नहुन सक्दछ तर त्यसको बारेमा हामीले शास्त्र वा वैदिक साहित्यबाट थाहा पाउन सक्दछौं । शास्त्र भन्दछ, हाम्रो विशेष प्रकारको मनोवृत्ति अनुसार नै कुनै शरीर प्राप्त गर्दछौं । यद्यपि, म अहिले धेरै आरामपूर्वक बस्न सक्दछु तर यदि मेरो मनोवृत्ति कुकुरको जस्तो भयो भने अर्को जन्ममा मैले कुकुरको शरीर पाउँदछु । त्यसैले, यो आरामदायी अवस्थाको के नै अर्थ हुने भयो र ? म बीस वर्ष, तीस, पचास वा धेरै भन्दा धेरै सय वर्षसम्म आरामदायी जीवनमा वस्न सकूँला । त्यसपछि मेरो शरीर त्याग गर्ने समयमा मेरो मनोवृत्ति जस्तो छ सोहीअनुसार अर्को जन्ममा कुकुर, बिरालो वा मुसो बन्न सक्दछु । त्यसैले, अहिलेको यो आरामदायी जीवनको के नै अर्थ भयो र ? तर, मानिसहरूले यो कुरालाई बुझ्ने प्रयास नै गर्दैनन् त्यसैले, विशेष गरेर यस युगका मानिस सोच्दछन् "म अहिले आरामदायी अवस्थामा छु, मसँग प्रशस्त धन र जग्गा जमिन छ, मसँग प्रशस्त सुविधाका साधन र अन्न छन्, जब मैले यो शरीरलाई त्याग गर्दछु, मेरो अर्को जन्म हुँदैन । त्यसैले, जबसम्म म बाँच्दछु, तबसम्म जीवनमा सुखको भोग गर्दछु ।" आनन्दवादको आधुनिक दर्शन भनेको यो नै हो तर वास्तवमा यो तथ्य होइन ।

तर कुन्तीलाई भने जन्ममृत्यु हुन्छ भन्ने बारेमा ज्ञान छ । त्यसैले, उनी यो चक्र चलिरहोस् भन्ने चाहन्नन् । त्यो कुरा यो शब्द **अपुनर्भवदर्शनम्** ले जनाउँदछ । यदि कसैले नित्य भगवान् श्रीकृष्णको दर्शन गर्दछ भने उसले कृष्णचेतना प्राप्त गर्दछ । कृष्णचेतना प्राप्त गर्नु भनेको सधैं र निरन्तर भगवान् श्रीकृष्णको चिन्तन गर्नु हो । त्यसैले, मानिसको चेतना केवल भगवान् श्रीकृष्णको विचारमा लीन हुनपर्दछ । त्यसकारण, हाम्रो कृष्णभावनामृतमा आध्यात्मिक गुरुले आफ्ना भक्तहरूलाई विभिन्न कार्यमा लगाइराख्नुहुन्छ । जस्तै, आध्यात्मिक गुरुले आफ्नो निर्देशनमा भक्तहरूलाई कृष्णचेतनाले युक्त पुस्तकहरू विक्री गर्न लगाउनुहुन्छ । तर, यदि कसैले यी पुस्तक बिक्री गर्ने जुन शक्ति प्रयोग गरिएको छ, त्यसको सट्टा रत्नहरू बिक्रीमा लगाए उपयुक्त हुन्छ भन्ने सोच्दछ भने, त्यो असल विचार होइन किनभने यदि ऊ रत्न बिक्री गर्ने कार्य गर्दछ भने ऊ केवल रत्नको व्यापार गर्ने व्यक्ति मात्र बन्न सक्दछ । त्यसैले, हामीहरू कृष्णभावनामृतबाट विचलित भइन्छ कि भन्ने कुरामा ज्यादै सावधान हुनुपर्दछ । यदि कृष्णभावनामृतमा रहँदा कुनै खतरा वा कष्ट भए पनि त्यसलाई

सहनुपर्दछ। हामीले त्यस्ता कष्ट र खतरालाई स्वागत गर्दै भगवान् श्रीकृष्णको प्रशंसा गर्दै स्तुति गर्नुपर्दछ।

हामीले स्तुति कसरी गर्ने ? **तत्तेऽनुकम्पां सुसमीक्षमाणः** – "हे प्रिय भगवान् ! हजुरको महान् कृपाले गर्दा नै म यो सङ्कटपूर्ण स्थितिमा आइपुगेको छु" भक्तको यस्तो दृष्टिकोण हुनुपर्दछ। भक्तले कष्ट वा खतरालाई कष्ट वा खतरा ठान्दैन । उसले सोच्दछ, "यो त भगवान् श्रीकृष्णको कृपा हो ।" त्यो कृपा कस्तो हो त ? **भुञ्जान एवात्मकृतं विपाकम्** – "मेरो आफ्नो पूर्व जन्मको कर्मको कारणले गर्दा मलाई यति कष्ट भोग्न परिरहेको छ तर हजुरले त्यो कष्टलाई कम गरेर थोरै कष्ट दिनुभएको छ ।" अर्को शब्दमा भन्दा भगवान् श्रीकृष्णको कृपाले गर्दा भक्तले नाम मात्रको दण्ड सजाय पाउँदछ। कहिलेकाहीँ न्यायालयमा न्यायाधीसले कुनै धनी व्यक्तिलाई दोषी पाएपछि सजायँ गर्दै लाखौं रुपियाँ तिर्न पर्ने दण्ड दिन सक्दछ किनभने त्यति रकम उसले तिर्न सक्दछ भन्ने जानेर त्यो दण्ड दिइएको हुन्छ तर न्यायाधीश फेरि त्यस व्यक्तिलाई "तिमीले केवल एक पैसा मात्र तिरे पुग्छ" भनेर सजायँलाई कम पनि गर्न सक्दछ र त्यो पनि सजायँ नै हुन्छ। त्यसैगरेर हामीले आफ्नो पूर्वजन्मको कर्मअनुसार कष्ट भोग्नु नै पर्दछ, त्यसबाट बच्न सकिँदैन। त्यो यथार्थ नै हो। तर **कर्माणि निर्दहति किन्तु च भक्तिभाजाम्** (ब्रह्मसंहिता ५.५४)। जुन व्यक्ति कृष्णभावनामृतको भक्ति सेवामा लागेको छ, उसको दुःखकष्ट कम गरिएको हुन्छ। उदाहरणका लागि कुनै भक्तको हतियारद्वारा हत्या हुने निश्चित गरिएको छ भने हुन सक्छ, त्यस हतियारबाट उसको औंला अलिकति मात्र काटियोस्। यसरी भक्तिमा लागेका व्यक्तिको पूर्व जन्मको कर्मबाट हुने कष्ट कम गरिएको हुन्छ। भगवान् श्रीकृष्णले आफ्ना भक्तहरूलाई आश्वस्त गर्दै भन्नुहुन्छ – **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि** – "म तिमीलाई तिम्रा पापमय कर्मबाट प्राप्त हुने फलबाट रक्षा गर्नेछु ।" त्यसैले, कुनै भक्त पहिला अत्यन्त डरलाग्दो आपराधिक कार्यमा लागेको भए उसलाई मृत्यु नदिएर केवल औंलामा सानो काटिने मात्र हुन सक्दछ। त्यसोभए, भक्त कुनै कष्टबाट किन डराउँदछ ?

त्यसैले, हामी कृष्णभावनामृतमा निर्भर भएर बस्नुपर्दछ, किनभने यदि हामी सम्पूर्ण परिस्थितिमा कृष्णचेतनामा बस्यौं भने पुनः यस भौतिक जगत्‌मा फर्केर आउन पर्दैन (**अपुनर्भवदर्शनम्**)। यदि हामीले बारम्बार भगवान् श्रीकृष्णको मात्र चिन्तन गऱ्यौं, कृष्णको दर्शन गऱ्यौं, कृष्णको बारेमा मात्र अध्ययन गऱ्यौं, कृष्णको

लागि कार्य गऱ्यौं र जसरी भए पनि कृष्णचेतनामा स्थिर हुन सक्यौं भने हामी पुनः यस भौतिक जगत्मा जन्म लिन आउनुपर्दैन । त्यही नै लाभ प्राप्त हुन्छ र त्यो नै सही लाभ पनि हो । तर, यदि हामी अन्य भौतिक कार्यमा लागेर केही सुविधाको अनुभव गर्दै भगवान् श्रीकृष्णलाई भुल्यौं भने र पुनः यस भौतिक जगत्मा जन्म लिन आउनुपऱ्यो भने, त्यो क्षणिक सुखबाट हामीलाई के नै लाभ भयो र ? त्यसैले, हामी यस कुरामा ज्यादै चनाखो हुनुपर्दछ । हामीले यस्तो कार्य गर्नुपर्दछ, जुन कार्य गर्दा हामीलाई जस्तोसुकै ठुलो कष्ट किन नहोस् तर जस्तोसुकै अवस्थामा पनि हाम्रो कृष्णचेतनामा बाधा आउनहुँदैन । त्यो नै कुन्तीदेवीको निर्देशन वा उपदेश हो ।

कुरुक्षेत्रको युद्ध जित्नअघि पाण्डवहरूलाई ज्यादै कष्ट दिएका थिए, जुन कुरा यसभन्दा अघिको श्लोकमा उल्लेख भएको छ । तिनीहरूलाई कहिले विष, कहिले लाहागृहमा राखियो र पछि आगो लगाइयो । कहिले मानिस खाने राक्षससँग सामना गर्नुपऱ्यो । कहिले राज्य छोड्नपऱ्यो, कहिले पत्नीलाई छोड्नपऱ्यो । आफ्नो प्रतिष्ठामा आघात भएको सहनुपऱ्यो र वनवास जानुपऱ्यो । तर, सबै सङ्कटका समय भगवान् श्रीकृष्ण उनीहरूको साथमा नै हुनुहुन्थ्यो । जब कौरवहरूले द्रौपदीलाई नाङ्गै बनाउन लागेका थिए, त्यससमय भगवान् श्रीकृष्णले साडीको लम्बाई बढाएर उनको लाज बचाउनुभएको थियो । त्यसैले, भगवान् श्रीकृष्ण उनीहरूसँग सधैं नै हुनुहुन्थ्यो ।

जब पितामह भीष्म मृत्युशैय्या सुतेका थिए त्यससमय पाण्डवहरू उनलाई भेट्न गए त्यससमय भीष्मले ठुलो स्वरले भने, "यी मेरा सबै नातिहरू अत्यन्त पुण्य आत्मा हुन् । पाण्डवमा सबैभन्दा जेठा महाराज युधिष्ठिर अत्यन्त पवित्र छन् । भीम र अर्जुन दुवै भक्त छन् । यी यति वीर छन्, यिनले हजारौं मानिस मार्न सक्दछन् । यिनकी पत्नी द्रौपदी साक्षात् लक्ष्मी हुन् र यिनी जहाँ निवास गर्दछिन्, त्यहाँ भोजनको कहिल्यै पनि कमी हुँदैन । त्यसैले, यिनीहरूको अद्भूत मिलन छ र भगवान् श्रीकृष्ण सधैं यिनीहरूसँगै हुनुहुन्छ तैपनि यिनीहरूलाई कष्ट भइरहको छ ।" अनि उनले कराउँदै भने "भगवान् श्रीकृष्णको यो कस्तो व्यवस्था हो, मैले जान्दिन किनभने यस्ता पुण्य आत्मा भक्तहरूले नै दुःख-कष्ट पाइरहेका छन् ।"

त्यसैले, हामीले "म भक्त बनेको छु, त्यसकारण मलाई दुःखकष्ट हुँदैन" भनेर सोच्नुहुँदैन । प्रह्लाद महाराजले पनि धेरै ठुलो कष्ट भोग्नुपरेको थियो

त्यसरी नै पाण्डव र हरिदास ठाकुरजस्ता अन्य भक्तले पनि यसरी नै कष्ट भोग्नुपरेको थियो तर हामी भने यस्ता कष्टबाट विचलित हुनहुँदैन । हामीमा दृढ विश्वास र दृढ धारणा हुनुपर्दछ अनि जान्नुपर्दछ "भगवान् श्रीकृष्ण हाम्रो नजिक उपस्थित हुनुहुन्छ र उहाँले हाम्रो रक्षा गर्नुहुन्छ ।" भगवान् श्रीकृष्णबाहेक अन्यको शरणमा परेर कुनै पनि प्रकारको लाभ लिने प्रयास गर्नुहुँदैन, सधैँ भगवान् श्रीकृष्णको शरणमा जानुपर्दछ ।

भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुभएको छ – **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति** – "हे प्रिय अर्जुज ! तिमीले संसारसमक्ष घोषणा गर मेरा भक्तको कहिल्यै नाश हुँदैन ।" कसैले सोध्न सक्दछ, भगवान्‌ले अर्जुनलाई यस्तो घोषणा गर्न किन भन्नुभयो ? उहाँ आफैंले किन घोषणा गर्नुभएन ? यदि भगवान् श्रीकृष्णले यस्तो घोषणा गर्नुभएको भए त्यसमा शङ्का गर्ने अवस्था सृजना हुन्थ्यो किनभने कहिलेकाहीँ भगवान् श्रीकृष्णले आफूले गर्नुभएको प्रतिज्ञा पूरा नगर्ने पनि गर्नुहुन्छ तर भक्तले गरेको प्रतिज्ञा कहिल्यै पनि उल्लङ्घन गर्नुहुन्न सधैँ पूरा गरिदिनुहुन्छ । भगवान् श्रीकृष्णलाई यही चिन्ता भइरहन्छ "अहो ! मेरा भक्तले यस्तो घोषणा गरेको छ । त्यसैले, उसको वचनको पालना हुनपर्दछ ।" आफ्ना भक्तहरूप्रतिको स्नेहले गर्दा भगवान् श्रीकृष्णको अवस्था यस्तो छ । त्यसैले, भगवान् श्रीकृष्णले भक्तलाई "तिमीले घोषणा गर भन्नुहुन्छ । "यदि मैले घोषणा गरें भने मानिसले विश्वास नगर्न पनि सक्दछन् तर यदि तिमीले गऱ्यौ भने तिमी भक्त भएको हुनाले मानिसले तिम्रो विश्वास गर्दछन् ।" भगवान् श्रीकृष्णले आफ्नो प्रतिज्ञालाई छोड्न सक्नुहुन्छ तर आफ्ना भक्तको प्रतिज्ञा पूरा भएको हेर्न चाहनुहुन्छ ।

त्यसैले, हामीले कृष्णभावनामृतमा आफूलाई लगाउन पर्दछ र जस्तोसुकै सङ्कटको अवस्थामा पनि यस चेतनामा दृढ भएर बस्नुपर्दछ । भगवान् श्रीकृष्णको चरणकमलमा पूर्ण विश्वास गर्नपर्दछ अनि हामीलाई कुनै सङ्कट आउँदैन ।



# ९. मायाको ज्वरो वा प्रभाव कम गर्नु

**जन्मैश्वर्यश्रुतश्रीभिरेधमानमदः पुमान् ।**
**नैवार्हत्यमिधातुं वै त्वामकिञ्चनगोचरम् ॥**

हे प्रभु ! केवल भौतिकताबाट थाकेका वा क्लान्त भएका वा अकिञ्चनले मात्र हजुरलाई सजिलै प्राप्त गर्न सक्दछन् तर भौतिकताको विकासमा प्रगति गर्दै आफूलाई सम्मानित कुलमा अग्रसर गराउन प्रयासरत, ऐश्वर्य, उच्च शिक्षा र शारीरिक सौन्दर्य तर्फ उन्मुख व्यक्ति भने एक निष्ठाभावले हजुरसम्म आइपुग्न सक्दैन ।

**–(श्रीमद्भागवत् १.८.२६)**

भौतिक दृष्टिले विकसित भयो भन्नुको अर्थ उच्च कुलमा जन्मनु, प्रशस्त सम्पत्ति हुनु, राम्रो शिक्षा आर्जन गर्नु र आकर्षक सौन्दर्य हुनु हो । सम्पूर्ण भौतिकवादी व्यक्तिहरू यिनै भौतिक ऐश्वर्य प्राप्त गर्नका लागि पागल भएर लागिरहेका छन् र यसलाई भौतिक सभ्यताको उन्नति वा विकास पनि भनिन्छ, तर यस्ता भौतिक ऐश्वर्य प्राप्त गरेपछि मानिस कृत्रिमरूपले गर्व गर्दछ र यस्ता क्षणिक सम्पत्तिले गर्दा ऊ मात्तिएर अन्धो हुन्छ । यसरी, भौतिकताको गर्व गर्ने व्यक्ति भावविभोर भएर भगवान्का पवित्र नाम "हे गोविन्द हे कृष्ण" भन्न असक्षम हुन्छ । शास्त्रमा भनिएको छ, कुनै पापीले भगवान्को नामको उच्चारण एक पटक मात्र गऱ्यो भने पनि ऊ त्यति धेरै पापबाट मुक्त हुन्छ, जति पाप उसले गर्न नै सक्दैन किनभने भगवान्को पवित्र नामको उच्चारणमा पनि धेरै शक्ति छ । यो भनाइमा कुनै अत्युक्ति वा अतिशयोक्ति छैन किनभने भगवान्का पवित्र नाममा वास्तवमा नै प्रवल शक्ति हुन्छ तर त्यस्तो नाम लिन पनि गुणको आवश्यकता पर्दछ र त्यो भावको गुणतामा निर्भर गर्दछ । एउटा असहाय व्यक्तिले भगवान्को पवित्रनामको उच्चारण भाव विभोर भएर गर्दछ भने त्यही नामको उच्चारण भौतिक वस्तुमा सन्तुष्ट व्यक्तिले त्यति निष्ठापूर्वक लिन सक्दैन । भौतिकताले मत्त भएको व्यक्ति कहिलेकाहीं भगवान्का पवित्र नामको उच्चारण

गर्न सक्दछ तर त्यो व्यक्ति भगवान्‌को नाम गुणले युक्त भएर उच्चारण गर्न भने सक्षम हुँदैन । त्यसैले, भौतिक उन्नति मानिने चार सिद्धान्त – १. उच्चकुलमा जन्म २. प्रशस्त सम्पत्ति ३. उच्च शिक्षा र ४. सौन्दर्यता । यी चार कुरा आध्यात्मिक उन्नति मार्गका लागि अयोग्यता हुन् । जसरी शुद्ध आत्माको भौतिक आवरण बाहिरी गुण हो भने त्यसरी नै अस्वस्थ शरीरको बाहिरी गुण ज्वरो वा प्रभाव हो । त्यसैले, सामान्य विधिअनुसार ज्वरो वा प्रभाव कम गर्न पर्‍यो तर त्यसको लागि गलत उपचार गरेर ज्वरो वा प्रभाव अरू बढाउन हुँदैन । कहिलेकाहीँ आध्यात्मिक मार्गमा धेरै विकास गरेको मानिस भौतिक सम्पत्तिले भने निर्धन भएको पाइन्छ तर त्यसले गर्दा हतोत्साहित भने हुनुहुँदैन । झन् त्यस्तो निर्धनता हुनुभनेको भौतिक राम्रो लक्षण हो त्यसले भौतिक ज्वरो वा प्रभाव घट्दछ र त्यो शुभ पनि हो । भौतिकताले मत्त भएर आफ्नो जीवनको उद्देश्यप्रति झन् धेरैधेरै भ्रमित भएको व्यक्तिलाई उसको भौतिक मत्तपन कम गर्नु नै मानिसको जीवनको उद्देश्य र सिद्धान्त हुनुपर्दछ । यसरी, ठुलो परिमाणमा भ्रमित भएको व्यक्ति भगवान्‌को धाम प्रवेश गर्न उपयुक्त हुँदैन ।

एउटा अर्थमा भौतिक ऐश्वर्य प्राप्त गर्नु पनि भगवान्‌को कृपा नै हो । धनी परिवारमा जन्म लिनु वा अमेरिका जस्तो देशमा जन्मनु, धेरै धनी हुनु, उच्च शिक्षा र ज्ञान प्राप्त गर्नु र सौन्दर्यले युक्त हुन पाउनु पनि पुण्य कर्मको उपहार नै हो । धनी व्यक्तिले सबैलाई आफूतर्फ आकर्षित गर्न सक्दछ तर गरिबले सक्दैन त्यसरी नै, शिक्षित व्यक्तिले पनि अरूको ध्यान आफूतर्फ आकर्षित गर्न सक्दछ तर मूर्खले सक्दैन । त्यसैले,, भौतिक दृष्टिले यस्ता ऐश्वर्य पनि लाभप्रद हुन्छन् । तर, यस्ता भौतिक ऐश्वर्यले युक्त व्यक्ति "अहो ! म धनी व्यक्ति हुँ, म शिक्षित व्यक्ति हुँ र मसँग प्रशस्त धन छ" भन्ने घमण्डले मत्त हुन्छ ।

जसले रक्सी पिउँदछ, उसले नशा लागेपछि आफू आकाशमा उडेको वा स्वर्गमा पुगेको सोच्दछ र यसलाई नशाको प्रभावले मत्त भएको भनिन्छ तर यसरी नशाले मत्त भएको व्यक्तिलाई उसले आफूले देखेका सपनाहरूको एउटा सीमा हुन्छ र केही समयपछि त्यसको अन्त्य हुन्छ भन्ने जानकारी नै हुँदैन किनभने ऊ भ्रममा परेको हुनाले यी सपनाहरू निरन्तर हुँदैनन् भन्ने कुराको जानकारी नै उसलाई हुँदैन । यसरी नै कुनै व्यक्ति मत्त भएर सोच्न सक्दछ – "म धनी हुँ । मैले उच्च शिक्षा प्राप्त गरेको छु । म ज्यादै सुन्दर छु । मेरो जन्म धनी, कुलिन परिवारमा र महान राष्ट्रमा भएको छ" आदि । त्यो सबै भन्नु ठीकै

हो तर त्यस्ता सुविधाहरू कति लामो समयसम्म रहिरहन्छन् र ? साँच्चै कुनै व्यक्ति अमेरिकी हो, धनी छ, सुन्दर छ, उच्च शिक्षा पनि प्राप्त गरेको छ र उसले यी सबै कुरा आफूसँग भएको हुनाले घमण्ड पनि गर्न सक्दछ तर त्यो मत्तपन कहिलेसम्म रहिरहन्छ र ? त्यसैले, यस्तो कुरा जसरी रक्सी पिएको व्यक्तिको सपना रक्सीको नशा हटेपछि सकिन्छ, त्यसरी यी सबै भौतिक उपलब्धीहरू शरीर नष्ट हुनासाथ समाप्त हुन्छन् ।

यी सपनाहरू सबै मानसिक स्तर, अहम्को स्तर र शारीरिक स्तरमा हुन्छन् तर म भनेको शरीर होइन । यो स्थूल शरीर र सूक्ष्म शरीर मेरो वास्तविक आत्माभन्दा भिन्न छ किनभने यो स्थूल शरीर पृथ्वी, पानी, आगो, हावा र आकाशबाट बनेको छ भने सूक्ष्म शरीर मन, बुद्धि र झुटो अहङ्कारबाट बनेको छ । तर जीव भने यी आठ तत्त्वभन्दा पर छ र दिव्य छ, जसको बारेमा भगवद्गीतामा यसलाई भगवान्को अपरा वा निम्नस्तरको शक्ति हो भनेर वर्णन गरिएको छ ।

जसरी मत्त भएको व्यक्तिलाई आफ्नो अवस्थाको बारेमा जानकारी हुँदैन, त्यसरी नै मानसिकरूपले विकसित भएको व्यक्तिलाई पनि ऊ आफू अपरा वा निम्नस्तरको शक्तिको प्रभावमा छु भन्ने जानकारी हुँदैन । त्यसैले, ऐश्वर्यले मानिसलाई मत्त र अन्धो बनाउँदछ । हामी त्यसैले, पहिलादेखि नै मत्त छौं तर यस आधुनिक सभ्यताले हाम्रो मत्तपन अरू बढाउने गर्दछ । वास्तवमा हामी यस मत्तपनबाट बाहिर आउनपर्दछ वा मुक्त हुनपर्दछ तर आधुनिक सभ्यताले हाम्रो मत्तपनलाई अरू बढाइदिन्छ, जसले गर्दा हामी अरू धेरै मत्त हुन्छौं अनि नरकतिर जान्छौं ।

कुन्तीदेवीले भन्छिन्, जुन व्यक्ति यसरी मत्त भएको छ, उसले भावपूर्वक भगवान्लाई सम्बोधन गर्न सक्दैन र उसले भावपूर्वक "जय राधा माधव" पनि भन्न सक्दैन । त्यसैले, उसले आफ्नो आध्यात्मिक भावना नै समाप्त गरिसकेको हुन्छ । तिनीहरूले भावपूर्ण तरिकाले भगवान्लाई सम्बोधन गर्न सक्दैनन् किनभने तिनीहरूसँग ज्ञान नै छैन । तिनीहरूले सोच्दछन् "अहो ! भगवान् भनेको गरिबलाई मात्र हो किनभने गरिबसँग प्रशस्त अन्न, भोजन छैन । त्यसैले, तिनीहरू चर्च जाऊन् र भगवान्सँग दैनिक भोजनका लागि प्रार्थना गरून् "हामीसँग प्रशस्त भोजन छ त्यसैले, हामी चर्च किन जानपर्‍यो ?" उनीहरूको विचार यस्तै हुन्छ ।

अहिलेको परिस्थितिमा हामी आर्थिक उन्नतिको दृष्टिले सम्पन्न छौं, त्यसैले कोही पनि चर्च वा मन्दिर जान इच्छुक देखिँदैनन् । "यो कस्तो मूर्खता हो ? म भोजनका लागि याचना गर्न चर्च किन जाउँ ? हामीले आफ्नो आर्थिक अवस्था राम्रो गऱ्यौं भने प्रशस्त भोजन सजिलै प्राप्त भइहाल्दछ ।" यसप्रकारको मनोभावना विशेष गरेर साम्यवादी देशमा पाइन्छ । कम्युनिष्टहरूले गाउँमा गएर गाउँलेलाई चर्चमा गएर भगवान्सँग भोजन माग भन्दछन् अनि ती अवोध गाउँले चर्चमा गएर "हे भगवान् ! मलाई दिनहुँ भोजन दिनुहोस्" भन्दछन् । ती गाउँलेलाई सोध्दछन्, "के तिमीले भोजन पायौ ?"

गाउँलेको उत्तर "पाइनँ" भन्ने हुन्छ ।

कम्युनिष्टले भन्दछ "ठीक छ, हामीसँग माग ।"

अनि गाउँलेले भन्दछ "हे कम्युनिष्ट साथी हामीलाई भोजन दिनुहोस् ।"

कम्युनिष्टहरूले ट्रक भरेर भोजन ल्याएका हुन्छन् अनि उनीहरू भन्दछन्, "तिमीहरूलाई जति चाहिन्छ लैजाऊ । अब मनको राम्रो को रहेछ कम्युनिष्ट कि तिम्रो भगवान् ?"

मानिस धेरै बुद्धिमान छैनन् त्यसैले, उनीहरूले उत्तर दिन्छन्– तिमीहरू नै राम्रा छौ । उनीहरूसँग प्रश्न सोध्ने बुद्धी नै छैन नत्र, "हे दुष्टहरू ! यो रोटी तिमीहरूले कहाँबाट ल्यायौ ? के तिमीले यो रोटी कारखानामा बनाएका हौ ? के तिम्रो कारखानामा अन्न उत्पादन गर्न सक्दछौ ?" भनेर प्रश्न गर्थे तर गाउँलेहरू शूद्र हुन् । त्यसैले, यस्तो प्रश्न सोध्न नै सक्दैनन् । तर, ब्राह्मणको वुद्धि तीक्ष्ण हुन्छ । त्यसैले, उसले तुरुन्त सोध्दछ, "हे दुष्टहरू ! तिमीहरूले यो रोटी कहाँवाट ल्यायौ ? तिमीहरूले यो रोटी उत्पादन गर्न सक्दैनौ । तिमीहरूले भगवान्ले दिनुभएको गहुँ लिएर त्यसको रूप परिवर्तन गरेर रोटी बनाएका हौ । त्यसको अर्थ यो रोटी तिम्रो सम्पत्ति हो भन्ने हुँदैन ।"

कुनै एउटा वस्तुलाई अर्को वस्तुमा परिवर्तन गर्दैमा त्यो पछि निर्मित वस्तु निर्माताको सम्पत्ति हुन सक्दैन । उदाहरणका लागि, यदि मैले एउटा सिकर्मीलाई काठ, औजार र तलब दिएँ र उसले एउटा सुन्दर दराज बनायो भने त्यो दराज कसको सम्पत्ति हुन्छ ? त्यो सिकर्मीको हुन्छ कि ती सबै सामान दिने मेरो हुन्छ ? "मैले यो काठलाई यो सुन्दर दराजमा परिवर्तन गरें । त्यसैले, यो मेरो हो" भनेर सिकर्मीले भन्न सक्दैन । यसरी नै हामीले पनि कम्युनिष्टहरूजस्ता नास्तिकलाई भन्न सक्दछौं "हे दुष्टहरू ! त्यो तिम्रो रोटीलाई आवश्यक सामग्री

कसले प्रदान गरेको छ ? त्यो सबै भगवान् श्रीकृष्णले दिनुभएको हो । भगवद्गीतामा भगवान् श्रीकृष्णले भन्नुहुन्छ – "यो भौतिक सृष्टिका सबै तत्त्वहरू मेरा सम्पत्ति हुन् ।" यो समुद्र, जमिन, आकाश, आगो र हावा तिमीले बनाएका त होइनौ र यी तिमीले गरेका सृष्टि पनि होइनन् । तिमीले केवल यी सबैलाई मिसाएर भौतिक वस्तु बनाएका हौ । तिमीले पृथ्वीबाट माटो, समुद्रबाट पानी लिएर तिनलाई मिसाएर आगोमा राखेर ईँटा बनाएका हौ अनि ती ईँटाको थुप्रो लगाएर गगनचुम्बी भवन बनाएका छौ अनि तिमीले त्यो गगनचुम्बी भवन बनाउने सामग्री कहाँबाट पाएका हौ ? तिमीले भगवान्‌को सम्पत्ति चोरेका हौ र त्यसबाट बनेको वस्तु मेरो सम्पत्ति हो भनेर अहिले भन्दछौ"- अहिलेको ज्ञान यस्तै छ ।

दुर्भाग्यवश जो मत्त छन्, उनीहरूले यो कुरा बुझ्न नै सक्दैनन् । उनीहरूले सोच्दछन् – "हामीले यो अमेरिकाको जमिन रेड इन्डियनहरूबाट पाएका हौं । त्यसैले, अहिले यो हाम्रो सम्पत्ति हो" तर उनीहरूलाई आफू चोर हौं भन्ने नै थाहा छैन । भगवद्गीताले स्पष्टसँग भनेको छ – जसले भगवान्‌को सम्पत्ति लिन्छ र मेरो सम्पत्ति हो भन्दछ, त्यो चोर नै हो (**स्तेन एव सः**) ।

त्यसैले, भगवान् श्रीकृष्णका भक्तहरूको आफ्नै प्रकारको साम्यवाद छ । कृष्णचेतनाको साम्यवादअनुसार सम्पूर्ण वस्तु भगवान्‌को हो भन्ने छ । जसरी रसियाली र चिनियाँ कम्युनिष्टले प्रत्येक वस्तु राज्यको हो भन्दछन् । त्यसरी नै हामीहरू प्रत्येक वस्तु भगवान्‌को हो भन्ने ठान्दछौं । यो विचारधारा पनि साम्यवादको विस्तार नै हो तर यसलाई बुझ्नका लागि अलिकति बुद्धिको आवश्यकता पर्दछ । कसैले यो राज्य केही व्यक्तिको मात्र हो भनेर किन सोच्ने ? वास्तवमा यो सम्पत्ति भगवान्‌को हो र प्रत्येक जीवले यो सम्पत्ति प्रयोग गर्ने अधिकार छ किनभने प्रत्येक जीव भगवान्‌का सन्तान हुन्, भगवान् सर्वोच्च पिता हुनुहुन्छ । भगवद्गीता (१४-४) मा भगवान् श्रीकृष्णले भन्नुभएको छ – **सर्वयोनिषु कौन्तेय ........ अहं बीजप्रदः पिता** – "म सम्पूर्ण जीवको वीज प्रदान गर्ने पिता हुँ । ती जीव जुनसुकैरूपमा अवस्थित भएपनि तिनीहरू मेरा पुत्र हुन् ।"

हामी सबै जीवहरू भगवान्‌का पुत्र हौं तर हामीले यो कुरा बिर्सेका हुनाले एक अर्कोसँग झगडा गरिरहेका छौं । सुखी परिवारका प्रत्येक छोराहरूलाई "उनीहरूलाई आवश्यक भोजन बुबाले प्रदान गर्नुहुन्छ र हामी सबै भाइ-भाइ

हौं। त्यसैले, हामी किन झगडा गर्ने ?" भनेर थाहा हुन्छ। त्यसैगरेर, यदि हामी कृष्णचेतना वा कृष्णभावनाले युक्त भयौं भने विश्वमा हुने युद्ध वा झगडाको अन्त्य हुन्छ। "म अमेरिकी हुँ, म भारतीय हुँ, म रसियाली हुँ वा म चिनियाँ हुँ भन्ने जुन मूर्खतापूर्ण उपाधि छ, त्यो समाप्त हुन्छ। यो कृष्णभावनामृत आन्दोलनले मानिसलाई यति पवित्र बनाउँदछ र जब ऊ कृष्णचेतनाले युक्त हुन्छ, उसको राजनैतिक र राष्ट्रियतासम्बन्धी जुन झगडा छ, त्यो तुरुन्त समाप्त हुन्छ किनभने उनीहरू आफ्नो वास्तविक चेतनामा पुग्दछन् र यो सम्पूर्ण वस्तु भगवान्को हो भन्ने कुरा जान्दछन्। जसरी कुनै परिवारका सबै बच्चाहरूलाई आफ्ना पितासँग उपलब्ध सबै सुखसुविधाको उपभोग गर्ने अधिकार हुन्छ, त्यसरी नै प्रत्येक जीव भगवान्का अंश हुन्, भगवान्का सन्तान हुन्, त्यसैले, सबैलाई आफ्ना पिताको सम्पत्तिको उपभोग गर्ने अधिकार हुन्छ। त्यो उपभोग गर्ने अधिकार केवल मानवलाई मात्र हुँदैन। भगवद्गीताअनुसार त्यो जीव मानिस, जनावर, वृक्ष, चरा, जङ्गली जनावर, किरा वा अन्य कुनै जीव जे भए पनि ती सबैलाई त्यो उपभोग गर्ने अधिकार हुन्छ र यो जान्नु नै कृष्णचेतना हो। हाम्रो कृष्णभावनामृतमा हामी "मेरो भाइ असल छ, म असल छु र अन्य सबै खराब छन्" भन्ने सोच्दैनौं किनभने यस्तो सोच्नु त सङ्कीर्ण र पशुचेतना हुनु जस्तै हो। हामी त्यसलाई स्वीकार गर्दैनौं। कृष्णभावनामृतमा हामी सबै जीवलाई समान दृष्टिले हेर्दछौं। भगवद्गीता (५.१८) मा भनिएको छ –

**विद्याविनयसम्पन्ने ब्राह्मणे गवि हस्तिनि।**
**शुनि चैव श्वपाके च पण्डिताः समदर्शिनः॥**

"विनम्र साधु पुरुषले आफ्नो वास्तविक ज्ञानले गर्दा एउटा विद्वान् र सौम्य ब्राह्मण, गाई, हात्ती, कुकुर र चण्डाललाई समान भावले हेर्दछ।"

पण्डित व्यक्तिले सबै जीवलाई समानस्तरको भावले हेर्दछन्। एउटा वैष्णव वा भक्त विद्वान् वा पण्डित हुन्छ। त्यसैले, ऊ दयालु (**लोकनां हितकारिणौ**) हुन्छ। त्यसैले, उसले मानवताको हितका लागि कार्य गर्दछ। एउटा वैष्णवले यी सबै जीवहरू भगवान्का अंश हुन्, कुनै कारणले गर्दा तल झरेर यस भौतिक जगत्को सम्पर्कमा आएका हुन् र आफ्ना विभिन्न कर्मले गर्दा अहिले यिनले विभिन्न प्रकारका शरीर प्राप्त गरेका छन् भन्ने कुराको अनुभव पनि गर्दछ र त्यो कुरा देख्न पनि सक्दछ।

जुन व्यक्ति पण्डित छ, उसले कसैलाई पनि भेदभाव गर्दैन। त्यस्तो व्यक्तिले

"यो पशु हो त्यसैले, यसलाई वधशालामा पठाउनुपर्दछ र मानिसले यसलाई खानुपर्दछ" भनेर भन्दैन । पशुको वध किन गर्न पऱ्यो ? एउटा कृष्णचेतनाले युक्त व्यक्ति वास्तवमा सबै प्रति दयालु हुन्छ। त्यसैले, हाम्रो दर्शनमध्येको एउटा सिद्धान्त "मासु नखाने वा मांसाहार नगर्ने" हो। हुन सक्छ मानिसले यो सिद्धान्त स्वीकार नगर्लान् र भन्लान्, "यो कस्तो मूर्खता हो ? मासु हाम्रो भोजन हो, त्यसैले, मासु किन नखाने ?" उनीहरूले यसो किन भन्दछन्, भने ती दुष्टहरू मत्त भएका छन् । (**एधमानमदः**) त्यसैले, तिनीहरूले वास्तविक कुरा सुन्दैनन् । तर विचार गर, एउटा गरिब मानिस बाटोमा निसहाय लडिरहेको छ भने के मैले त्यसलाई मार्न सक्दछु र ? के मैले त्यसो गरे राज्यले मलाई क्षमा गर्ला र ? मैले भन्न सक्दछु "मैले केवल एउटा गरिबलाई मारेको हुँ, समाजमा त्यसको केही आवश्यकता नै छैन । त्यसैले, त्यस्तो व्यक्ति बाँच्नुको के नै अर्थ छ ?" मैले यसो भन्दा के राज्यले मलाई क्षमा गर्दछ र ? के राज्यका अधिकारीले, "तिमीले धेरै राम्रो कार्य गऱ्यौ" भनेर मलाई भन्लान् र ? पक्कै पनि भन्दैनन् । त्यो गरीब व्यक्ति पनि राज्यको नागरिक हो र राज्यले त्यसलाई मार्न दिंदैन । अब हामीले यस्तो दर्शनको विस्तार किन नगर्ने ? रुख, चरा र जङ्गली जनावर सबै भगवान्‌का सन्तान हुन् । यदि कसैले तिनलाई माऱ्यो भने कुनै सडकमा बस्ने गरिबलाई मार्दा लाग्ने अपराधजस्तै हुन्छ । भगवान्‌को हेराइमा र विद्वान् पण्डितको हेराइमा कुनै पनि धनी गरिब वा गोरो कालोबीच कुनै भेदभाव र पक्षपात हुँदैन किनभने सबै भगवान्‌का अंश हुन् । त्यसैले, वैष्णवले यस्तो दृष्टिले हेर्ने हुनाले केवल वैष्णव मात्र सम्पूर्ण जीवको एक मात्र सही हितैषी हुन्छ ।

वैष्णवले जहिले पनि सम्पूर्ण जीवलाई कृष्णचेतनाको स्तरमा विकसित गराउन चाहन्छ । वैष्णवले यो भारतीय हो, यो अमेरिकी हो भनेर हेर्दैन । कसैले मलाई सोधेका थिए – तपाईं अमेरिका किन आउनुभएको हो ? तर म किन अमेरिका नआउनु ? किनभने म भगवान्‌को सेवक हुँ र यो जगत् भगवान्‌को साम्राज्य हो । त्यसैले, म किन नआउने ? भक्तको गतिविधिमा वाधा उत्पन्न गर्नु कृत्रिम कुरा हो र जसले यस्तो गर्दछ उसले पापकर्म गरिरहेको हुन्छ । जसरी एउटा प्रहरी कुनै अवरोधविना नै घरमा प्रवेश गर्दछ भने त्यसरी नै एउटा सेवकलाई पनि जहाँ पनि जाने अधिकार हुन्छ किनभने यो सम्पूर्ण वस्तु भगवान्‌को हो । हामीले यी प्रत्येक वस्तु जस्तो अवस्थामा छन्, त्यसरी नै यथारूप हेर्नपर्दछ र त्यो नै कृष्णभावनामृत हो ।

अब कुन्तीदेवीले भन्दछिन्, जसले आफ्नो भौतिक मत्तपन बढाउँदछ, ऊ कृष्णचेतनाले युक्त हुन सक्दैन । कुनै पूर्णरूपले मत्त व्यक्ति छ भने उसले मूर्खतापूर्ण कुरा गर्न सक्दछ तर हामीले उसलाई "हे भाइ ! तिमीले मूर्खतापूर्ण कुरा गरिरहेका छौ । वास्तवमा हेर त, यी तिम्रा पिता र यी तिम्री आमा हुन्" तर त्यो मत्त व्यक्तिले हामीले भनेको कुरा बुझ्न नै सक्दैन, उसले त्यो कुरालाई बुझ्ने प्रयास पनि गर्दैन । त्यसैगरेर, भौतिकताले मत्त भएको दुष्ट व्यक्तिलाई भक्तहरूले "यहाँ भगवान् हुनुहुन्छ" भनेर देखाउने प्रयास गर्दछन् तर त्यस्ता दुष्टहरूले त्यो कुरा बुझ्न नै सक्दैनन् । त्यसैले, कुन्तीदेवीले भन्दछिन् – **त्वामकिञ्चनगोचरम्** – उच्च कुलको जन्म, ऐश्वर्य, शिक्षा र सौन्दर्यबाट उत्पन्न हुने मत्तपनबाट मुक्त हुनु नै राम्रो योग्यता हो भन्ने कुरा सूचित गर्दछ ।

जब मानिस कृष्णचेतनाले युक्त हुन्छ उसले यिनै भौतिक सम्पत्तिहरू नै भगवान् श्रीकृष्णको सेवामा उपयोग गर्दछ । उदाहरणका लागि यी अमेरिकीहरू पहिला भौतिकताले मत्त थिए तर जब यिनीहरू कृष्णभावनामृत आन्दोलनमा प्रवेश गरे र भक्त बने अनि यिनीहरूको मत्तपन समाप्त भयो । यिनीहरूको भौतिक सम्पत्ति वा दायित्व अब आध्यात्मिक सम्पत्ति वा दायित्व बन्न गयो र यसले तिनीहरूलाई भगवान् श्रीकृष्णको सेवामा लाग्न अरू सहायता गऱ्यो । उदाहरणका लागि, जब यी अमेरिकी भक्तहरू भारत जान्छन् अनि भारतीयहरू यी अमेरिकीहरू भगवान्‌को पछि पागलजस्तै भएर लागेको देखेर आश्चर्यमा पर्दछन् । धेरै भारतीयहरू पाश्चात्य देशको भौतिकवादी जीवनको अनुकरण गर्ने इच्छा राख्दछन् तर जब उनीहरूले यी अमेरिकीहरू कृष्णभावनामृतमा लागेर नाचेको देख्दछन् अनि ती भारतीयहरूले पनि वास्तवमा अनुकरण गर्नुपर्ने त यो रहेछ भन्ने ठान्दछन् ।

प्रत्येक वस्तु भगवान् श्रीकृष्णको सेवामा उपयोग गर्न सकिन्छ । यदि कुनै व्यक्ति भौतिकताको मत्तपनमा नै रहेर आफ्नो भौतिक सम्पत्तिको उपयोग भगवान् श्रीकृष्णको सेवामा लगाउँदैन भने त्यो सम्पत्ति त्यति महत्त्वपूर्ण नै हुँदैन तर यदि कसैले त्यो सम्पत्ति भगवान् श्रीकृष्णको सेवामा लगाउँदछ भने त्यो सम्पत्ति अत्यन्त महत्त्वपूर्ण बन्दछ । उदाहरणका लागि शून्यको कुनै महत्त्व छैन तर यदि त्यो शून्यको अघि एक राख्यो भने त्यो शून्य तुरुन्त दश बन्दछ । यसरी नै, शून्यमा अर्को शून्य थपे एक सय र तीन शून्य भए एक हजार बन्दछ । त्यसैगरेर, हामी भौतिक सम्पत्तिले गर्दा मत्त भएका छौं र त्यो सम्पत्ति वास्तवमा

शून्य भन्दा केही फरक छैन तर यदि त्यसमा भगवान् श्रीकृष्ण जोड्ने बित्तिकै त्यो दश, सय, हजार, लाख शून्य भए पनि अति बहुमूल्य सम्पत्ति बन्दछ। त्यसैले, यो कृष्णभावनामृत आन्दोलनले पाश्चात्य देशका मानिसलाई महान् अवसर प्रदान गरिरहेको छ। तिनीहरूसँग भौतिकवादी जीवनका प्रशस्त शून्य छन्। यदि तिनीहरूले आफ्नो जीवनमा भगवान् श्रीकृष्णलाई सम्मिलित गरे भने उनीहरूको जीवन उज्ज्वल र महत्त्वपूर्ण बन्दछ।

***

# १०. निर्धनको धन

**नमोऽकिञ्चनवित्ताय निवृत्तगुणवृत्तये ।**
**आत्मारामाय शान्ताय कैवल्यपतये नमः ॥**

भौतिकरूपले निर्धनका धनस्वरूप हजुरलाई म नमस्कार गर्दछु । भौतिक प्रकृतिका गुणहरूको कार्य र कारण क्रिया र प्रतिक्रिया प्रति हजुरको कुनै सरोकार नै छैन । हजुर आफैंमा रमाउनु हुन्छ त्यसैले, हजुर परम शान्त र अद्वैतवादीका स्वामी (कैवल्य पति) हुनुहुन्छ ।

**–(श्रीमद्भागवत् १.८.२७)**

यदि जीवसँग केही पनि भएन भने ऊ समाप्त नै हुन्छ । त्यसैले, वास्तवमा जीव त्यागी हुन नै सक्दैन । जीवले केही बहुमूल्य वस्तु प्राप्त गर्नका लागि केही त्याग गर्दछ । एउटा विद्यार्थीले आफ्नो बालकपन खेल वा रमाइलोतिरको झुकावलाई राम्रो शिक्षा पाउनका लागि त्याग गर्दछ । एउटा सेवकले पहिलोभन्दा राम्रो सेवा पाएमा पहिलो सेवालाई त्याग गर्दछ त्यसरी नै भक्तहरूले पनि यस जगत्को त्याग आध्यात्मिक उपलब्धि प्राप्त गर्नका लागि गर्दछन्, व्यर्थमा गर्दैनन् । श्रील रुप गोस्वामी, सनातन गोस्वामी, श्री रघुनाथ दास गोस्वामी आदिले भगवान्को सेवाका लागि आफ्नो भौतिक मान-सम्मान र ऐश्वर्यलाई परित्याग गर्नुभयो । सांसारिक दृष्टिले उहाँहरू महान् पुरुष हुनुहुन्थ्यो । रूप र सनातन गोस्वामी बङ्गाल सरकारमा मन्त्री हुनुहुन्थ्यो तर उहाँहरूले आफूसँग जे थियो, त्योभन्दा महान् वस्तु प्राप्त गर्नका लागि पहिलोको त्याग गर्नुभयो । सामान्यतया भक्तहरू सम्पत्ति विहीन हुन्छन् तर उनीहरूसँग भगवान्को चरणकमलरूपी गोप्य कोष हुन्छ । श्रील सनातन गोस्वामीसम्बन्धी एउटा सुन्दर कथा छ । उहाँसँग पारस पत्थर थियो त्यसलाई उहाँले फोहोरमा राख्नु भएको थियो । त्यो पत्थर एउटा आवश्यकताले ग्रसित व्यक्तिले लग्यो पछि यति बहुमूल्य पत्थर यस्तो फोहोरको थुप्रोमा किन राखियो भनेर ऊ आश्चर्यमा पर्‍यो । त्यसैले, उसले सनातन गोस्वामीसँग सबैभन्दा बहुमूल्य वस्तुको नाम के हो भनेर सोध्यो

अनि उहाँले "भगवान्‌को नाम" हो भन्नुभयो । अकिञ्चन भनेको जो- सँग दिनको लागि कुनै पनि भौतिक वस्तु हुँदैन अर्थात् निर्धन हो । वास्तविक भक्त वा महात्माले कसैलाई पनि कुनै भौतिक वस्तु दिँदैनन् किनभने उनीहरूले भौतिक सम्पत्तिको त्याग गरिसकेका हुन्छन् । उनीहरूले परम सम्पत्तिरूपी भगवान्‌को नाम प्रदान गर्न सक्दछन् किनभने भगवान्‌को एक मात्र नाम वास्तविक भक्तको सम्पत्ति हुने गर्दछ । त्यो पारस पत्थर सनातन गोस्वामीको सम्पत्ति होइन, अन्यथा पारस पत्थर त्यस्तो फोहोरको थुप्रोमा राखिने थिएन । यो उदाहरण विशेष गरेर नवदीक्षित भक्तहरूलाई विश्वास दिनका लागि दिइने गरिन्छ किनभने भौतिक आकर्षण र आध्यात्मिक विकास सँगसँगै अघि बढ्न सक्दैन । जबसम्म व्यक्तिले प्रत्येक वस्तुलाई भगवान्‌सँग आध्यात्मिक सम्बन्धमा रहेको देख्न सक्दैन, तबसम्म उसले आत्मा र पदार्थमा भिन्नता देखिरहन्छ । श्रील सनातन गोस्वामी जस्ता आध्यात्मिक गुरु, जसले प्रत्येक वस्तुलाई आध्यात्मिकरूपमा देख्न सक्नुहुन्थ्यो, उहाँले हामीजस्ता आध्यात्मिक दृष्टि नभएकाहरूलाई यो उदाहरण प्रस्तुत गर्नुभएको हो ।

भौतिक दृष्टिमा हुने विकास वा भौतिक सभ्यता आध्यात्मिक विकासको उन्नतिमा हुने गर्दछ । यस्तो भौतिक विकासले जीवलाई भौतिक शरीरसँगको बन्धनमा बाँधेर राख्दछ, जसले गर्दा जीवले भौतिक कारणहरू व्यहोर्नुपर्दछ । त्यस्तो भौतिक विकासलाई "अनर्थ" वा अनावश्यक वस्तु भनिन्छ । वास्तवमा यी वस्तु त्यस्तै अनावश्यक नै हुन्छन् । अहिलेको भौतिक विकासको प्रसङ्गमा ओठमा लगाउने श्रृङ्गार (लिपिस्टिक) लाई लिन सकिन्छ, जुन पचास सेन्टमा पाइन्छ । यस्ता धेरै अनावश्यक वस्तुहरू छन्, जुन भौतिक जीवनका अवधारणा वा विचारका उपजहरू मात्र हुन् । यस्ता अनावश्यक वस्तु तर्फ मानिसको ध्यान मोडेर मानव शक्ति नष्ट गरिरहेका छन्, मानव जीवनको प्रमुख आवश्यकता भनेको आध्यात्मिक अनुभूति प्राप्त गर्ने तर्फ भने लागेका छैनन् । अर्को उदाहरण भनेको चन्द्रमामा पुग्ने प्रयास गर्नु हो । चन्द्रमामा पुग्ने प्रयास गरेर मानव शक्ति नष्ट गरिरहेका छन् । यदि चन्द्रमामा पुगियो भने पनि मानिसका लागि जीवनका समस्याहरूको समाधान हुन सक्दैन । भगवान्‌का भक्तहरूलाई अकिञ्चन भनिन्छ किनभने व्यवहारमा नै उनीहरूसँग भौतिक सम्पत्ति नै हुँदैन । यस्तो भौतिक सम्पत्ति भनेको भौतिक प्रकृतिका तीन गुणबाट उत्पन्न हुने हो । यी गुणहरूले आध्यात्मिक शक्तिलाई नष्ट गर्दछन् वा व्यर्थ गरिदिन्छन् । त्यसैले, हामीले जति

थोरै भौतिक प्रकृतिका यस्ता उत्पादनहरू राख्दछौं, त्यति नै धेरै हामीले आध्यात्मिक प्रगति गर्ने अवसर प्राप्त गर्न सक्दछौं ।

भगवान्का यी भौतिक क्रियाकलापसँग कुनै पनि स्तरको सीधा सम्पर्क हुँदैन । उहाँले यस भौतिक जगत्मा गर्नुभएका सबै क्रियाकलाप आध्यात्मिक हुन्छन् र तिनलाई भौतिक प्रकृतिका गुणले दूषित गर्न वा प्रभावित गर्न सक्दैनन् । भगवद्गीतामा भगवान्ले भन्नुभएको छ – यस भौतिक जगत्मा वा अन्य जगत्मा मैले गरेका सबै कार्य, मेरो आविर्भाव र तिरोधान पनि दिव्य हुन्छन् । जसले यो कुरा पूर्णरूपले जान्दछ, उसले पुनः यस भौतिक जगत्मा जन्म लिनपर्दैन ऊ भगवदधाम फर्केर जान्छ ।

भौतिक रोगको कारण भनेको भौतिक प्रकृतिप्रतिको आकर्षण र त्यसमाथि आफ्नो स्वामित्व छ भन्ने भावनाले गर्दा हुने हो । यस्तो भौतिक वस्तुप्रतिको आकर्षण केवल प्रकृतिका तीन गुणको अन्तरक्रियाको कारणले गर्दा हुन्छ तर भगवान् र उहाँका भक्तहरू भने यस्तो झूटो सुख र सुविधाप्रति आसक्त हुँदैनन् । त्यसैले, भगवान् र उहाँका भक्तहरूलाई निवृत्तगुण-वृत्ति भनिन्छ । पूर्णनिवृत्त गुण-वृत्ति केवल भगवान् नै हुनुहुन्छ किनभने उहाँ कहिल्यै पनि प्रकृतिका गुणप्रति आकर्षित हुनुहुन्न तर जीवमा भने त्यसप्रति आकर्षित हुने गुण हुन्छ । यीमध्ये केही जीव भने भौतिक प्रकृतिप्रतिको मायाको आकर्षणले गर्दा त्यसैमा फँस्दछन् ।

भगवान् भक्तहरूका धन हुनुहुन्छ भने भक्त भगवान्का धन हुन् । त्यसैले, भक्तहरू निश्चित रूपले प्रकृतिका गुणभन्दा पर र दिव्य हुन्छन् र त्यो नै स्वाभाविक निष्कर्ष पनि हो । आफ्नो दुःख, दरिद्रता हटाउन, उत्सुकतावश वा कल्पनाले गर्दा भगवान्को समीप पुग्ने मिश्रित भक्तभन्दा यस्ता अनन्य र अहैतुकी भक्तहरू अति भिन्न हुन्छन् । यस्ता अनन्य भक्त र भगवान्बिच एक आपसमा दिव्य सम्बन्ध स्थापित भएको हुन्छ । तर अन्य भक्तहरूसँग भने भगवान्को विशेष सम्बन्ध हुँदैन त्यसैले, भगवान्लाई आत्माराम, आफैंमा सन्तुष्ट हुने पनि भनिन्छ । यसरी आत्माराम भएका हुनाले उहाँ सम्पूर्ण अद्वैतवादी जो भगवान्मा लीन हुन चाहन्छ, त्यस्ताहरूका स्वामी हुनुहुन्छ । यस्ता अद्वैतवादीहरू भगवान्का व्यक्तिगत तेज, जसलाई ब्रह्मज्योति भनिन्छ, त्यसमा लीन हुन्छन् तर भक्तहरू भने भगवान्का दिव्यलीलामा प्रवेश गर्न चाहन्छन् तर त्यसरी प्रवेश गर्नुलाई भौतिकजस्तै हो भनेर बुझ्नु गलत हुन्छ ।

भौतिक दृष्टिले निर्धन वा धनहीन हुनु भक्तको पहिलो योग्यता हो । जोसँग यो भौतिक जगत्मा कुनै वस्तु आफ्नो स्वामित्वमा हुँदैन, केवल भगवान् श्रीकृष्ण मात्र हुनुहुन्छ, त्यस्ता व्यक्तिलाई अकिञ्चन भनिन्छ । अकिञ्चन शब्दको अर्थ- "जसले आफ्ना सम्पूर्ण भौतिक सम्पत्तिलाई छोडेको वा हराएको हुन्छ ।" जबसम्म हामीमा अलिकति मात्र पनि भौतिक सुख प्राप्त गर्ने चाहना वा विचार रहन्छ, तबसम्म हामीले यो भौतिक शरीरलाई स्वीकार गरिरहनुपर्दछ । प्रकृति यति दयालु छिन् कि उनले हामीले यस भौतिक संसारलाई जसरी सुख भोग गर्न चाहन्छौं, उनले भगवान्को निर्देशनअनुसार त्यही सुख भोग गर्नका लागि योग्य शरीर प्रदान गर्दछिन् किनभने भगवान् प्रत्येक जीवको हृदयमा विराजमान हुनुहुन्छ र उहाँलाई प्रत्येकको चाहना के छ भन्ने जानकारी पनि छ । यो जान्दाजान्दै पनि हामी केही भौतिक वस्तु प्राप्त गर्न चाहन्छौं । त्यसैले, भगवान्ले "हुन्छ, तिम्रो यो शरीर लेऊ" भनेर हामीलाई अर्को भौतिक शरीर प्रदान गर्नुहुन्छ । भौतिक वस्तु प्राप्त गरेर हामी सुखी हुन सक्दैनौं भन्ने हामीमा अनुभव होस् र हामीले त्यो जान्न सकौं भन्ने भगवान् श्रीकृष्ण चाहनुहुन्छ र उहाँको त्यस्तै इच्छा पनि छ ।

भगवान् श्रीकृष्ण पूर्ण स्वतन्त्र हुनुहुन्छ । उहाँका मात्रा अंश भएका हुनाले हामी पनि पूर्ण स्वतन्त्र छौं तर हाम्रो स्वतन्त्रताको सङ्ख्या भने अल्प वा थोरै छ । सागरको एक थोपा पानीमा रहेको नुनको परिमाण सागरमा रहेको नुनको तुलनामा कम हुन्छ तर थोपा पानी र सागरको पानीको रासायनिक बनावट वा सम्मिश्रण भने एउटै हुन्छ । हामीसँग जे थोरै मात्रामा छन् ती सबै भगवान् श्रीकृष्णमा पूर्णरूपमा विद्यमान छन् (**जन्माद्यस्य यतः**) । उदाहरणका लागि, हामीमा अरूको वस्तु लिने वा चोर्ने इच्छा वा आकाङ्क्षा छ किन ? किनभने, त्यस्तै आकाङ्क्षा भगवान् श्रीकृष्णमा पनि छ । यदि परम ब्रह्ममा यस्तो आकांक्षा नहुँदो हो त त्यस्तो आकांक्षा हामीमा कसरी हुन सक्दछ र ? भगवान् श्रीकृष्णलाई "मख्खन चोर" भनिन्छ । तर, भगवान् श्रीकृष्णले चोरी गर्नु र हामीले चोरी गर्नुमा अन्तर छ किनभने हामीहरू भौतिकताले दूषित छौं । त्यसैले, हामीले गरेको चोरी अपराधपूर्ण हुन्छ भने त्यस्तै चोरी आध्यात्मिक स्तरमा गरिन्छ भने त्यसलाई राम्रो ठानिन्छ र त्यो सुखमय पनि हुन्छ । त्यसैले, भगवान् श्रीकृष्णले मख्खन चोर्दा पनि आमा यशोदा खुसी हुन्थिन् । आध्यात्मिक र भौतिक कार्यमा यही अन्तर छ ।

तिनै आध्यात्मिक कार्यहरू सबै राम्रा र असल हुन्छन् भने त्यस्तै भौतिक कार्य खराब र नराम्रा हुन्छन् । आध्यात्मिक र भौतिक कार्यमा यही अन्तर छ । भौतिक जगत्का तथाकथित नैतिकता र राम्रोपन सबै नराम्रा हुन् भने आध्यात्मिक जगत्मा गरिएका अनैतिक कार्य पनि राम्रा र असल हुन्छन् र यो कुरा हामीले राम्रोसँग बुझ्न आवश्यक छ । उदाहरणका लागि अर्धरात्रीमा अरूहरूकी पत्नीसँग नाच नाच्नु अनैतिक हो । साथै, वैदिक सभ्यताअनुसार पनि यो अनैतिक नै हो । आज पनि भारतमा युवतीहरूलाई अर्धरात्रीमा युवकसँग नाच्न दिइदैन तर श्रीमद्भागवत्मा जब भगवान् श्रीकृष्णले बाँसुरी बजाउनुभयो वृन्दावनका युवती, गोपीहरू उहाँसँग नाच्नका लागि तुरुन्त त्यहाँ आए । अब यो अवस्था भौतिक विचारले अनैतिक हो तर आध्यात्मिक दृष्टिले यो अति उच्चतम नैतिकताले अनुकूल मानिन्छ । त्यसैले, चैतन्य महाप्रभुले भन्नुभएको छ – **रम्या काचिदुपासना व्रजवधूवर्गेण या कल्पिता** – "अहो ! वृन्दावनका व्रजवधुहरूले विचार गरेर धारणा गरेको पूजाविधिसरह अन्य कुनै पनि राम्रा छैनन् ।" चैतन्य महाप्रभुले संन्यास ग्रहण गरेपछि उहाँले स्त्रीहरूसँगको सङ्गतलाई गरेको त्यागलाई धेरै कठोरतापूर्वक पालन गर्नुभयो । आफ्नो गृहस्थ जीवनको समयमा पनि उहाँले स्त्रीहरूसँग ख्याल-ठट्टा गर्नुभएन । उहाँले पुरुषहरूसँग भने ख्याल-ठट्टा गर्नुहुन्थ्यो तर स्त्रीहरूसँग भने गर्नुहुन्नथ्यो । एक पटक उहाँले आफ्नी पत्नी विष्णुप्रियासँग ख्याल-ठट्टा गर्नुभएको थियो । एक दिन उहाँकी आमा शचीले केही वस्तु खोज्दै हुनुहुन्थ्यो । त्यससमय चैतन्य महाप्रभुले ख्याल-ठट्टा गर्दै "तपाईंकी बुहारीले लिएकी हुन सक्छिन्" भनेर भन्नुभयो । उहाँको जीवनकालमा स्त्रीसँग गरिएको यो एकमात्र ख्यालठट्टा हामीले पाउन सक्दछौं । उहाँ ज्यादै कठोर हुनुहुन्थ्यो । जब उहाँले संन्यास लिनुभयो, स्त्रीहरू उहाँलाई नमस्कार गर्न नजिक जान पाउँदैनथे उनीहरूले टाढैबाट उहाँलाई नमस्कार गर्नुपर्दथ्यो । तैपनि, चैतन्य महाप्रभुले भन्नुभयो – **रम्या काचिदुपासना व्रजवधूर्गेण या कल्पिता** – "वृन्दावनका व्रजवधुले विचार गरेर धारणा गरेको पूजाविधिसरह उत्तम अन्य कुनै विधि छैन ।" उनीहरूको विचार र धारणा के थियो ? उनीहरूले जुनसुकै परिस्थितिमा पनि भगवान्सँग प्रेम गर्न चाहन्थे र त्यो प्रेम कहिल्यै पनि अनैतिक थिएन ।

भगवान् श्रीकृष्णसँग सम्बन्धित कुनै पनि कार्य अनैतिक हुँदैन । अर्को उदाहरण – भगवान् श्रीकृष्ण जब नृसिंहदेवको अवतार लिएर आई

हिरण्यकशिपुको वध गर्न लाग्नुभयो त्यससमय महाराज प्रह्लाद त्यहीं नजिकै थिए तर उनले त्यसरी आफ्ना पिताको वध हुँदा पनि कुनै विरोध गरेनन् । अब के यो नैतिकता हो ? कसैले पनि आफ्नो पिताको वध भएको हेर्न सक्दछ ? त्यही नजिकै बसेर पनि त्यस कार्यको विरोध गर्दैन ? यस्तो कार्यको कसैले पनि समर्थन गर्दैन र यो नैतिक कार्य हो पनि भन्दैन । तैपनि, यस्तो कार्य भयो । अझ महाराज प्रह्लादले आफ्नो पिताको वध गर्नेलाई लगाई दिन फूलको माला बनाए । उनले भने, "हे वध गर्ने प्रभु ! कृपया यो फूलको माला लिनुहोस् । हजुरले मेरो पिताको वध गर्नुभयो । हजुर ज्यादै असल हुनुहुन्छ ।" यस्तो कुरा आध्यात्मिक तरिकाले बुझ्नुपर्दछ । यदि कसैको पिताको वध हुँदैछ भने र यदि रक्षा गर्न सक्दैन भने उसले त्यसको विरोध गर्नुपर्दछ, सहायताका लागि कराउनुपर्दछ । तर, महाराज प्रह्लाद भने जब भगवान् श्रीकृष्णले भगवान् श्रीनृसिंहको रूप धारण गरेर उनका पिताको वध गर्नुभयो, महाराज प्रह्लादले वध गर्नेका लागि फूलको माला बनाए अनि नृसिंहदेवलाई भने "हे प्रिय प्रभु ! मेरा पिताको मृत्यु भएपछि सबै जना प्रसन्न छन् । त्यसैले, अब हजुरले आफ्नो रिसलाई साम्य गर्नुहोस् ।"

साधु पुरुषले एउटा पनि पशुको वध गर्ने अनुमति दिँदैनन् तर महाराज प्रह्लादले भने – **मोदेते साधुरपि वृश्चिकसर्पहत्या** – "साधुहरू बिच्छी वा सर्प मरेमा प्रसन्न नै हुन्छन् ।" विच्छी र सर्प पनि जीव नै हो त्यसैले, साधु पुरुष त्यस्ता जीवको वध भएमा पनि प्रसन्न हुँदैनन् तर महाराज प्रह्लादले भने "विच्छी र सर्प मारे साधुहरू पनि प्रसन्न हुन्छन् र मेरा पिता पनि बिच्छी र सर्पजस्तै हुनुहुन्थ्यो । अहिले उहाँको मृत्यु भएको छ । त्यसैले, सबै प्रसन्न भएका छन् ।" हिरण्यकशिपु खतरनाक राक्षस थियो र उसले भक्तहरूलाई सधैं दुःख दिइरहन्थ्यो । अहिले उसको मृत्यु भएको हुनाले साधुहरू प्रसन्न भए तर सामान्यतया साधुहरू कुनै पनि जीवको हत्या भएमा प्रसन्न हुने गर्दैनन् । हुनत भगवान् श्रीकृष्ण र महाराज प्रह्लादले अनैतिक कार्य गर्नुभएको हो तर वास्तवमा उहाँहरूले अति उच्चस्तरको नैतिक कार्य गर्नुभएको हो ।

भगवान् श्रीकृष्ण अकिञ्चन वित्त हुनुहुन्छ अर्थात् जसले सम्पूर्ण भौतिक वस्तु त्याग गरेको छ र जोसँग केवल सान्त्वना मात्र छ । चैत्यन्य चरितामृतमा भगवान् श्रीकृष्ण भन्नुहुन्छ "जुन व्यक्तिले मलाई पनि चाहन्छ साथै भौतिक सम्पत्ति पनि चाहन्छ त्यो मूर्ख नै हो ।" यदि कसैले भौतिक सम्पन्नता पनि

चाहन्छ र साथसाथै भगवान्को भक्त पनि बन्न चाहन्छ भने भगवान् श्रीकृष्ण यति दयालु हुनुहुन्छ उहाँले त्यस व्यक्तिको भौतिक जीवन असफल बनाइदिनुहुन्छ। त्यसैले, मानिसहरू कृष्णचेतनामा वा कृष्णभावनामृतमा संलग्न हुन डराउँदछन् वा भयभीत हुन्छन्। उनीहरूले सोच्दछन्, "अहो ! मेरो भौतिक सम्पन्नता नै समाप्त भयो।"

साधारणतया मानिसहरू चर्च वा मन्दिरमा भगवान्सँग भौतिक सम्पन्नता प्राप्त गर्ने प्रार्थना गर्ने गर्दछन्, "हे भगवान् ! हामीलाई दैनिक रोटी वा भोजन प्रदान गर्नुहोस्।" हुनत उनीहरू भगवान्सँग भौतिक सम्पन्नताका लागि जान्छन्, "मलाई यो पनि प्रदान गर्नुहोस्, मलाई त्यो पनि प्रदान गर्नुहोस्" आदि। तिनीहरू नास्तिकभन्दा केही पवित्र मानिन्छन् किनभने नास्तिकहरू भगवान्को समीप जाँदैनन् भने यिनीहरू जान्छन्। नास्तिकहरू भन्दछन्, "म किन भगवान्को नजिक वा समीप किन जाऊँ ? म आफैँले आफ्ना लागि सम्पत्ति कमाउँदछु र विज्ञानमा प्रगति गरेर त्यसबाट सुख प्राप्त गर्दछु।" जसले "म आफ्नो सम्पन्नताका लागि कसैसँग किन निर्भर हुने र ? म आफैं बल र ज्ञानमा निर्भर गर्दछु" भनेर सोच्दछ, त्यसलाई "**दुष्कृति**" वा पापी व्यक्ति भनिन्छ तर जसले "मेरो सम्पन्नता भनेको भगवान्को कृपामा निर्भर छ" भनेर सोच्दछ, त्यो व्यक्ति पवित्र आत्मा हो।

वास्तवमा भगवान्को स्वीकृति नभई मानिसले कुनै पनि वस्तु प्राप्त गर्न सक्दैन, यो नै तथ्य पनि हो। **तावत् तनरिदं तनूपेक्षितानाम** – हामीले आफ्ना कष्टबाट मुक्ति प्राप्त गर्ने धेरै विधिहरूको खोजी गऱ्यौं तर जबसम्म भगवान्ले त्यो कष्टबाट मुक्ति प्राप्त गर्ने स्वीकृति प्रदान गर्नुहुन्न, तबसम्म ती सबै विधि असफल भइरहन्छन्। उदाहरणका लागि – कुनै बिरामी व्यक्तिले योग्य चिकित्सकसँग जचाएर असल औषधी सेवन गरिरहेको छ र यदि हामीले त्यो चिकित्सकलाई के तपाईंले यो बिरामीको जीवनको रक्षाको जिम्मा लिन सक्नुहुन्छ ? भन्यौं भने चिकित्सकले "अहँ म लिन सक्दिनँ, मैले सकेसम्म प्रयास मात्र गर्ने हो त्यति नै हो" भन्दछ। बुद्धिमान् चिकित्सकलाई "बिरामीलाई निको गर्ने नगर्ने भन्ने कुराको स्वीकृति भगवान्बाट मात्र हुन्छ र आफू भनेको केवल एउटा निमित्त वा औजार मात्र हो" भन्ने जानकारी हुन्छ। यदि भगवान्ले त्यो बिरामीलाई बचाउन चाहनु भएन भने मेरा सम्पूर्ण औषधी र मेरा सबै वैज्ञानिक ज्ञान निष्फल हुन्छन् भन्ने कुरा त्यस चिकित्सकलाई जानकारी हुन्छ।

त्यसैले, अन्तिम स्वीकृति दिने भनेको केवल भगवान् श्रीकृष्ण मात्र हुनुहुन्छ । जसलाई यस कुराको बारेमा जानकारी हुँदैन, तिनीहरूलाई मूर्ख वा दुष्ट भनिन्छ । उनीहरूले जे कार्य गरिरहेका छन्, ती सबै जति उत्तम कार्य भए पनि यदि भगवान्लाई स्वीकार्य छैनन् भने ती सबै कार्य व्यर्थ वा निष्फल हुन्छन् । अर्कोतिर भक्तलाई थाहा हुन्छ "मैले मेरो बुद्धिद्वारा जेजति सुख प्राप्त गर्ने प्रयास गरिरहेको छु, यदि भगवान् श्रीकृष्णले स्वीकृति दिनुभएन भने म कहिल्यै पनि सुखी हुन सक्दिन ।" भक्त र अभक्तबिचको सोचाइको अन्तर नै यस्तो हुन्छ ।

पहिला पनि भनिएको छ, भगवान् श्रीकृष्ण भन्नुहुन्छ – "जुन व्यक्ति कृष्णचेतनाले युक्त हुन चाहन्छ र मेरो समीप आउने प्रयास गर्दछ, साथै त्यही समयमा भौतिक सुख पनि चाहन्छ भने त्यस्तो व्यक्ति त्यति बुद्धिमान् मानिँदैन र उसले आफ्नो समयको अपव्यय मात्र गरिरहेको हुन्छ ।" हाम्रो मुख्य कार्य भनेको नै केवल कृष्णचेतनाले युक्त हुनु हो र मानव जीवनको मुख्य कार्य पनि त्यो नै मात्र हो । यदि हामीले केवल भौतिक सम्पन्नता र उन्नति मात्रको चाहना गरेर हरे कृष्ण जप्न बिर्सियौं भने त्यो हाम्रो लागि ठुलो हानी हुनेछ । त्यसैले, भगवान् श्रीकृष्ण भन्नुहुन्छ – **आमि-विज्ञ, एइ मूर्खे 'विषय' केन दिबा** – (चैतन्य-चरितामृत मध्य २२.३९) "जुन व्यक्ति दुष्ट छ, उसले मात्र मेरो भक्तिसेवाको सट्टामा मसँग भौतिक सम्पन्नता माग्दछ तर मैले उसलाई भौतिक सम्पन्नता किन दिने ? बरु ऊसँग जेजति भौतिक सम्पन्नता छ त्यो नै फिर्ता लिन्छु ।"

जब हामीसँग भएको भौतिक सम्पत्ति हामीबाट खोसिन्छ अनि हामी ज्यादै खिन्न हुन्छौं तर त्यसो हुनु हाम्रो परीक्षा गरिएको हो । यस्तो कुरा स्वयम् भगवान् श्रीकृष्णले महाराज युधिष्ठिरलाई भन्नुभएको छ । महाराज युधिष्ठिरले एक पटक भगवान् श्रीकृष्णसँग प्रश्न सोधे "हामी पूर्णरूपले हजुरमा आश्रित छौं तैपनि यति धेरै भौतिक कष्ट पाइरहेका छौं । हाम्रो साम्राज्य हामीबाट खोसियो, हाम्री पत्नीको अपमान गरियो र हाम्रा शत्रुहरूले हामीलाई घरभित्र नै जलाएर मार्ने प्रयास गरे । यो सबै कसरी हुन सक्दछ ? भगवान् श्रीकृष्णले उत्तर दिँदै भन्नु भयो – **यस्याहमनुगृणामि हरिष्ये तद्धनं शनैः** । "यदि मैले कसैलाई विशेष कृपा गर्नुछ भने मैले उसका सबै आम्दानीका स्रोत खोसिदिन्छु अनि उसलाई अति कष्टमा पारिदिन्छु, "यो नै मेरो पहिलो कार्य हुन्छ । यसरी, भगवान् श्रीकृष्ण कहिलेकाहीँ अति घातक वा खतरनाक देखिनुहुन्छ ।

यस सम्बन्धमा मैले वास्तविक अनुभव गरेको छु । यस सम्बन्धको वर्णन म लामो गरेर भन्न चाहन्नँ तर भगवान् श्रीकृष्णको विशेष कृपा मैले प्राप्त गरेको छु त्यो तथ्य नै हो । जब म पच्चीस वर्षको थिएँ, मेरा गुरु महाराजले मलाई प्रचार गर्ने आदेश दिनु भएको थियो । तर मैले "पहिला म धनी बन्नुपर्दछ अनि त्यो धनको उपयोग प्रचारमा गरुँला" भन्ने सोचें । मलाई अत्यन्त ठुलो व्यापारी बन्ने अवसर पनि प्राप्त भएको थियो । एउटा ज्योतिषीले पनि म भारतको सबैभन्दा धनीमध्ये एक हुन सक्दछु भनेर भनेका थिए र त्यो मेरालागि राम्रो अवसर र सम्भावना पनि थियो । म एउटा रासायनिक उद्योगमा प्रबन्धक थिएँ । मैले आफ्नो निजी उद्योग सञ्चालन गरेँ र त्यो सफल पनि भयो । तर केही कारणले गर्दा मेरो उद्योग नै समाप्त भयो । त्यसले गर्दा म आफ्नो गुरु महाराजको आदेश पालना गर्न वाध्य भएँ । जब मेरो सम्पूर्ण भौतिक सम्पत्ति खोसियो अनि म भगवान् श्रीकृष्णसमीप गएर भने "हजुर एक मात्र मेरा आश्रय हुनुहुन्छ ।" त्यसैले, भगवान् श्रीकृष्ण अकिञ्चनवित्त हुनुहुन्छ । जब मानिस सम्पूर्ण ऐश्वर्य र सम्पत्तिले विहीन बनाइन्छ अनि ऊ भगवान् श्रीकृष्ण तर्फ फर्कन्छ । अनि वल्ल अब मैले केही हराएको छैन, बरू केही पाएको छु' भन्ने अनुभव हुन्छ ।

भगवान् श्रीकृष्णका निमित्त भौतिक ऐश्वर्यको हानि भए पनि त्यो हानि हुँदैन । बरु, त्यो सबैभन्दा ठुलो लाभ हुन्छ अनि उसका लागि भगवान् श्रीकृष्ण नै एक मात्र धन बन्नुहुन्छ । यस कुराको भावलाई नरोत्तमदास ठाकुरले यसरी व्यक्ति गर्नुभएको छ –

**हा हाम प्रभु नन्द-सुत, वृषभानुसुता-युत**
**करुणा करह एइ-बार ।**
**नरोत्तमदास कहे, न ठेलिया रंग-पाय**
**तुमि विना के आछे आमार ॥**

"के कृष्ण ! मलाई हजुरका अतिरिक्त अरू केही पनि चाहिंदैन । मसँग केही पनि छैन, हजुर नै मेरो धन हुनुहुन्छ । त्यसैले, कृपया मलाई तिरस्कार नगर्नुहोस् ।"

यस्तो अवस्था हुनु भनेको उत्तम हो । जब मानिस कुनै पनि भौतिक वस्तुमा आश्रित नभएर केवल भगवान् श्रीकृष्णमा आश्रित हुन्छ अनि उसले उच्चकोटिको कृष्णचेतनाको स्थिति प्राप्त गर्दछ । त्यसैले, भगवान् श्रीकृष्णलाई अकिञ्चनवित्त

भनेर सम्बोधन गरिन्छ । "जब मानिस भौतिक सम्पत्तिबाट विहीन भएर निर्धन हुन्छ, उसका लागि हजुर एक मात्र धन बन्नुहुन्छ ।" **नमोऽकिञ्चनवित्ताय निवृत्तगुणवृत्तये** – "जब मानिसले हजुरलाई आफ्नो एक मात्र धन बनाउँदछ अनि ऊ भौतिक प्रकृतिका कार्यबाट तुरुन्त मुक्त हुन्छ ।" अर्को शब्दमा भन्नुपर्दा – भगवान् श्रीकृष्णलाई अङ्गिकार गरेपछि मानिसले दिव्य परम पद प्राप्त गर्दछ । **आत्मारामाय** – "हे कृष्ण ! त्यसरी दिव्यपद प्राप्त गरेपछि मानिस हजुरसँग-सँगै सुखी हुन्छ, हजुर जस्तै सुखी बन्दछ ।" भगवान् श्रीकृष्णको शरीर र भगवान् श्रीकृष्णमा कुनै भिन्नता छैन र उहाँ पूर्णरूपले आत्मा हुनुहुन्छ । तर अर्को तर्फ हामीसँग शरीर छ, जुन हामीभन्दा भिन्न छ । म आत्मा हुँ तर मैले भौतिक शरीर प्राप्त गरेको छु तर जब म वास्तवमा नै आफैंमा पूर्ण सन्तुष्ट वा आत्माराम भगवान् श्रीकृष्णमा आश्रित हुन्छु अनि म पनि भगवान् श्रीकृष्णसँग-सँगै आत्माराम वा पूर्ण सन्तुष्ट बन्न सक्दछु ।

**कैवल्यपतये नमः** – मायावादी दार्शनिक वा अद्वैतवादीहरू परमेश्वरमा लीन हुन चाहन्छन् । परमेश्वर आत्माराम वा आफूमा नै सन्तुष्ट हुनुहुन्छ र ती मायावादीहरू पनि परमेश्वरमा लीन भएर आत्माराम बन्न चाहन्छन् । हामी कृष्णभावनामृतहरूको दर्शन पनि यस्तै समान हुन्छ तर हामीहरू भने भगवान्मा लीन हुने होइन, उहाँमा आश्रित हुन चाहन्छौं र यो नै वास्तविक लीन वा एकाकार हुनु हो । हामीले सामान्य रूपले भगवान् श्रीकृष्णको आदेश पालन गर्दै उहाँसँग कुनै असहमति नगरे त्यसबाट नै हामीले वास्तविक एकाकार वा एकत्व प्राप्त गर्दछौं ।

"मैले किन आफ्नो पृथक् अस्तित्व राख्ने ? म परमेश्वरमा लीन हुन चाहन्छु" मायावादी दार्शनिकहरूको विचार यस्तै नै हुन्छ तर यस्तो सम्भव छैन । हामी प्रारम्भदेखि नै भगवान् श्रीकृष्णबाट अलग भएका उहाँका अंश हौं । त्यसैले, भगवान् श्रीकृष्णले भगवद्गीतामा भन्नुभएको छ, "हे अर्जुन ! यस युद्धस्थलमा एकत्र भएका म, तिमी र यी सबै भूतकालमा पनि हामी व्यक्ति थियौं, वर्तमानमा पनि व्यक्ति नै छौं र भविष्यमा पनि व्यक्ति नै रहन्छौं भन्ने कुरा तिमीले जान ।"

**नित्यो नित्यानां चेतनश्चेतनानाम्** – भगवान् श्रीकृष्ण परमनित्य हुनुहुन्छ र असङ्ख्य प्राणहरू मध्ये परमप्राण हुनुहुन्छ । हामी (जीव) असङ्ख्य (अनन्त) छौं । हामी कति छौं भनेर सङ्ख्यामा गन्न नै सकिंदैन । यसैगरेर, भगवान् श्रीकृष्ण पनि जीव नै हुनुहुन्छ तर उहाँ परमजीव हुनुहुन्छ । हामी र उहाँमा यो

नै अन्तर वा भिन्नता छ । जसरी एउटा नेताका प्रशस्त अनुयायी वा समर्थक हुन्छन्, त्यसरी नै भगवान् श्रीकृष्ण परमजीव र सर्वोच्च नेता हुनुहुन्छ र हामी उहाँका अनुयायी र उहाँका अधीनमा आश्रित जीव हौं ।

हामी भगवान्मा आश्रित छौं भनेर बुझ्न ज्यादै कठिन छैन । यदि भगवान् श्रीकृष्णले हामीलाई भोजन प्रदान गर्नुभएन भने हामी भोकै मर्नेछौं किनभने हामी स्वतन्त्ररूपले केही पनि उत्पादन गर्न सक्दैनौं । **एको बहूनां यो विदधाति कामान्** – भगवान् श्रीकृष्णले सबैको पालन गरिरहनुभएको छ र हामीहरू उहाँबाट पालिएका छौं त्यसैले, भगवान् श्रीकृष्ण सही प्रभु हुनुहुन्छ र हामी उहाँको प्रभुत्वमा रहन इच्छुक हुनपर्दछ । त्यो नै हाम्रो स्वाभाविक स्थिति वा प्राकृतिक वैधानिक परिस्थिति हो । तर, यदि हामी झुटो तरिकाले यस भौतिक जगत्को प्रभु बन्न खोज्दछौं भने हामी मोह वा भ्रममा परेका हुन्छौं । हामीले यो भ्रम वा मोहलाई त्यागेर सधैं भगवान् श्रीकृष्णको प्रभुत्वलाई स्वीकार गर्ने प्रयास गर्नुपर्दछ अनि मात्र हाम्रो जीवन सफल हुन्छ ।

***

# ११. परम शक्तिको स्पर्श

**मन्ये त्वां कालमीशानम् अनादिनिधनं विभुम् ।**
**समं चरन्तं सर्वत्र भूतानां यन्मिथः कलिः ॥**

हे भगवान् ! म हजुरलाई शाश्वत काल, परम नियन्त्रक आदि र अन्त रहित र सर्वव्यापी मान्दछु । हजुर सबैलाई समानरूपले कृपा प्रदान गर्नुहुन्छ । जीवहरूमा जुन पारस्परिक विषमता वा भिन्नता देखिन्छ, त्यो केवल सामाजिक सङ्घर्षले देखा परेको हो ।

**–(श्रीमद्भागवत् १.८.२४)**

भगवान् श्रीकृष्ण कुन्तीदेवीका भदा पनि हुनुहुन्न र उनको पितृकुलको परिवारको सामान्य सदस्य पनि हुनुहुन्न भनेर कुन्तीदेवीलाई थाहा थियो । भगवान् श्रीकृष्ण आदिदेव हुनुहन्छ र उहाँ प्रत्येक हृदयमा परमात्मा भएर विराजमान हुनुहुन्छ भन्ने कुरा उनलाई पूर्णरूपले जानकारी थियो । परमात्मारूपी भगवान्को अर्को नाम काल वा शाश्वत समय पनि हो । हाम्रा असल वा खराब कर्मको साक्षी भएर बस्ने काल हो र उसले नै हाम्रो कर्मअनुसारको फल निर्धारित गर्दछ । त्यसैले, हामीले "हामीलाई किन दुःखकष्ट भइरहेको छ" मलाई थाहा छैन भन्नु व्यर्थ हो । हामीले आफूले गरेका दुष्कर्म भुल्न सक्दछौं र ती दुष्कर्मले गर्दा अहिले दुःखकष्ट पनि भोगिरहेका हुन्छौं तर परमात्मा भने हामीसँग नित्य सँगै हुनुहुन्छ र उहाँले हाम्रा पूर्व, अहिले र भविष्यमा हुने सबै कर्मका बारेमा जान्नु हुन्छ भन्ने कुरा हामीले स्मरण गर्नुपर्दछ वा बुझ्नपर्दछ किनभने भगवान् श्रीकृष्ण परमात्मा स्वरूप हुनुहुन्छ र हाम्रा सबै कर्म र तिनका फलको निर्धारण गर्नुहुन्छ त्यसैले, उहाँ परम नियन्त्रक हुनुहुन्छ । उहाँको स्वीकृतिविना घाँसको एउटा पात पनि हल्लिदैन । जीवहरूलाई उनीहरूको योग्यताअनुसारको स्वतन्त्रता प्रदान गरिएको छ तर त्यो स्वतन्त्रताको दुरुपयोग गरिएको कारणले नै जीवले दुःखकष्ट पाउने गर्दछ । भगवान्का भक्तहरूले त्यो स्वतन्त्रताको कहिल्यै पनि दुरुपयोग गर्दैनन् । त्यसैले, उनीहरू भगवान्का असल सन्तान हुन्छन् । तर

अन्य, जसले त्यो स्वतन्त्रताको दुरुपयोग गर्दछ, उसलाई कालले दुःखकष्ट दिन्छ। त्यही कालले नै बन्धनमा परेका जीवलाई सुख र दुःख दुवै प्रदान गर्दछन् र त्यो सबै कालद्वारा पूर्व निर्धारित गरिएको हुन्छ । जसरी हामीले नचाहँदा नचाहँदै पनि दुःख आइपर्दछ, त्यसरी नै लालसा नगर्दा नगर्दै पनि सुख आउँदछ किनभने त्यो सबै कालले पहिला नै निर्धारण गरिसकेको हुन्छ । त्यसैले, भगवान्का न कोही शत्रु हुन्छन्, न कोही मित्र नै हुन्छन् । प्रत्येक प्राणीले आफ्नो कर्मको फल वा भाग्य जीवले सामाजिक सङ्घर्ष गर्दा आफूले नै निर्माण गरेको हुन्छ । यहाँ प्रत्येक प्राणीले प्रकृति माथि आफ्नो प्रभुत्व कायम गर्ने प्रयास गर्दछ । त्यसैले, प्रत्येक प्राणीले भगवान्को अध्यक्षतामा आफ्नो-आफ्नो भाग्य बनाउँदछ । भगवान् सर्वव्यापी हुनुभएका हुनाले उहाँले प्रत्येक प्राणीका कर्महरू हेर्न सक्नुहुन्छ । भगवान्को प्रारम्भ र अन्त्य नभएको हुनाले उहाँलाई शाश्वत समय वा काल भनिन्छ ।

कुन्तीदेवीले यहाँ जे भनेकी छिन्, त्यसको पुष्टि भगवान्ले भगवद्गीतामा स्वयम् आफैंले गर्नुभएको छ । भगवान्ले भन्नुभएको छ –

**समोऽहं सर्वभूतेषु न मे द्वेष्योऽस्ति न प्रियः ।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम् ॥**

"मैले न कसैसँग द्वेष गर्दछु न कसैलाई पक्षपात नै गर्दछु, सबैलाई समान भाव राख्दछु । तर, जसले भक्तिपूर्वक मेरो सेवा गर्दछ ऊ मेरो मित्र हुन्छ र म उसको मित्र हुन्छु ।" भगवान्ले कहिल्यै पनि पक्षपात गर्नुहुन्न किनभने सम्पूर्ण प्राणी उहाँकै सन्तान हुन् त्यसैले, भगवान्ले कुनै एउटा सन्तानलाई भन्दा अर्को सन्तानको पक्ष कसरी लिन सक्नुहुन्छ ? त्यसो गर्नु सम्भव नै छैन । तर, मानिसले भने पक्षपात गरिरहन्छ । हामीले लेख्ने गर्दछौं "हामी भगवान्मा विश्वास गर्दछौं" तर जुन व्यक्तिले भगवान्मा विश्वास गर्दछ, उसले सबै जीवमा समानरूपले दयालु र कृपालु भाव राख्नपर्दछ र त्यो नै ईश्वरीय चेतना पनि हो ।

भगवान् श्रीकृष्ण भन्नुहुन्छ – **न मे द्वेष्योऽस्ति न प्रियः** – "मेरा न कोही शत्रु छन् न मेरा मित्र छन् ।" द्वेष शब्दको अर्थ शत्रु हो । हामी हाम्रा शत्रुहरूप्रति ईर्ष्या वा शत्रुता राख्दछौं भने मित्रहरूसँग मैत्रीभाव राख्दछौं तर भगवान् श्रीकृष्ण परम भएर पनि कहिलेकाहीं असुरहरूसँग शत्रुवत् व्यवहार गरेपनि वास्तवमा उहाँ तिनीहरूसँग मित्र नै रहनुहुन्छ । जब भगवान् श्रीकृष्णले कुनै असुरको वध गर्नुहुन्छ वास्तवमा उहाँले त्यस असुरको आसुरीक कार्यको संहार गर्नुभएको

हुन्छ । त्यसैले, त्यो असुर सन्त बन्दछ अनि ऊ भगवान्‌को निर्विशेष तेज अर्थात् ब्रह्मज्योतिमा लीन हुन्छ ।

परमसत्य वा परम ब्रह्मा तीन स्वरूपमध्ये ब्रह्मज्योति एउटा स्वरूप हो ।

**वदन्ति तत्तत्त्वविदस्तत्त्वं यज्ज्ञानमद्वयम् ।**
**ब्रह्मेति परमात्मेति भगवान् इत शब्द्यते ॥**

**(भागवत् १.२.११)**

परब्रह्म एउटा मात्र हुनुहुन्छ तर उहाँलाई ब्रह्म, परमात्मा र भगवान् तीनरूपमा अवगत गर्न वा अनुभूति गर्न सकिन्छ । परब्रह्मको मूल र पूर्णस्वरूप भनेको भगवान् हो र उहाँका प्रतिनिधिरूपी अंश भनेका परमात्मा हुनुहुन्छ, जसलाई क्षिरोदकशायी विष्णु पनि भनिन्छ र उहाँ प्रत्येकका हृदयमा विराजमान पनि हुनुहुन्छ (**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति**) । परब्रह्मको तेस्रो स्वरूप भनेको ब्रह्म हो, जुन उहाँको सर्वव्यापी व्यक्तिगत तेज पनि हो ।

परब्रह्म सबैका लागि समान हुनुहुन्छ तर प्रत्येकले आफूले उहाँसम्म पुग्न जुन विधिअनुसार कार्य गरेको छ सोहीअनुसार उहाँलाई अनुभूति गर्ने गर्दछ (**ये यथा मां प्रपद्यन्ते**) । मानिसको आफ्नो बुझ्ने क्षमताअनुसार नै परब्रह्म या निर्विशेष ब्रह्मको रूपमा या अन्तर्यामी परमात्माका रूपमा या अन्ततः भगवान्‌का रूपमा प्रकट हुनुहुन्छ ।

यससम्बन्धी व्याख्या उदाहरण दिएर दिन सकिन्छ । कहिलेकाहीँ हामीले आफ्नो कोठाबाट पहाडलाई देख्छौं तर त्यो स्पष्टसँग देखिँदैन । लस एन्जल्समा धेरै पहाडहरू छन् तर हामीले तिनलाई टाढाबाट हेर्ने हुनाले धूवाँ वा कुहिरोले छेकेको जस्तो मात्र देख्दछौं । यदि हामी पहाडतिर जान सुरु गर्दछौं अनि बल्ल हामीले पहाड स्पष्टसँग देख्न सक्दछौं । यदि हामी अझ पहाडको नजिक गयौं भने हामीले त्यहाँ स्पष्टसँग धेरै मानिस त्यहाँ काम गरिरहेका देख्न सक्छौं, घरहरू, बाटोहरू, गाडीहरू र अन्य धेरै कुरा स्पष्टसँग देख्न सक्दछौं । त्यसैगरेर, जब कसैले परब्रह्मका बारेमा आफ्नो सानो मस्तिष्कले "म अब अनुसन्धान गर्दै परब्रह्मलाई पत्ता लगाउँदछु" भन्ने सोच्दछ भने उसले विशाल र अस्पष्ट निर्विशेष विचार प्राप्त गर्दछ तर यदि ऊ अरू अघि गयो भने ऊ ध्यान गर्ने बन्दछ अनि उसले भगवान् आफ्नै हृदयभित्र विराजमान हुनुभएको थाहा पाउँदछ । **ध्यानावस्थिततद्‌गतेनमनसा पश्यत्ति यं योगिनः** – सही योगीहरू ध्यानद्वारा भगवान् श्री विष्णुको रूप आफ्नो हृदयमा विराजमान भएको देख्न

सक्दछन् । जसरी हामी एक अर्कोसँग आमनेसामने बसेर कुराकानी गरिरहेका छौं, त्यसरी नै भक्तहरूले भने परम पुरुषसँग वार्तालाप गर्दछन् । भगवान्‌ले भक्तहरूलाई “मलाई यो वस्तु ल्याऊ” भनेर आदेश दिनुहुन्छ अनि भक्तले त्यो आवश्यक वस्तु ल्याएर भगवान्‌लाई प्रत्यक्ष सेवा गर्दछ । हुनत परब्रह्म प्रत्येक प्राणीप्रति समान हुनुहुन्छ तर प्राणीमा परब्रह्मको विभिन्न प्रकारको अनुभूति हुन्छ र उहाँलाई बुझ्ने क्षमता पनि हाम्रो प्रगतिअनुसार हुने गर्दछ । त्यसैले, कुन्तीले भन्दछिन् – **समं चरन्तं सर्वत्र** – “आफ्नो कृपा प्रदान गर्न हजुर सबैमा समान भाव राख्नुहुन्छ ।”

**चरन्तं** शब्दको अर्थ चलिरहनु वा हिंडडुल गरिरहनु वा गतिशील हुनु हो । भगवान् भित्र बाहिर र सर्वत्र हिँडिरहनुहुन्छ तर त्यो देख्नका लागि हामीले हाम्रो दृष्टि सफा गर्नुपर्दछ अनि मात्र हामीले त्यो गतिशिलतालाई देख्न सक्दछौं । भक्तिद्वारा हामीले हाम्रा इन्द्रियहरू शुद्ध गर्न सक्दछौं अनि हामीले भगवान्‌को उपस्थितिको अनुभूति गर्न सक्दछौं । जुन व्यक्ति अल्पज्ञानी छ उसले भगवान्‌लाई आफूभित्र खोज्ने प्रयास गर्दछ भने जुन व्यक्तिको बुद्धि ज्यादै विकसित छ उसले भगवान्‌लाई भित्रबाहिर दुवै स्थानमा देख्न सक्दछ ।

ध्यानयोगको पद्धति जुन व्यक्ति अल्पज्ञानी छ, तिनीहरूका लागि हो । जसले योग गर्दछ उसले ध्यामको अभ्यास गर्दा आफ्ना इन्द्रियहरूलाई नियन्त्रणमा राख्नुपर्दछ (**योग इन्द्रिय संयमः**) । हाम्रा इन्द्रियहरू अति चञ्चल छन् । त्यसैले, मानिसले विभिन्न आसनमा बस्ने अभ्यास गरेर मन र इन्द्रियलाई वशमा राख्नुपर्दछ अनि आफ्नो हृदयमा विराजमान भगवान् श्रीविष्णुमा मन एकाग्र गर्नपर्दछ । जुन व्यक्ति अत्यधिकरूपले शरीर नै आत्मा भन्ने बुद्धिमा नै लिप्त छ, त्यस व्यक्तिका लागि नै यो योगपद्धति सिफारिस गरिन्छ । तर, भक्तहरू भने यस भन्दा धेरै अघि बढिसकेको हुने हुनाले उनीहरूले इन्द्रिय नियन्त्रण गर्ने अर्को कुनै पद्धतिको अनुसरण गर्न पर्दैन किनभने उनीहरू भक्तिमा लागेर नै इन्द्रियलाई वशमा गरिरहेका हुन्छन् ।

उदाहरणका लागि, यदि कुनै व्यक्ति भगवान्‌को अर्चाविग्रहको पूजा गर्दछ, मन्दिरको सफाइ गर्दछ, अर्चाविग्रहको श्रृङ्गार गर्दछ, अर्चाविग्रहका लागि प्रसाद पकाउँदछ वा अन्य कुनै कार्य गर्दछ भने उसको इन्द्रिय पहिलादेखि नै परब्रह्मको सेवामा लागि रहेको हुन्छ । त्यसैले, उसका इन्द्रिय विचलित भएर अन्यत्र जाने मौका नै हुँदैन । **हृषीकेण हृषीकेशसेवनं भक्तरुच्यते** – “भक्तिको अर्थ

सामान्यरूपले आफ्ना इन्द्रियहरू (हृषीक) लाई इन्द्रियका स्वामी (हृषीकेश) को सेवामा लगाउनु हो । तर अहिले हाम्रा इन्द्रियहरू इन्द्रियतृप्तिमा लागेका छन् किनभने मैले सोच्दछु "म यो शरीर हुँ । त्यसैले, मैले मेरो इन्द्रियहरूलाई सन्तुष्ट गर्नुपर्दछ ।" तर, वास्तवमा यो जीवन दूषित अवस्थामा छ । जब मानिसले "म यो शरीर होइन, म आत्मा हुँ, भगवान्‌को अंश हुँ" भनेर जान्दछ अनि उसले आध्यात्मिक इन्द्रियहरू परमआत्माको सेवामा लगाउनुपर्दछ भनेर जान्दछ अनि मात्र उसले मुक्ति प्राप्त गर्दछ ।

जब मानिसले शरीर नै आत्मा हो भन्ने झुटो विचारलाई त्याग गर्दछ अनि भगवान्‌को सेवा गर्ने वास्तविक अवस्था प्राप्त गर्दछ मात्र मानिसले मुक्ति प्राप्त गर्दछ (**मुक्तिर्हित्वान्यथा रूपं स्वरूपेण व्यवस्थितिः** – भागवत् २.१०.६) । जब हामी बन्धनमा पर्दछौं अनि हामीले आफ्नो स्वाभाविक स्थिति छोडिदिन्छौं । जुन हाम्रो स्वाभाविक स्थिति हो, त्यसको बारेमा चैतन्य महाप्रभुले भन्नुभएको छ, त्यो स्थिति भनेको "भगवान् श्रीकृष्णको नित्य सेवा गर्नु" हो (**जीवेर स्वरूप हय-कृष्णेर नित्य-दास**) । जति चाँडो हामीले आफूलाई भगवान्‌को सेवामा लगाउँदछौं, त्यति नै चाँडो हामी मुक्त हुन्छौं । त्यससमय अन्य कुनै प्रारम्भिक प्रक्रिया भएर जाने आवश्यकता नै पर्दैन । भगवान्‌को सेवामा आफ्ना इन्द्रियहरूलाई लगाउनु नै मुक्ति प्राप्त गरेको प्रमाण हो ।

यो मुक्ति प्रत्येकलाई खुला छ वा सुलभ छ (**समं चरन्तम्**) भगवद्गीतामा भगवान् श्रीकृष्णले अर्जुनलाई भन्दा "केवल तिमी मात्र मसँग आउन पाउने छौ र तिमीले मात्र मुक्ति पाउने छौ" भनेर भन्नुभएको छैन । त्यसैले, भगवान् सबैका लागि उपलब्ध हुनुहुन्छ । भगवान् श्रीकृष्णले भन्नुहुन्छ, – **सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज** – "सबै प्रकारका कार्यको त्याग गरेर केवल एक मात्र मेरो शरण आऊ ।" भगवान्‌ले यो कुरा केवल अर्जुनलाई मात्र भन्नुभएको छैन, अन्य सबैलाई भन्नुभएको हो । भगवद्गीता भन्ने समयमा अर्जुन मुख्य लक्ष्य थिए तर यो प्रत्येक व्यक्ति र सम्पूर्ण मानवहरूका लागि भनिएको हो त्यसैले, हामी सबैले यसबाट लाभ लिनपर्दछ ।

भगवान् श्रीकृष्णको निष्पक्षताको उपमा सूर्यसँग गर्न सकिन्छ । किनभने सूर्यले "यहाँ गरिब बस्दछ, यहाँ तल्लो जातिको व्यक्ति बस्दछ, यहाँ सुँगुर बसेको छ, त्यसैले, मैले मेरो प्रकाश तिनीहरूलाई दिन्न" भनेर भन्नुहुन्न । त्यसो होइन सूर्यले आफ्नो प्रकाश सबैलाई समानरूपले वितरण गर्नुहुन्छ र हामीले त्यसको

सही उपयोग गर्नुपर्दछ। सूर्यको प्रकाश सहजै प्राप्त गर्न सकिन्छ तर यदि हामीले आफ्ना घरका झ्यालढोका बन्द गरेर अन्धकारमा बस्न चाहन्छौं भने त्यो हाम्रो मात्र निर्णय हो। त्यसैगरेर, भगवान् श्रीकृष्ण पनि सर्वत्र हुनुहुन्छ। सबैका लागि हुनुहुन्छ र यदि हामी उहाँको शरणमा गयौं भने हामीलाई स्वीकार गर्न पनि तयार हुनुहुन्छ। **समं चरन्तम्** – त्यहाँ कुनै रोकटोक वा अवरोध हुँदैन। मानिसहरू तल्लो जात र माथिल्लो जात भनेर भेदभाव गर्दछन् तर भगवान् श्रीकृष्ण भन्नुहुन्छ – **मां हि पार्थ व्यपाश्रित्य येऽपि स्युः पापयोनयः** (भगवद्गीता ९.३२)। "कोही निम्न जातिको किन नहोस्, त्यसले केही अन्तर हुँदैन यदि ऊ मेरो शरणमा आउँदछ भने ऊ भगवद्धाम जान योग्य हुन्छ।"

यही भगवान् श्रीकृष्णलाई कुन्तीदेवीले नित्य वा शाश्वत समय (काल) को रूपमा वर्णन गरेकी छिन्। प्रत्येक कार्य समयअनुसार नै हुने गर्दछ। तर, हाम्रो भूतकाल, वर्तमानकाल र भविष्यकालको जुन गणना गर्दछौं त्यो भने सापेक्ष वा एक अर्काको पूरक हुन्छ। एउटा सामान्य कमिलाको भूत, वर्तमान र भविष्यको नापको परिमाण हाम्रो भूत, वर्तमान र भविष्यकोभन्दा फरक हुन्छ। त्यसरी नै हाम्रो भूत, वर्तमान र भविष्यको नापभन्दा यस ब्रह्माण्डका जीवहरूका मुख्य स्रष्टा ब्रह्माजीको भूत, वर्तमान र भविष्य नाप फरक हुन्छ तर भगवान् श्रीकृष्णको भूत, वर्तमान र भविष्य नै हुँदैन। त्यसैले, उहाँ नित्य वा शाश्वत हुनुहुन्छ। हाम्रो भूत, वर्तमान र भविष्य हुन्छ किनभने हामीले बारम्बार एउटा शरीर पछि अर्को शरीर परिवर्तन गरिरहेका हुन्छौं। यो जुन शरीर अहिले धारण गरिरहेका छौं त्यसको पनि समय तोकिएका छ। एउटा निश्चित तिथिमा बुबाआमाबाट मेरो जन्म भयो र यो शरीर केही समयसम्म यहाँ रहन्छ। यो शरीर बढ्दछ, यसले केही उत्पादन गर्दछ, बूढो हुन्छ अनि यो शरीर समाप्त हुन्छ। त्यसपछि, मैले अर्को शरीर धारण गर्नपर्दछ। अहिले यस शरीरसँग सम्बन्ध रहेका मेरा भूत, वर्तमान र भविष्य सबै समाप्त हुन्छन् र मैले अर्को शरीर धारण गर्नपर्दछ अनि पुनः मेरो त्यस शरीरसँगका भूत, वर्तमान र भविष्य सुरु हुन्छन्। तर, भगवान् श्रीकृष्णको भूत, वर्तमान र भविष्य नै हुँदैन किनभने उहाँले आफ्नो शरीर बारम्बार परिवर्तन गर्नुपर्दैन। हामी र भगवान् श्रीकृष्ण बिचको अन्तर र भिन्नता यही नै हो।

भगवान् श्रीकृष्णको कस्तो स्थिति छ भनेर भगवद्गीतामा प्रकट गरिएको छ। त्यहाँ भगवान् श्रीकृष्णले अर्जुनलाई भन्नुभएको छ, – "करोडौं वर्ष पहिला

मैले यो भगवद्गीताको दर्शन सूर्यदेवलाई भनेको थिएँ ।" त्यो कुरा अर्जुनलाई विश्वास भएन । हुनत अर्जुनले प्रत्येक कुराहरू जान्दथे तर हामीलाई शिक्षा दिनका लागि उनले भगवान् श्रीकृष्णसँग भने "हे कृष्ण ! हजुर र म व्यावहारिक तरिकाले सँग-सँगै जन्मेका समकालिन हौं । त्यसैले, हजुरले यो दर्शन धेरै समयअघि सूर्य देवलाई भन्नुभयो भनेर म कसरी विश्वास गरुँ ?" त्यसपछि भगवान् श्रीकृष्णले उत्तर दिनुभयो – "हे प्रिय अर्जुन ! त्यससमय त्यहाँ तिमी पनि थियौ । तर, तिमीले त्यो भुल्यौ तर मैले भने भुलेको छैन र यही नै भिन्नता हो । भूत, वर्तमान र भविष्य भन्ने कुरा जसले सबै कुरा भुल्दछ, उसका लागि हो तर जसले आफ्ना सबै कुरा सम्झन सक्दछ र जो नित्य शाश्वत जीवित रहिरहन्छ, उसका लागि भूत, वर्तमान र भविष्य भन्ने कुरा नै हुँदैन ।

त्यसैले, कुन्तीले भगवान् श्रीकृष्णलाई नित्य शाश्वत (**मन्ये त्वां कालम्**) भनेर सम्बोधन गरेकी छिन् किनभने भगवान् सधैँ नित्य हुनुहुन्छ, उहाँ पूर्ण नियन्त्रक (**ईशानम्**) हुनुहुन्छ । भगवान् श्रीकृष्णका असामान्य व्यवहार र आचरणका कारण कुन्तीले, भगवान् श्रीकृष्ण नै नित्य र परम नियन्त्रक हुनुहुन्छ भनेर जान्न सकिन् । उहाँको सुरु र अन्त्य नै छैन (**अनादि निधनम्**) त्यसैले, उहाँ विभु अर्थात् सर्वोच्च र परम हुनुहुन्छ ।

हामी अणु अर्थात् एकदम साना हौं भने भगवान् श्रीकृष्ण विभु अर्थात् सबैभन्दा ठुलो हुनुहुन्छ । हामीहरू भगवान् श्रीकृष्णका अंश हौं । त्यसैले, भगवान् श्रीकृष्ण ठुलो र सानो दुवै हुनुहुन्छ भने हामीहरू केवल साना मात्र हौं । विभु अर्थात् सबैभन्दा ठुलोले सबैलाई आफूभित्र समाहित गर्नुपर्दछ । यदि कसैसँग ठुलो झोला छ भने त्यस झोला भित्र साना धेरै झोला राख्न सकिन्छ तर सानो झोला मात्र छ भने त्यसभित्र अन्य झोला राख्न सकिँदैन । भगवान् श्रीकृष्ण विभु हुनुहुन्छ । त्यसैले, उहाँमा सम्पूर्ण वस्तु, भूत, वर्तमान र भविष्य समाहित हुन्छन्, उहाँ सर्वव्यापी र सर्वत्र उपस्थित हुनुहुन्छ ।

भगवान् श्रीकृष्ण विना कुनै पनि पदार्थ उत्पन्न हुन र विकसित हुन सक्दैन । नास्तिक वैज्ञानिकहरू भने जीवन पदार्थबाट उत्पन्न हुन्छ भन्दछन् तर त्यो सबै कुरा मूर्खतापूर्ण हो । पदार्थ भगवान् श्रीकृष्णको एउटा शक्ति हो भने आत्मा अर्को शक्ति हो । त्यसैले, आत्मा भगवान्‌को परा शक्ति हो र पदार्थ अपरा शक्ति हो । जब परा शक्तिको उपस्थिति हुन्छ अनि मात्र पदार्थ उन्पन्न हुन्छ । दुईतीन सय वर्षअघि अमेरिकाको जमिन त्यति विकसित थिएन तर

जब युरोपबाट केही श्रेष्ठ जीव यहाँ आए अनि अहिले अमेरिका ज्यादै नै विकसित भएको छ । त्यसैले, विकासको मुख्य कारण नै परा शक्ति वा श्रेष्ठ शक्ति हो । अफ्रिका, अस्ट्रेलिया र अन्य धेरै स्थानका जमिन अहिले पनि खाली नै छन् र ती विकसित भएका छैनन् । तिनीहरू किन विकसित भएका छैनन् ? किनभने विकसित जीवको परा शक्तिले त्यो जमिनलाई स्पर्श गरको छैन । जब परा शक्तिले स्पर्श गर्दछ, त्यही अविकसित जमिन विकसित भएर त्यहाँ कारखाना, घरहरू, सहर, बाटोहरूको निर्माण हुन्छ । त्यहाँ गाडीहरू गुड्न सुरु गर्दछन् ।

यो उदाहरणबाट पदार्थ आफैं स्वयम् विकसित हुन सक्दैन भन्ने कुरा स्पष्ट हुन्छ र त्यसो हुन सम्भव पनि छैन । पदार्थलाई परा शक्तिले स्पर्श गर्नुपर्दछ अनि मात्र पदार्थ सक्रिय हुन्छ । अर्को उदाहरण मेसिन वा यन्त्र एउटा पदार्थ हो र यो अपरा शक्ति हो त्यसैले, जबसम्म यसलाई कुनै सञ्चालकले सञ्चालन गर्दैन, तबसम्म यो यन्त्र चल्न सक्दैन । यदि कसैसँग अति बहुमूल्य गाडी होला तर जबसम्म चालक आएर चलाउँदैन, त्यो कार लाखौं वर्षसम्म पनि त्यसै त्यहीं रहिरहन्छ ।

त्यसैले, सामान्य तरिकाले पनि बुझ्न सकिन्छ, जबसम्म कुनै परा शक्ति वा जीव आएर पदार्थलाई सञ्चालन गर्दैन तबसम्म पदार्थ स्वयम् आफैं केही पनि कार्य गर्न सक्दैन । त्यसो हो भने जीवनको विकास पदार्थले गर्दछ भनेर हामी कसरी निष्कर्षमा पुग्न सक्दछौं ? दुष्ट वैज्ञानिकहरूले भने यस्तो भन्दछन् तर उनीहरूसँग यसलाई पुष्टि गर्ने पर्याप्त ज्ञान नै छैन ।

जसरी ब्रह्मसंहितामा उल्लेख भएको छ, (**अण्डान्तरस्थ परमाणुचयान्तरस्थम्**) । यो ब्रह्माण्ड भगवान् श्रीकृष्णको उपस्थितिले गर्दा नै उत्पन्न भएर विकसित भएको हो । वैज्ञानिकहरूले अहिले परमाणुको अध्ययन गरेर इलेक्ट्रोन, प्रोटोन र अन्य कण विभिन्न प्रकारले कार्य गर्दछन् भनेर खोज गरेका छन् । यी कणहरू किन सक्रिय छन् ? किनभने त्यहाँ भगवान् श्रीकृष्ण उपस्थित हुनुहुन्छ । यो नै सही वैज्ञानिक ज्ञान हो ।

मानिसले भगवान् श्रीकृष्णलाई वैज्ञानिक तरिकाले बुझ्न पर्दछ । भगवान् श्रीकृष्णको भूत, वर्तमान र भविष्य केही पनि हुँदैन । उहाँ नित्य काल वा शाश्वत समय हुनुहुन्छ । त्यसैले, उहाँको न आदि वा सुरु नै छ, न अन्त्य नै छ । उहाँ सबैमा समान भाव राख्नुहुन्छ । हामी भने भगवान् श्रीकृष्णको दर्शन

गर्न र भगवान् श्रीकृष्णलाई बुझ्नका लागि केवल तयार हुनुपर्दछ र कृष्ण भावनामृतको उद्देश्य पनि त्यही हो ।

***

# १२. भ्रम गराउने लीलाहरू

न वेद कश्चिद् भगवंश्चिकीर्षितं
तवेहमानस्य नृणां विडम्बनम् ।
न यस्य कश्चिद्दयितोऽस्ति कर्हिचिद्
द्वेष्यश्च यस्मिन् विषमा मतिर्नृणाम् ॥

हे भगवान् ! हजुरका दिव्यलीलाहरू, मानवीय प्रतीत हुनाले र अति भ्रामक हुनाले, कसैले पनि बुझ्न सक्दैन । हजुरका लागि कोही कृपा पात्र पनि छैनन् र द्वेष गर्नुपर्ने पनि कोही छैनन् । तर हजुर पक्षपात गर्नुहुन्छ भनेर मानिसहरूले कल्पना गर्दछन् ।

**–(श्रीमद्भागवत् १.८.२९)**

पतित आत्माहरूप्रति भगवान्को कृपा समानरूपले बाँडिएको हुन्छ । त्यसैले, उहाँ कसै प्रति पनि विशेष शत्रुता राख्नुहुन्न । भगवान्लाई मानिस भनेर ठान्नु मानिसको भ्रामक वा भ्रममा परेर सोचेको धारणा मात्र हो । उहाँका लीलाहरू मानिसले गरेका कार्य जस्ता देखिन्छन् तर वास्तवमा ती सबै दिव्य र भौतिक दोषरहित हुन्छन् । हुनत उहाँ आफ्ना भक्तहरूको पक्ष लिने हुनुहुन्छ भनेर मानिन्छ तर वास्तवमा जसरी सूर्यले कसैलाई पक्षपात गर्नुहुन्न, त्यसरी नै भगवान् पनि पक्षपात नगर्ने हुनुहुन्छ । जसरी सूर्यको किरण पाएर सामान्य ढुङ्गा पनि बहुमूल्य बन्दछ तर त्यही किरणमा बसेर पनि अन्धो व्यक्तिले सूर्यलाई समेत देख्न सक्दैन । अध्याँरो र उज्यालो दुई विपरीत धारणा हुन् तर यसको अर्थ सूर्यले आफ्ना किरण पक्षपातपूर्ण तरिकाले फैलाउनुहुन्छ भन्ने होइन । सूर्यको किरण सबैलाई बाँडिएको हुन्छ तर त्यसलाई ग्रहण गर्ने क्षमता भने मानिसअनुसार फरकफरक हुन्छ । भगवान्को कृपा प्राप्त गर्नका लागि गरिएको सेवालाई मूर्खहरू यो एउटा चाप्लुसी गर्नुजस्तो हो भन्दछन् । वास्तवमा भगवान्को दिव्यप्रेम भक्तिमा लागेका व्यक्तिहरूले शुद्ध व्यापारीको जस्तो भाव

गर्दैनन् किनभने व्यापारिक प्रतिष्ठानहरूले कुनै वस्तु प्राप्त गर्नका लागि सेवा प्रदान गर्ने गर्दछन् । तर शुद्ध भक्तहरूले भगवान्‌को सेवा कुनै वस्तुसँग विनिमय गर्नका लागि गर्दैनन् त्यसैले, उनीहरूले भगवान्‌को पूर्ण कृपा प्राप्त गर्दछन् । जो दु:खित छ, जसलाई कुनै कुराको आवश्यकता परेको छ, जसले ईश्वरसम्बन्धी जिज्ञासा राख्दछ, केही लाभ वा त्यो कार्य सम्पन्न गर्नका लागि क्षणिक सम्बन्ध मात्र राख्दछ र जब उसको त्यो कार्य सिद्ध हुन्छ वा सम्पन्न हुन्छ अनि भगवान्‌सँगको सम्बन्ध रहँदैन । यदि कुनै दु:खित व्यक्ति पवित्र पनि छ भने उसले भगवान्‌सँग आफ्नो दु:खबाट छुट्कारा पाउनका लागि प्रार्थना गर्दछ । तर, ती दु:खबाट मुक्त हुनासाथ उसले भगवान्‌सँगको आफ्नो सम्वन्धका बारेमा कुनै वास्ता गर्दैन र त्यो सम्बन्ध विच्छेद गर्दछ । यद्यपि भगवान्‌को उसप्रति कृपा गर्ने भावना भने रहिरहन्छ तर ऊ भने त्यसतर्फ अनिच्छुक हुन्छ वा त्यो लिन हिचकिचाउने गर्दछ । शुद्ध भक्त र मिश्रित भाव भएको भक्तमा यही भिन्नता हुन्छ । जुन व्यक्ति भगवान्‌को भक्ति र सेवाको पूर्णरूपले विरुद्धमा छन् उनीहरूलाई निकृष्ट अन्धकारमा छन् भनिन्छ । जुन व्यक्ति आफूलाई आवश्यकता परेको समयमा मात्र भगवान्‌को कृपा वा मद्दतका लागि प्रार्थना गर्दछन्, उनीहरूले आंशिकरूपमा भगवान्‌को कृपा प्राप्त गर्दछन् र जुन व्यक्ति पूर्णरूपले भगवान्‌को सेवामा लागेको हुन्छ, उसले भगवान्‌को पूर्ण कृपा प्राप्त गर्दछ । यसरी, भगवान्‌को कृपा प्राप्त गर्दा देखिएको विविधता त्यो प्राप्त गर्ने व्यक्तिसँग सम्बन्धित छ तर परम कृपालु भगवान्‌को कृपा प्रदान गर्नुमा छैन ।

जब भगवान् आफ्ना सम्पूर्ण कृपापूर्ण शक्तिसहित यस जगत्‌मा अवतरित हुनुहुन्छ अनि उहाँले सामान्य मानिसले जस्तै क्रीडा गर्नुहुन्छ । त्यसैले, उहाँले आफ्ना भक्तहरूप्रति बढी प्रेम गरेको वा पक्षपात गरेको जस्तो देखिन्छ तर वास्स्वतमा यो यथार्थ होइन । यसरी उहाँले पक्षपात गरेको जस्तो देखिए पनि वास्तवमा उहाँको कृपा सबैमा समानरूपले वितरित भइरहेको हुन्छ । कुरुक्षेत्रको युद्धभूमिमा भगवान्‌को उपस्थितिमा जेजति वीर मरे, ती सबैमा व्यक्तिको योग्यता नभए पनि उनीहरू सबैले मुक्ति प्राप्त गरे किनभने भगवान्‌को समक्ष मर्ने जुनसुकै व्यक्ति आफ्ना कर्मका फल र अन्य पापबाट मुक्त हुन्छन् त्यसैले, उनीहरूले परमधाममा कहीं न कहीं स्थान प्राप्त गर्दछन् । त्यसरी, यदि कुनै मानिस सूर्यको किरणमा बस्दछ भने उसले निश्चितरूपले सूर्यको तातोपन र

पराबैजनी किरणले प्रहार गर्ने लाभ प्राप्त गर्दछ । त्यसैले, निष्कर्ष निकाल्न सकिन्छ भने भगवान्ले कहिल्यै पनि पक्षपात गर्नु हुन्न । यसरी भगवान्ले पक्षपात गर्नुहुन्छ भनेर मानिसले सोच्नु गलत हुन्छ ।

भगवद्गीतामा (४.८) मा भगवान्ले भन्नुभएको छ –

**परित्राणाय साधूनां विनाशाय च दुष्कृताम् ।**
**धर्म संस्थापनार्थाय सम्भवामि युगे युगे ॥**

"भक्तहरूको उद्धार गर्न, दुष्टहरूको विनाश गर्न र धर्मको पुन: स्थापना गर्न म प्रत्येक युगमा प्रकट हुने गर्दछु ।"

जब भगवान्ले अवतार लिनुहुन्छ उहाँका उद्देश्य दुईवटा हुन्छन् – भक्तहरूको उद्धार गर्नु र असुरहरूको विनाश गर्नु । **साधूनाम** को अर्थ भक्त हो र यो शब्दले सांसारिक, इमानदारी वा बेइमानी, नैतिकता वा अनैतिकतासँग कुनै सरोकार राख्दैन । यसले भौतिक क्रियाकलापसँग पनि कुनै सम्बन्ध राख्दैन । कहिलेकाहीँ हामीले साधु शब्दको प्रयोग भौतिक दृष्टिले असल, नैतिकवान् व्यक्तिलाई पनि प्रयोग गर्दछौं तर वास्तवमा यो शब्दले दिव्य स्थितिमा रहेको व्यक्तिलाई मात्र जनाउँदछ । त्यसैले, साधु भनेको भक्त हो जसले भक्ति गर्दछ र जो भौतिक गुणभन्दा माथि दिव्यस्थितिमा हुन्छ **(स गुणान् समतीत्यैतान्)** ।

भगवान् भक्तको उद्धार गर्न आउनुहुन्छ (**परित्राणाय साधूनाम्**) तर भगवद्गीता (१४.२६) मा स्पष्टसँग भनिएको छ – भक्तहरू भौतिक गुणहरू भन्दा माथि पुग्दछन् **(स गुणान् समतीत्यैतान्)** । भक्तहरू प्रकृतिका तीन गुण– सत, रज र तमको नियन्त्रणमा हुँदैनन् त्यसैले, उनीहरू दिव्य पदमा स्थित हुन्छन् । यदि साधुको पहिला नै उद्धार भइसकेको छ भने पुन: उसको उद्धार गर्न के आवश्यकता नै पर्दछ र ? यस्तो प्रश्न उठ्न सक्दछ । भगवान् भक्तको उद्धार गर्न आउनुहुन्छ र भक्तको पहिला नै उद्धार भइसकेको हुन्छ भनिएको छ । त्यसैले, यस्तो भ्रम देखिएकाले यस श्लोकमा विडम्बनम् शब्दको प्रयोग भएको हो र यसले विरोधाभास प्रतीत भएको छ ।

यस विरोधाभास शब्द साधु वा भक्तलाई उद्धारको आवश्यकता नै पर्दैन किनभने ऊ सधैँ भगवान्लाई आफ्ना अघि हेर्न ज्यादै उत्सुक भइरहन्छ । त्यसैले, भगवान् उसलाई भौतिक पदार्थको बन्धनबाट छुटाउन आउनुहुँदैन किनभने ऊ त्यस बन्धनबाट पहिला नै मुक्त भइसकेको हुन्छ । तर, भगवान् आफ्ना भक्तको

आन्तरिक वा भित्री इच्छा पूरा गरिदिन भने आउने गर्नुहुन्छ । जसरी भक्तले भगवान्लाई सबै तरिकाले सन्तुष्ट गराउन चाहन्छ त्यसरी नै भगवान्ले पनि आफ्ना भक्तलाई अरू बढी सन्तुष्टि प्रदान गर्न चाहनु हुन्छ र यो नै प्रेमको सही आदान-प्रदान हो । हाम्रो सामान्य भावनामा पनि यदि हामी कसैलाई प्रेम गर्दछौं भने हामी त्यस प्रेमीलाई सन्तुष्ट पार्न चाहन्छौं र त्यो प्रेमीले पनि हामीलाई सन्तुष्ट पार्न चाहन्छ । यदि यस भौतिक जगत्मा प्रेमको यस्तो आदान-प्रदान हुन्छ भने आध्यात्मिक जगत्मा कति उच्च श्रेणीको प्रेम आदान-प्रदान हुन्छ होला एउटा श्लोकमा भगवान् भन्नुहुन्छ – "साधु मेरा हृदय हुन् भने साधुको हृदय म हुँ ।" साधुले जहिले पनि भगवान् श्रीकृष्णको मात्र चिन्तन गरिरहन्छ भने भगवान् श्रीकृष्ण पनि आफ्ना भक्त साधुको स्मरण गरिरहनुहुन्छ ।

यस भौतिक जगत्मा भगवान्को प्राकट्य र तिरोधान वा प्रकट हुनु र अप्रकट हुनुलाई **चिकीर्षिताम्** वा लीला भनिन्छ । भगवान् श्रीकृष्ण लीला नै हुनुहुन्छ । त्यसैले, उहाँ यहाँ आउनुहुन्छ । भगवान् जब यहाँ आउनुहुन्छ, निस्सन्देह उहाँले केही कार्य सम्पन्न गर्ने गर्नुहुन्छ – साधुको रक्षा र साधुको विरोध गर्नेहरूको संहार गर्न । तर, यी दुवै कार्य पनि उहाँका लीला नै हुन् ।

भगवान् ईर्ष्यालु हुनुहुन्न किनभने जसरी हामीले कहिलेकाहीँ प्रेमपूर्वक आफ्ना बच्चालाई थप्पड हानेर सजाय दिने गर्दछौं । त्यसरी नै भगवान्ले असुरलाई मार्नु पनि एक प्रकारको स्नेह नै हो । जब भगवान् श्रीकृष्णले कुनै असुरको वध गर्नुहुन्छ । त्यो वध गर्नु भौतिक स्तरको ईर्ष्या वा द्वेष नभएर स्नेहको स्तरको वध हुने गर्दछ । त्यसैले, शास्त्रमा भनिएको जब भगवान्ले कुनै असुरको वध गर्नुहुन्छ त्यस असुरले तुरुन्त मुक्ति प्राप्त गर्दछ । उदाहरणका लागि पूतना एउटा बोक्सी थिई र ऊ भगवान्लाई मार्न चाहन्थी । जब भगवान् श्रीकृष्णले बाललीला सम्पन्न गरिरहनुभएको थियो, त्यससमय पूतनाले आफ्नो स्तनको अग्रभागमा विष दलेर आफ्नो स्तनको दूध भगवान् श्रीकृष्णलाई चुसाउन उहाँको घर गई । "जब भगवान् श्रीकृष्णले मेरो स्तनको मुन्टो चुस्नु हुनेछ तत्काल उहाँको मृत्यु हुनेछ" भनेर उसले सोची तर त्यसो हुनु सम्भव नै थिएन । किनभने भगवान् श्रीकृष्णलाई कसले नै मार्न सक्दछ र ? भगवान् श्रीकृष्णले उसको दूधको मुन्टो चुस्दा उसको प्राण नै चुसी दिनुभयो । त्यसैले, पूतनाको मृत्यु भयो । त्यसको परिणाम के भयो त ? भगवान् श्रीकृष्णले त्यस कार्यको राम्रो तर्फ मात्र हेर्नु भयो र सोच्नु भयो "यो राक्षसी मलाई मार्न आएकी

हो तर कुनै कारणले मैले यसको स्तनको दूध चुसें त्यसैले, यो मेरी आमासरह भई ।" त्यसैले, पूतनाले आध्यात्मिक जगत्मा भगवान् श्रीकृष्णकी आमाको पद प्राप्त गरी । श्रीमद्भागवत्मा उद्धवले विदुरसँग यो कुराको वर्णन गर्दै भनेका छन् – भगवान् श्रीकृष्ण ज्यादै दयालु हुनुहुन्छ, एउटी बोक्सी जसले विष चुसाएर मार्न आएकी थिई, उसलाई पनि आमाको रूपमा स्वीकार गर्नुभयो" भन्ने कुराको व्याख्या गरेको पाइन्छ । उद्धवले भन्दछन् – "भगवान् श्रीकृष्ण यति दयालु हुनुहुन्छ भने उहाँबाहेक अन्य कसैको पूजा किन गरूँ ?"

कुन्तीदेवीले भनिन् – **न यस्य कश्चिद् दयितः** । **दयित** शब्दको अर्थ पक्षपात हो । भगवान् श्रीकृष्णले कसैलाई पनि पक्षपात गर्नुहुन्न । **द्वेष्यश्च** – अर्थात् उहाँका कोही पनि शत्रु हुँदैनन् । हामीले आफ्ना मित्रबाट केही वरदान वा लाभ पाउने आशा गर्दछौं भने शत्रुबाट केही हानी हुने कार्यको अपेक्षा गर्दछौं तर भगवान् श्रीकृष्ण यति पूर्ण हुनुहुन्छ, त्यसैले, कसैले पनि उहाँलाई हानी पुऱ्याउन सक्दैन र कुनै वस्तु दिन पनि सक्दैन । त्यसो हो भने उहाँको मित्र र शत्रु को हुन सक्दछ ? **न यस्य कश्चिद् दयितोऽस्ति** – उहाँलाई कसैको पनि पक्षपात वा कृपाको आवश्यकता पर्दैन किनभने उहाँ आफैंमा पूर्ण हुनुहुन्छ । म गरिब मानिस हुन सक्दछु, त्यसैले, आफ्ना मित्रबाट केही सहयोगको आशा गर्नु सक्दछु किनभने म अपूर्ण छु, म धेरै प्रकारले अपूर्ण छु, मलाई सधैं कुनै न कुनै वस्तुको आवश्यकता परिरहेको हुन्छ, त्यसैले, म मित्र बनाउन चाहन्छु र शत्रुलाई घृणा पनि गर्दछु । तर, भगवान् श्रीकृष्ण परम र सर्वश्रेष्ठ हुनुहुन्छ त्यसैले, उहाँलाई कसैले पनि हानी पुऱ्याउन सक्दैन र कसैले पनि उहाँलाई केही दिन सक्दैन ।

त्यसो हो भने हामीहरूले मन्दिरमा भगवान् श्रीकृष्णको पूजा उपासना गर्दा किन धेरै सुविधाजनक वस्तु अर्पण गर्दछौं, वस्त्र लगाई दिन्छौं, श्रृङ्गार गर्दछौं र उत्तम भोजन अर्पण गर्दछौं त ? भगवान् श्रीकृष्णलाई हामीले अर्पण गरेका वस्त्र, फूल, भोजन कुनै पनि वस्तुको आवश्यकता पर्दैन तर यदि हामीले त्यस्ता वस्तु अर्पण गऱ्यौं भने हामीलाई नै लाभ हुन्छ भन्ने कुरा हामीले बुझ्ने प्रयास गर्नुपर्दछ । यसरी हामीले अर्पण गरेका वस्तु भगवान् श्रीकृष्णले स्वीकार गर्नुहुन्छ, त्यो नै उहाँको हामीमा कृपा हो । यदि कसैले आफूलाई श्रृङ्गारले युक्त भएको देख्दछ त्यसरी नै हामी भगवान् श्रीकृष्णको प्रतिबिम्ब भएको हुनाले यदि भगवान् श्रीकृष्णलाई श्रृंगार गऱ्यौं भने हामी पनि श्रृंगारले युक्त हुन्छौं । मानिस भगवान्को प्रतिविम्बबाट बनाइएको हो भनेर बाइबलमा पनि भनिएको छ । त्यसको अर्थ

हामीहरू भगवान्को छायाँको प्रतिबिम्ब हौं । हामीले हाम्रो रूपअनुसार नै भगवान्को रूपको कल्पना गर्दछौं यस्तै होइन । जुन मानिसहरू सगुणवादको मायावादी दर्शनको अनुयायी छन् उनीहरूले भन्ने गर्दछन् । "परब्रह्मलाई आफूजस्तै पुरुष हुनुहुन्छ भन्ने कल्पना गर्दछौं ।" तर यसो भन्नु भूल हो र वास्तवमा तथ्य यसको विपरित छ । यदि हामीसँग दुई हात, दुई गोडा र शिर छ किनभने भगवान्को पनि यस्तै स्वरूप छ । हाम्रो साकार स्वरूप छ किनभने हामी भगवान्का प्रतिविम्ब हौं । त्यसैले, यदि आदि पुरुषलाई कुनै लाभ हुन्छ भने त्यसको प्रतिविम्बलाई लाभ हुन्छ भन्ने कुरा हामीले बुझ्नु पर्दछ । यदि भगवान् श्रीकृष्णको श्रृंगार गरिन्छ भने हाम्रो आफ्नो पनि श्रृंगार हुन्छ । यदि हामीले भगवान् श्रीकृष्णलाई सन्तुष्ट गर्न सक्यौं भने हामी पनि सन्तुष्ट हुन्छौं । त्यसरी नै यदि हामीले भगवान् श्रीकृष्णलाई उत्तम भोजन अर्पण गऱ्यौं भने हामीले पनि त्यही भोजन खान पाउँदछौं । हामीले भगवान् श्रीकृष्णलाई कति उत्तम भोजन अर्पण गर्दछौं भनेर कृष्णभावनामृत मन्दिरभन्दा बाहिर बस्ने मानिसले कल्पना पनि गर्न सक्दैनन् किनभने त्यो भोजन भगवान् श्रीकृष्णलाई अर्पण गरिएको हुन्छ त्यसैले, त्यो स्वादिष्ट हुन्छ र त्यो भोजन खाने अवसर हामीले प्राप्त गर्दछौं । त्यसैले, हामीले सबै प्रकारले भगवान् श्रीकृष्णलाई सन्तुष्ट गर्ने प्रयास गर्नुपर्दछ अनि हामी पनि सबै प्रकारले सन्तुष्ट बन्न सक्दछौं ।

भगवान् श्रीकृष्णलाई हाम्रो सेवाको आवश्यकता पर्दैन तर उहाँले कृपापूर्वक हाम्रा सेवा स्वीकार गर्नुहुन्छ । जब भगवान् श्रीकृष्णले हामीलाई मेरो शरणमा आऊ (**सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज**) भन्नुहुन्छ, त्यसको अर्थ उहाँलाई सेवकको कमी छ वा हामी उहाँको शरणमा गएपछि उहाँलाई लाभ हुन्छ भन्ने होइन । भगवान् श्रीकृष्णको इच्छा हुनासाथ करोडौं सेवक उत्पन्न गर्न सक्नुहुन्छ । त्यसैले, मुख्य कुरा हाम्रो सेवा मात्र हो । यदि हामी भगवान् श्रीकृष्णको शरणमा पऱ्यौं भने हाम्रो रक्षा हुन सक्दछ किनभने भगवान् श्रीकृष्णले भन्नुहुन्छ – **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्मामि** – "म तिम्रा सबै पापबाट तिमीलाई मुक्त गरिदिन्छु ।" हामी यस भौतिक जगत्मा विना कुनै आश्रय कष्ट भोगिरहेका छौं र कोही त विना कुनै उद्देश्य त्यसै सडकमा भौंतारिरहेको पनि देखेका छौं । जब हामी विहानको हिँडाईमा समुद्रको किनारामा घुम्न जान्छौं त्यहाँ हामीले धेरै युवकहरू सुतिरहेका, भौंतारिरहेको, विनाउद्देश्य भ्रमित भएर के गर्ने हो थाहा नै नभएर त्यसै बसेको देखेका छौं । यदि हामी भगवान्

श्रीकृष्णका शरणमा गयौं भने अनि हामीलाई थाहा हुन्छ, "अहो ! अहिले मैले कसैको आश्रय प्राप्त गरें भनेर ।" अनि त्यसपछि कुनै भ्रम हुँदैन र कुनै निराशा पनि हुँदैन । मैले आजकल दिनहुँजसो धेरै पत्र प्राप्त गर्ने गर्दछु, जसमा मानिसले कृष्णभावनामृतमा आएपछि आशा प्राप्त गरेका कुरा उल्लेख गरेका हुन्छन् । त्यसैले, भगवान् श्रीकृष्ण यस धरातलमा केवल सेवक एकत्र गर्नका लागि अवतरित हुनुभएको हो भन्ने यथार्थ होइन । उहाँ त हाम्रो लाभका लागि अवतरित हुनुभएको हो ।

तर दुर्भाग्यवश हामीहरू भगवान् श्रीकृष्णको सेवक हुनुपर्नेमा हामी अन्य वस्तुहरूका सेवक भइरहेका छौं । हामीहरू हाम्रा इन्द्रियहरू, इन्द्रियका क्रिया, जस्तै कामना, क्रोध, लोभ र भ्रमका सेवक बनिरहेका छौं । वास्तवमा सम्पूर्ण विश्व यसरी नै इन्द्रियको सेवामा लागिरहेको छ तर यदि हामीले हाम्रा इन्द्रियहरूलाई भगवान् श्रीकृष्णको सेवामा लगायौं भने हामीहरू इन्द्रियका सेवक रहने छैनौं, बरु इन्द्रियका स्वामी वा नियन्त्रक बन्ने छौं । अनि, हामीले हाम्रा इन्द्रियलाई भगवान् श्रीकृष्णको सेवाबाहेक अन्य कुनै पनि वस्तुको सेवामा लाग्न दिएनौं भने मात्र हाम्रो रक्षा हुन्छ ।

यहाँ कुन्तीदेवीले भन्दछिन् – "यस भौतिक जगत्मा हजुरको प्राकट्य हुनु नै सबै भ्रमित गर्न हो ।" "भगवान् श्रीकृष्णको कुनै उद्देश्य वा लक्ष्य होला" भनेर हामी सोच्दछौं तर त्यसो होइन उहाँ त केवल लीला गर्न मात्र यस जगत्मा प्रकट हुने गर्नुहुन्छ । उदाहरणका लागि – कुनै समय राज्यपाल बन्दी गृहको निरीक्षण गर्न जान्छन् तर त्यहाँका निरीक्षकले उनलाई त्यहाँको विवरण पेस गरिरहेका हुन्छन् । त्यसैले, राज्यपाल त्यहाँ जान आवश्यक नै थिएन तैपनि उनले "जाऊ त्यहाँ उनीहरूले कस्तो कार्य गरिरहेका छन्, हेरौं" भन्ने सोचेर जान्छन् । उनी आफ्नै स्वतन्त्र इच्छाले त्यहाँ गएको हुनाले त्यसलाई पनि लीला भन्न सकिन्छ । यसको अर्थ ऊ बन्दीगृहको कुनै नियमको अधीनमा छ भन्ने होइन । तर कुनै मूर्ख बन्दीले "अहो ! राज्यपाल पनि बन्दीगृहमा आएका छन् । त्यसैले, हामी दुई समान भयौं र म पनि राज्यपाल भएँ" भनेर सोच्न सक्दछ "भगवान् श्रीकृष्ण अवतार लिएर अवतरित हुनुभएको हो र म पनि अवतार हुँ" तर त्यसको लागि भनिएको छ – **न वेद कश्चिद् भगवंश्चिकीर्षितम्** – "हजुरको प्राकट्य र तिरोधानको उद्देश्य के हो कसैले पनि जान्न सक्दैन ।" **तवेहमानस्य नृणां विडम्बनम्** – भगवान्का लीलाहरू

मानिसलाई भ्रमित गर्ने हुन्छन् । त्यसैले, ती लीलाको सही उद्देश्य के हो ? कसैले पनि बुझ्न सक्दैनन् ।

भगवान्का लीलाहरूको सही उद्देश्य भनेका उहाँका आफ्ना स्वतन्त्र इच्छा हुन् । "म त्यहाँ जाऊँ र हेरौं" भनेर उहाँले सोच्नुहुन्छ । त्यसैले, यहाँ आउनु हुन्छ । असुर वध गर्नका लागि उहाँ यहाँ आउनु आवश्यक नै छैन किनभने यस भौतिक प्रकृतिमा उहाँका धेरै प्रतिनिधिहरू छन्, जसले असुरको वध गर्न सक्दछन् । उदाहरणका लागि – हुरी बतासद्वारा क्षणमा नै उहाँले हजारौं असुर वध गर्न सक्नुहुन्छ । भक्तको रक्षा गर्न पनि उहाँ यहाँ आउनुपर्दैन । उहाँले आफ्नो इच्छामा सम्पूर्ण कार्य सम्पन्न गर्न सक्नुहुन्छ । तर उहाँ "जाऊँ भौतिक जगत् पनि हेरौं" भनेर आफ्ना लीलाको आनन्द लिन यहाँ अवतरित भएर आउनुहुन्छ ।

कहिलेकाहीं भगवान् श्रीकृष्णले युद्धलीला गरेर पनि आनन्द लिन चाहनुहुन्छ। भगवान् श्रीकृष्णसँग युद्ध गर्ने इच्छा छ, होइन भने हामीमा त्यो युद्ध गर्ने इच्छा कहाँबाट आउने ? किनभने हामी भगवान् श्रीकृष्णका अंश हौं । त्यसैले, हामी भित्र पनि भगवान् श्रीकृष्णका सम्पूर्ण गुण थोरै मात्रामा पाइन्छन् । हामी भगवान् श्रीकृष्णका नमूना वा प्रतिरूप हौं । हामीले युद्ध गर्ने इच्छा कहाँबाट प्राप्त गऱ्यौं ? यो युद्ध गर्ने कला भगवान् श्रीकृष्णमा छ त्यसैले, जसरी कुनै राजाले पहलमानहरूलाई कुस्ती खेल्न लगाउँदछन् त्यसरी नै भगवान् श्रीकृष्णले पनि हामी जीवलाई युद्ध गर्न लगाउनुहुन्छ । त्यस्ता पहलमानहरूले पारिश्रमिक पाउँदछन् र तिनीहरू राजाका शत्रु पनि होइनन् । बरु, तिनीहरूले बनावटी युद्ध गरेर राजालाई आनन्द प्रदान गर्दछन् । यदि भगवान् श्रीकृष्णले युद्ध गर्न चाहनुभयो भने उहाँसँग कसले युद्ध गर्ने ? कुनै पनि सामान्य व्यक्तिले युद्ध गर्न नै सक्दैन । यदि राजाले नक्कली युद्ध गराउन अभ्यास गर्न चाहे भने उनले अत्यन्त कुशल पहलमानलाई सो कार्यमा नियुक्त गर्दछन् । यसरी नै भगवान् श्रीकृष्ण पनि सामान्य व्यक्तिसँग युद्ध गर्नुहुन्न युद्ध गर्न परे आफ्ना महान् भक्तसँग मात्र युद्ध गर्नुहुन्छ किनभने यदि भगवान् श्रीकृष्णलाई युद्ध गर्ने इच्छा जागृत भयो भने उहाँले कुनै भक्त जो यस भौतिक जगत्मा उहाँको भएर आउँदछ, भगवान् उसैसँग युद्ध गर्नुहुन्छ । उदाहरणका लागि – हिरण्यकशिपु र हिरण्याक्षलाई मार्नका लागि भगवान् यस जगत्मा अवतरित हुनुभएको थियो । के यिनीहरू सामान्य व्यक्ति थिए भनेर हामी सोच्न हुन्छ ? हुँदैन, किनभने उनीहरू भगवान्का महान् भक्त जय र विजय थिए ।

उनीहरूसँग भगवान्ले युद्ध गर्न चाहनुभयो, त्यसैले, उनीहरू यस संसारमा आए । वैकुण्ठ लोकमा युद्ध गर्ने कुनै सम्भावना रहँदैन किनभने त्यहाँ सबै भगवान् श्रीकृष्णको सेवामा लागिरहेका हुन्छन् । त्यसैले, भगवान्ले कोसँग युद्ध गर्ने ? भगवान्ले आफ्ना भक्तलाई यस संसारमा आफ्नो शत्रुको रूपमा र आफूसँग युद्ध गर्न पठाउनुहुन्छ । साथ-साथै उहाँको शत्रु बन्नु त्यति लाभप्रद हुँदैन र उहाँको मित्र बन्नु नै श्रेयस्कर हुन्छ भन्ने शिक्षा पनि हामीलाई दिनुहुन्छ । त्यसैले, कुन्तीदेवीले भन्दछिन् – **न वेद कश्चिद् भगवंश्चिकीर्षितम्** – "हजुरको प्राकट्य र तिरोधानका उद्देश्यका बारेमा कसैले पनि बुझ्न सक्दैन ।" **तवेहमानस्य नृणां विडम्बनम्** – "यस जगत्मा हजुर सामान्य मानिसका रूपमा हुनुहुन्छ, त्यसले नै हामीलाई भ्रमित गर्दछ ।

कहिलेकाहीँ भगवान् श्रीकृष्ण एउटा सामान्य व्यक्तिका रूपमा प्रकट हुनुहुन्छ, त्यसैले, केही व्यक्तिले उहाँका कार्यहरूलाई विश्वास गर्न सक्दैनन् वा बुझ्न नै सक्दैनन् । भगवान् हामी जस्तै सामान्य व्यक्ति कसरी हुन सक्नुहुन्छ ? भनेर आश्चर्य मान्दछन् । तर, कहिलेकाहीँ भगवान् श्रीकृष्णले सामान्य व्यक्तिको जस्तो भूमिका गर्नुहुन्छ वा त्यस्ता सामान्य कार्य पनि गर्नुहुन्छ तर वास्तवमा उहाँ सामान्य व्यक्ति होइन । त्यसैले, आवश्यक परेको समयमा आफ्नो भगवान्को शक्ति प्रदर्शन पनि गर्नुहुन्छ । जब भौमासुरले सोह्र हजार युवतीको अपहरण गऱ्यो, ती युवतीहरूले भगवान् श्रीकृष्णको प्रार्थना गरे, त्यसैले, भगवान् श्रीकृष्ण त्यस असुरको महलमा जानुभयो र त्यस असुरको वध गरेर ती सबै युवतीलाई अपहरणमुक्त गर्नुभयो । कठोर वैदिक प्रणालीअनुसार कुनै अविवाहित युवतीले एकरात पनि आफ्नो घर छोडेर अन्यत्र जान्छे भने ऊसँग कुनै पनि व्यक्तिले विवाह गर्दैनन् । त्यसैले, जब भगवान् श्रीकृष्णले "अब तिमीहरू सुरक्षापूर्वक आफ्ना पिताको घर फर्कन सक्दछौ" भनेर भन्नुभयो अनि उनीहरूले उत्तर दिँदै भने "हे महाशय ! यदि हामी हाम्रा पिताको घर फर्क्यौं भने हाम्रो भाग्य कस्तो हुन्छ ? हामीलाई कसैले पनि विवाह गर्दैनन् किनभने हामीलाई यसले अपहरण गरेको थियो ।

"त्यसो हो भने तिमीहरू के गर्न चाहन्छौं ?" भनेर भगवान् श्रीकृष्णले सोध्नुभयो । "हामी हजुरलाई आफ्नो पति बनाउन चाहन्छौं" भनेर ती युवतीले उत्तर दिए । भगवान् श्रीकृष्ण यति दयालु हुनुहुन्छ, उहाँले तत्काल "हुन्छ" भनेर ती सबैलाई आफ्ना पत्नी स्वीकार गर्नुभयो ।

जब भगवान् श्रीकृष्णले ती सोह्र हजार युवतीलाई आफ्नो राजधानीमा लिएर जानु भयो त्यहाँ ती सोह्र हजार पत्नीले भगवान् श्रीकृष्णसँग भेट्न सोह्र हजार रातको प्रतीक्षा गर्नपरेन किनभने भगवान् श्रीकृष्णले आफूलाई सोह्र हजाररूपमा विस्तार गर्नुभयो, सोह्र हजार दरबार बनाइदिनुभयो अनि प्रत्येक दरबारमा प्रत्येक पत्नीसँग निवास गर्नुभयो ।

हुनत यो कुरा श्रीमद्भागवत्मा वर्णन गरिएको छ तर दुष्टहरूले भने यो बुझ्न सक्दैनन् । झन् भगवान् श्रीकृष्णको आलोचना गर्दै "उहाँ ज्यादै नै कामुक हुनुहुन्थ्यो । त्यसैले, सोह्र हजार पत्नीहरूसँग विवाह गर्नुभयो" भन्दछन् । तर, हामी भने हो उहाँ कामुक हुनुहुन्थ्यो, भने हो उहाँ असीमित कामुक हुनुहुन्थ्यो किनभने उहाँ असीमित नै हुनुहुन्छ । किन सोह्र हजार पत्नी मात्र ? उहाँले सोह्र लाखसँग पनि विवाह गर्न सक्नुहुन्छ तैपनि उहाँको पूर्णतासम्म त्यो सङ्ख्या पनि पुग्न सक्दैन । भगवान् श्रीकृष्णको असीमितता यस्तो छ । भगवान् श्रीकृष्ण कामुक वा इन्द्रिय विलासी हुनुहुन्छ भनेर हामीले उहाँलाई दोषी बनाउन सक्दैनौं । भगवान् श्रीकृष्णका यस्ता अनगिन्ती भक्तहरू छन्, जसले उहाँलाई आफ्नो पति बनाउन चाहन्छन्, कतिले आफ्ना मित्र बनाउन चाहन्छन्, कतिले आफूसँग खेल्ने साथी बनाउन चाहन्छन् भने भगवान् श्रीकृष्ण ती सबैप्रति कृपा प्रदान गर्न चाहनुहुन्छ । यसरी, यस ब्रह्माण्डमा सर्वत्र उहाँका करोडौं करोड भक्तहरू छन् र भगवान् श्रीकृष्णले ती सबैलाई सन्तुष्ट गराउनुपर्दछ । यी भक्तहरूसँग भगवान्लाई कुनै प्रकारको सहयोगको आवश्यकता पर्दैन तर ती भक्तहरूले भगवान्को सेवा गर्दछन् त्यसैले, भगवान्ले पनि त्यो सेवाको बदलामा केही प्रदान गर्नुहुन्छ । यी सोह्र हजार भक्तहरूले भगवान् श्रीकृष्णलाई आफ्ना पतिका रूपमा पाउन चाहेका थिए । त्यसैले, भगवान्ले त्यो कुरा स्वीकार गर्नुभयो ।

कहिलेकाहीँ भगवान् श्रीकृष्णले सामान्य व्यक्तिको जस्तो कार्य गर्नुहुन्छ तर जब भगवान्को कार्य गर्नुहुन्छ, आफूलाई सोह्र हजाररूपमा विस्तार गर्नुहुन्छ । "भगवान् श्रीकृष्णले सोह्र हजार युवतीसँग विवाह गर्नुभएको, उहाँले उनीहरूसँग कसरी समय बिताउनुभएको छ हेर्नुपर्‍यो" भनेर एक दिन मुनी नारद त्यहाँ जानुभयो त्यहाँ भगवान् श्रीकृष्ण सोह्र हजार दरबारमा अलग-अलग बस्नु भएको नारद मुनिले देख्नुभयो । एउटा दरबारमा भगवान् श्रीकृष्ण आफ्नी पत्नीसँग कुरा गर्दै हुनुहुन्थ्यो, अर्कोमा उहाँ आफ्ना बालबच्चासँग खेल्दै हुनुहुन्थ्यो, अर्कोमा आफ्ना छोराछोरीको विवाहको व्यवस्था मिलाउँदै हुनुहुन्थ्यो यसरी उहाँ सोह्र

हजार दरबारमा विभिन्न कार्य गर्दै लीला गरिरहनु भएको थियो । त्यसरी नै, उहाँले बाल्यकालमा सामान्य बालकजस्तै गरेर खेल खेल्नु हुन्थ्यो तर जब आमा यशोदाले भगवान्‌ले माटो खानुभएको हो, होइन भनेर जाँच्न मुख खोल भन्दा भगवान्‌ले आफ्नो मुखभित्र सम्पूर्ण ब्रह्माण्ड देखाई दिनुभयो, भगवान् श्रीकृष्ण यस्तो हुनुहुन्छ । सामान्यतया उहाँ सामान्य व्यक्तिको जस्तो भूमिका गर्नुहुन्छ । अर्को उदाहरण – भगवान् श्रीकृष्णले अर्जुनको रथ हाँक्नुभयो तर जब अर्जुनले भगवान् श्रीकृष्णको विराटरूपको दर्शन गर्ने इच्छा व्यक्त गरे, भगवान् श्रीकृष्णले तुरुन्त हजारौं लाखौं शिर, हात, गोडा र हतियार धारण गरेको आफ्नो विराट्‌रूपको दर्शन दिनुभयो । भगवान् श्रीकृष्ण यस्तै हुनुहुन्छ ।

भगवान् श्रीकृष्ण पूर्णरूपले स्वतन्त्र हुनुहुन्छ, त्यसैले, उहाँका मित्र पनि छैनन् र शत्रु पनि छैनन् तर आफ्ना मित्र र शत्रु दुवैको लाभका लागि भगवान्‌ले क्रीडा गर्ने गर्नुहुन्छ । तर ती दुवैमध्ये कसैको पनि लाभका लागि कार्य गर्नुभयो भने परिणाम भने समान नै हुने गर्दछ । यो नै भगवान् श्रीकृष्णको परम स्वभाव हो ।

***

# १३. ब्रह्माण्डको आत्मा (विश्वात्मन्)

**जन्म कर्म च विश्वात्मन्नजस्याकर्तुरात्मनः ।**
**तिर्यन्नृषिषु यादःसु तदत्यन्तविडम्बनम् ॥**

हे ब्रह्माण्डका आत्मा ! हजुर निष्क्रिय भएर पनि कर्म गरिरहनुहुन्छ, प्राण रूप र अजन्मा भएर पनि जन्म लिनुहुन्छ। त्यसैले, यसले भ्रमित गर्दछ। हजुर पशु, मानिस, ऋषि र जलचरका बिच आफैं अवतरित हुने गर्नुहुन्छ, त्यसले पनि भ्रमित नै गर्दछ।

**–(श्रीमद्भागवत् १.८.३०)**

भगवान्का दिव्यलीलाहरू केवल भ्रमित गर्ने मात्र नभएर एक अर्कामा विरोधाभास पूर्ण पनि छन्। अर्को शब्दमा भन्दा मानिसको सीमित सोच्न सक्ने क्षमताभन्दा धेरै पर अथवा सम्पूर्ण अचिन्त्य हुन्छन्। भगवान् संसारका सम्पूर्ण जीवका अन्तर्यामी परमात्मा हुनुहुन्छ तर पनि उहाँ कहिले सुँगुरजस्तो पशु बनेर, कहिले राम, कृष्ण आदि मानिसको रूप लिएर, कहिले नारद रूपी ऋषि बनेर र कहिले जलचरमा माछा रूप लिएर प्रकट हुनुहुन्छ। तैपनि भगवान्लाई अजन्मा अथवा नजन्मिने भनिन्छ। उहाँलाई वास्तवमा केही पनि गर्नु नै छैन। श्रुति मन्त्रमा भनिएको छ, परब्रह्मलाई केही पनि गर्नपरेको छैन। त्यसैले, उहाँसमान ठूलो अरू कोही पनि छैन। भगवान्का विविध शक्तिहरू छन् र उहाँका प्रत्येक कार्य ज्ञान, शक्ति र कर्मद्वारा स्वतः हुने गर्दछन्। यी सबै भनाइहरूले भगवान्का लीला, कार्य र रूप सबै हाम्रा सीमित सोच्न सक्ने क्षमताभन्दा पर छन् र ती सबै अचिन्त्य छन् किनभने भगवान्सँग सोच्न सक्ने क्षमताभन्दा पनि परको शक्ति छ। त्यसैले, उहाँलाई जुनसुकै कार्य वा लीला गर्न सम्भव हुन्छ। त्यसैले, कसैले पनि उहाँलाई सही अर्थमा वा यथार्थमा बुझ्न सक्दैन किनभने भगवान्का प्रत्येक कार्य सामान्य व्यक्तिलाई भ्रमित गर्नेजस्ता हुन्छन्। भगवान्लाई वैदिक ज्ञानद्वारा बुझ्न सकिँदैन, तर शुद्ध भक्तले भने भगवान्लाई बुझ्न सक्दछ किनभने

ऊ भगवान्सँग घनिष्ट रूपले सम्बन्धित हुन्छ । त्यसैले, भगवान् पशुबिच पशुरूपमा प्रकट भए पनि उहाँ पशु होइन, न मनुष्य नै हो, न ऋषि नै हो र न माछा नै हो । उहाँ त सबै परिस्थितिहरूमा केवल शाश्वत परमेश्वर हुनुहुन्छ भन्ने कुरा भक्तहरूले जानेका हुन्छन् ।

कुन्तीले भगवान् श्रीकृष्णलाई **विश्वात्मन्** अर्थात् ब्रह्माण्डको प्राणशक्ति भनेर सम्बोधन गरेकी छिन् । प्रत्येक प्राणीको शरीर भित्र प्राणशक्ति हुन्छ । प्राणी भित्र रहेको प्राणशक्ति आत्मा हो । यही आत्मा वा प्राणशक्तिको उपस्थितिले नै सम्पूर्ण शरीरले कार्य गर्दछ । त्यसरी नै परम प्राणशक्ति पनि हुन्छ र त्यो परम प्राणशक्ति भगवान् श्रीकृष्ण हुनुहुन्छ । त्यसैले, भगवान् श्रीकृष्णले जन्म लिनुहुन्छ भन्ने प्रश्न नै कहाँ उठ्दछ र ? भगवद्गीता (४.९) मा भगवान्ले भन्नुभएको छ –

**जन्मकर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।**
**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ॥**

"जसले मेरो प्राकट्य र कर्महरूका दिव्य स्वभावका बारेमा जान्दछ, उसले यो शरीर छोडेपछि पुनः यस भौतिक संसारमा जन्म लिनुपर्दैन, बरु उसले मेरो सनातन धाम प्राप्त गर्दछ ।"

यस श्लोकको दिव्य शब्दले विशेष गरेर भगवान्को आविर्भाव र कर्महरू सबै आध्यात्मिक हुन्छन् भन्ने सङ्केत गर्दछ । भगवद्गीतामा धेरै स्थानमा भनिएको छ – **अजोऽपि सन्नव्ययात्मा** – अजको अर्थ अजन्मा हो र अव्ययात्माको अर्थ "जसको कहिल्यै नाश हुँदैन" भन्ने हो । भगवान् श्रीकृष्णको स्वभाव र प्रकृति यस्तो छ । त्यसैले, उहाँका दिव्य स्वभावको अझै धेरै वर्णन कुन्तीले भगवान्को प्रार्थनामा गरेकी छिन् ।

प्रारम्भमा नै कुन्तीदेवीले भगवान्को प्रार्थना गर्दै भनेकी छिन् – "हजुर भित्र पनि हुनुहुन्छ, बाहिर पनि हुनुहुन्छ तर हजुर कसैले नदेखिने हुनुहुन्छ ।" भगवान् श्रीकृष्ण प्रत्येक प्राणीको हृदयमा विराजमान हुनुहुन्छ । **ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति, सर्वस्य चाहं हृदि सन्निविष्टिः** । निश्चय नै भगवान् प्रत्येक वस्तुको भित्र विराजमान हुनुहुन्छ, परमाणुको भित्र पनि हुनुहुन्छ (**अण्डान्तरस्थ परमाणुचयान्तरस्थम्**) । भगवान् श्रीकृष्ण भित्र पनि हुनुहुन्छ र बाहिर पनि हुनुहुन्छ । त्यसैले, भगवान्ले अर्जुनलाई आफ्नो विश्वरूप रूपी बाहिरी रूपको दर्शन गराउनुभयो ।

भगवान् श्रीकृष्णको बाहिरी शरीरको वर्णन श्रीमद्भागवत्मा गरिएको छ। त्यहाँ पर्वतहरू भगवान्का हड्डी, महासागर भगवान्को विराटरूपको रौँका प्वाल र ब्रह्मलोक भगवान्को खप्परको माथिल्लो भाग हो भनेर वर्णन गरिएको छ। जसले भगवान्को दर्शन गर्न सक्दैन, उसलाई भगवान्को भौतिक विराट् जगत्को रूपमा विभिन्न प्रकारले भगवान्को दर्शन गर्न उपदेश वा सल्लाह वैदिक साहित्यमा दिइएको छ।

कसै-कसैले सामान्य तरिकाले भगवान् महान् हुनुहुन्छ भन्ने सोच्दछन् तर उनीहरूलाई भगवान् कति महान् हुनुहुन्छ भन्ने जानकारी नै हुँदैन। जब उनीहरूले महानता वा विशालताका बारेमा सोच्दछन्, त्यहाँ उनीहरूले विशाल पहाड, पर्वत, आकाश र अन्य ग्रहहरू हुन् भन्ने सोच्दछन्। त्यसैले, जब भगवान्का बारेमा वर्णन गर्दछन् उनीहरूले यस्तै भौतिकस्वरूपको बारेमा सोच्दछन् किनभने यस्ता भौतिक स्वरूपको बारेमा सोचेमा भगवान्को बारेमा सोच्न सकिन्छ भन्ने धारणा छ। त्यो पनि एक प्रकारको कृष्णचेतना हो। यदि कसैले यो पहाड, पर्वत भगवान् श्रीकृष्णको हड्डी हो, यो विशाल महासागर भगवान् श्रीकृष्णको नाभी हो भनेर सोच्दछ भने ऊ कृष्णचेतनामा हुन्छ। त्यसैगरेर, उसले रुख बिरुवा भगवान् श्रीकृष्णका शरीरका रौं हुन् भनेर र ब्रह्लोक भगवान् श्रीकृष्णको शिरको सबैभन्दा माथिल्लो भाग हो भनेर, पाताललोक भगवान् श्रीकृष्णको पैतालाको तल्लो भाग हो भनेर सोच्न सक्दछ। यसरी, मानिसले भगवान् श्रीकृष्णलाई विशाल वा महान्हरूमा विशालतम र महानतम् सोच्न सक्दछ (**महतो महीयान्**)।

त्यसैगरेर, कसैले भगवान् श्रीकृष्णलाई सानाहरूमा सानो पनि सोच्न सक्दछ र त्यो पनि एक प्रकार महानतम नै हो। भगवान् श्रीकृष्णले यो विशाल जगत् निर्माण गर्न सक्नुहुन्छ, त्यसै गरेर सानो किरा पनि बना उनुहुन्छ। कुनै व्यक्तिले आफ्नो पुस्तकमा सानो किरा दौडेको देख्न सक्दछ। यो नै भगवान् श्रीकृष्णको कला कौशल हो। **अणोरणीयान् महतो महीयान्**, (कठ उपनिषद् १.२.२०)। भगवान्ले विशालभन्दा पनि विशाल र सानो भन्दा पनि सानो वस्तुको सृजना गर्न सक्नुहुन्छ। अहिले मानिसले ७४७ नामक हवाइजहाजको निर्माण गरेको छ र मानिसहरूको सोचाईमा यो विशाल जहाज हो भन्ने छ। के तिनीहरूले किरा जत्रो उड्ने हजाईजहाज निर्माण गर्न सक्दछन्? त्यो सम्भव नै छैन। वास्तवमा विशालता एकतर्फी हुँदैन किनभने

वास्तवमा यदि कुनै वस्तु विशालमा विशाल छ भने सानोमा सानो पनि बन्न सक्दछ ।

तर, आधुनिक युगमा मानिसले निर्माण गरेको विशाल वस्तु कुनै पनि समयमा मानिसले उत्पन्न गरेको वस्तुभन्दा विशाल वा महान् वस्तु होइन । श्रीमद्भागवत्बाट हामीले प्राप्त गरेको जानकारीअनुसार महान् ऋषि कपिलका पिता कर्मद मुनिले एउटा सहर जत्रो विशाल वायुयान बनाउनुभएको थियो । त्यस यानमा ताल, बगैंचा, बाटो र घरहरू सबै थिए र यो यान ब्रह्माण्डभन्दा माथि भएर उड्न सक्दथ्यो । त्यस यानमा यात्रा गर्दै कर्मद मुनिले आफ्नी पत्नीलाई सम्पूर्ण लोक देखाउनुभएको थियो । उहाँ महान् ऋषि हुनुहुन्थ्यो र उहाँको पत्नी देवहूती महान् राजा स्वायम्भुव मनुकी छोरी थिइन् । कर्मद मुनीले उनीसँग विवाह गर्ने इच्छा गर्नुभयो । त्यो देखेर देवहूतीले आफ्ना पितासँग भनिन्, "हे प्रिय पिता ! म यिनै मुनीसँग विवाह गर्न चाहन्छु ।" स्वायम्भुव मनुले आफ्नी छोरीलाई कर्मद मुनिसमीप लगेर "महाशय ! यी मेरी छोरी हुन् र यिनलाई आफ्नी पत्नीका रूपमा स्वीकार गर्नुहोस्" भनेर भन्नुभयो । देवहूती अति नै ऐश्वर्यले युक्त राजाकी छोरी थिइन् तर जब उनले तपस्वी पतिसँग विवाह गरिन्, उनले पतिको यति धेरै सेवा गर्नुपर्‍यो जसले गर्दा उनी दुब्ली र पातली भइन् । वास्तवमा उनले थोरै मात्रामा भोजन गरेर पनि दिनरात पतिको सेवा गर्दथिन् । त्यो देखेर कर्मद मुनिलाई दया जाग्यो । "यी राजाकी छोरीका रूपमा मसँग आएकी थिइन्, तर मेरो संरक्षणमा आएर पनि यिनले कुनै सुखसुविधा प्राप्त गर्न सकेकी छैनन् । त्यसैले, मैले यिनलाई केही सुखसुविधा उपलब्ध गराइदिनपर्‍यो" भन्ने कुरा कर्मद मुनिले सोच्नुभयो । त्यसपछि कर्मद मुनिले आफ्नी पत्नीलाई सोध्नु भयो "तिमीलाई के प्राप्त गरे सुविधा र सुख प्राप्त हुन्छ ?" स्त्रीको प्राकृतिक स्वभाव नै हो, उनीहरू राम्रो घर, असल र मीठा भोजन, राम्रा वस्त्र, असल सन्तान र असल पति चाहन्छन् र स्त्रीका आकाङ्क्षाहरू पनि यस्तै हुन्छन् । त्यसपछि कर्मद मुनीले "तिमीले असल पति पाएकी छौ भन्ने कुरा सिद्ध गर्न आफ्नो योगशक्तिद्वारा विशाल वायुयान निर्माण गरेर त्यस भित्र प्रशस्त सेविका र ऐश्वर्यसहितको घर उनलाई प्रदान गर्नुभयो । कर्मद मुनि केवल मानिस मात्र हुनुहुन्थ्यो तैपनि आफ्नो योगशक्तिद्वारा यस्ता आश्चर्यमय कार्य गर्न सक्नुहुन्थ्यो ।

भगवान् श्रीकृष्ण योगेश्वर अर्थात् सम्पूर्ण योगशक्तिका स्वामी हुनुहुन्छ ।

यदि हामीले थोरै योगशक्ति प्राप्त गर्‍यौं भने पनि हामी महत्त्वपूर्ण व्यक्ति बन्न सक्दछौं भने भगवान् श्रीकृष्ण सम्पूर्ण योगशक्तिका स्वामी हुनुहुन्छ । भगवद्गीतामा भनिएको छ – जताजता योगेश्वर भगवान् श्रीकृष्ण हुनुहुन्छ र जता धनुर्धर पार्थ वा अर्जुन छन्, त्यता नै सबै वस्तु हुन्छन् ।

यदि हामीले आफूलाई सधैं निरन्तर भगवान् श्रीकृष्णको नजिक राख्न सक्यौं भने हामीले पूर्ण सिद्धि प्राप्त गर्न सक्दछौं । विशेष गरी यस युगका लागि भगवान् श्रीकृष्ण आफ्नो पवित्र नामका रूपमा अवतरित हुनुभएको छ । **कलिकाले नाम-रूपे कृष्ण-अवतार** श्रीचैतन्य-चरितामृत (आदि १७.२२) । त्यसैले, चैतन्य महाप्रभुले भन्नुभएको छ –

**नाम्नाकारी बहुधा निजसर्वशक्ति ।**
**स्तत्रार्पिता नियमितः स्मरणे न कालः ॥**

"हे प्रभु ! हजुर अति नै दयालु हुनुहुन्छ । त्यसैले, मलाई आफ्नो पवित्र नाम रूपमा सङ्गत गर्न दिनु भएको छ र यो पवित्र नाम कुनै पनि परिस्थितिमा जप्न र कीर्तन गर्न सकिन्छ ।" हरे कृष्ण मन्त्र जप्नका लागि कुनै पनि नियम विधि छैन, त्यसैले, यो हरे कृष्ण मन्त्र कसैले पनि जहाँ पनि जप्न र कीर्तन गर्न सक्दछ । उदाहरणका लागि, सानो बालक पनि यो मन्त्रको कीर्तन गर्दै नाच्न सक्दछ र यसो गर्न कठिन पनि हुँदैन । हाम्रा विद्यार्थीहरूले आफ्नो जपमाला सँगै लिएर जान्छन् । त्यसैले, बाटोमा हिँड्दा पनि मन्त्रको जप गर्दछन् । त्यसो गर्नाले के नै नोक्सान वा हानि हुन्छ र ? तर त्यसरी जप्दा भगवान् श्रीकृष्णसँगको सङ्गत हुने हुनाले लाभ भने निश्चय नै हुन्छ । यदि हामीले राष्ट्रपतिको सङ्गत गर्न पायौं भने हामी कति गौरवान्वित हुन्छौं र भन्दछौं– "अहो ! म राष्ट्रपतिसँग-सँगै बसेको छु ।" झन् यदि हामी परम र सर्वोच्च राष्ट्रपति, जसले यस्ता लाखौं राष्ट्रपति उत्पन्न गर्न सक्नुहुन्छ, उहाँसँग बस्न पाए के हामी आध्यात्मिक रूपमा गौरवान्वित हुँदैनौं र ? त्यसैले, यो मन्त्रको जप र कीर्तन गर्न पाउनु भनेको हाम्रा लागि सुअवसर हो । त्यसैले, चैतन्य महाप्रभुले भन्नुभएको छ, – **एतादृशी तव कृपा भगवान् ममापि** – "हे प्रिय प्रभु ! हजुर यति दयालु हुनुहुन्छ । त्यसैले मलाई सधैं आफ्नो सङ्गति प्रदान गर्न तयार भइरहनुहुन्छ ।" – **दुर्दैवमीदृशम् इहाजनि नानुरागः** – "तर म यति अभागी छु । त्यसैले, यस अवसरबाट लाभ लिन सकेको छैन ।"

हाम्रो यस कृष्णभावनामृत आन्दोलनले सबैलाई केवल "हरे कृष्ण" मन्त्रको जप र कीर्तन गर्न अनुरोध गर्दछ। कुनै समाचार पत्रमा व्यङ्ग्यचित्र छापिएको थियो। त्यसमा वृद्ध पति पत्नी एक अर्का समक्ष बसेका थिए र पत्नीले पतिलाई "जप्नुहोस्, जप्नुहोस्, जप्नुहोस्" भनेर अनुरोध गरिरहेकी थिइन् तर पतिले भने "सक्दिनँ, सक्दिनँ, सक्दिनँ" भनेर उत्तर दिइरहेका थिए। यसरी हामीले सबैलाई मन्त्र जप्न, कीर्तन गर्न अनुरोध गरिरहेका छौं "कृपया जप्नुहोस्, जप्नुहोस्, जप्नुहोस्" भनेर तर सबैले "सक्दैनौं, सक्दैनौं, सक्दैनौं" भनेर उत्तर दिइरहेका छन्। यो नै तिनीहरुको दुर्भाग्य हो।

तैपनि यस्ता अभागीहरूलाई भाग्यमानी बनाउनु नै हाम्रो कर्तव्य हो र यो नै हाम्रो लक्ष्य र उद्देश्य पनि हो। त्यसैले, हामीहरू सहरका सडकमा गएर मन्त्रको कीर्तन गर्दछौं। तिनीहरूले हामी कीर्तन गर्न सक्दैनौं भने पनि हामी कीर्तन गर्दछौं र त्यो नै हाम्रो कर्तव्य हो। कारणवश हामीले कुनै पुस्तक उसको हातमा राख्न पायौं भने त्यो व्यक्ति भाग्यशाली हुन्छ। उसले आफूले कठिन परिश्रम गरेर कमाएको धन अनावश्यक र पापपूर्ण कार्यमा खर्च गर्नेगर्दछ तर यदि उसले जतिसुकै मूल्य परे पनि हाम्रा पुस्तक खरिद गऱ्यो भने उसको त्यो धनको सही सदुपयोग हुनेछ र यो नै कृष्णचेतनाको सुरुवात वा प्रारम्भ हुनेछ किनभने उसले आफ्नो कठिन परिश्रमद्वारा प्राप्त धन कृष्णभावनामृत आन्दोलनलाई प्रदान गऱ्यो। त्यसैले, उसले केही न केही आध्यात्मिक लाभ अवश्य पाउँदछ। त्यसैले, हाम्रो उद्देश्य र कार्य भनेको नै जुनसुकै उपायले भएपनि मानिसलाई कृष्णभावनामृत आन्दोलनमा ल्याउने हो, जसले गर्दा सबैले आध्यात्मिक लाभ प्राप्त गर्न सकून्।

जब भगवान् श्रीकृष्ण यस पृथ्वीमा प्रकट हुनुभयो, धेरैलाई उहाँ भगवान् हुनुहुन्छ भन्ने कुरा थाहा थिएन। आवश्यकता परेका समयमा उहाँले आफू भगवान् हुँ भन्ने कुरा सिद्ध पनि गर्नुभयो तर सामान्यतया उहाँ एउटा साधारण व्यक्तिजस्तै प्रतीत भएर बस्नुभयो। त्यसैले, शुकदेव स्वामीले भगवान् श्रीकृष्ण एउटा गाई गोठालो जस्तो भएर कार्य गर्दाको वर्णन गर्दा उहाँको सही परिचयप्रति पनि लक्षित गर्नुभएको छ। यो गाई चराउने गोठालो को हो ? शुकदेव गोस्वामीले भन्नुभयो – **इत्थं सतां ब्रह्मसुखानुभूत्या**– निर्विशेषवादीले निर्विशेष ब्रह्मको ध्यान गर्दा जुन आनन्दको अनुभव गर्दछन्, उनै सम्पूर्ण आनन्दका स्रोत भगवान् श्रीकृष्ण यहाँ नै हुनुहुन्छ भनेर शुकदेव गोस्वामीले सङ्केत गर्नुभएको छ।

भगवान् श्रीकृष्ण सम्पूर्ण वस्तुको उत्पत्तिका स्रोत हुनुहुन्छ (**अहं सर्वस्य प्रभवः**), त्यसैले, जब निर्विशेषवादीहरूले निर्विशेष ब्रह्मको ध्यान गरेर जुन दिव्य आनन्दको अनुभूति गर्न चाहन्छन्, वास्तवमा त्यो आनन्द भगवान् श्रीकृष्णबाट नै आउँदछ। त्यसैले, शुकदेव गोस्वामीले भन्नुहुन्छ –"ब्रह्म सुखरूपी जुन दिव्य सुख छ, जसले ब्रह्मको अनुभूति गराउँदछ, त्यो ब्रह्मसुखका स्रोतरूपी पुरुष उहाँ नै हुनुहुन्छ।"

भक्तहरू जहिले पनि भगवान्को सेवा गर्न तत्पर रहिरहन्छन् (**दास्यं गतानां परदैवतेन**) तर मायाको नियन्त्रणमा परेका व्यक्तिहरूका लागि ती भक्तहरू एउटा सामान्य बालक जस्तै हुन्छन् (**माया श्रितानां नरदारकेण**)। **ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्** – जीवको जस्तो विचार हुन्छ, भगवान् श्रीकृष्णले उनीहरूसँग सोहीअनुसारको व्यवहार गर्नुहुन्छ। जसले भगवान् श्रीकृष्णलाई सामान्य मानिस ठान्दछ ऊसँग भगवान् श्रीकृष्णले सामान्य व्यक्तिको जस्तै व्यवहार गर्नुहुन्छ र भक्तहरू जसले भगवान् श्रीकृष्णलाई भगवान्का रूपमा स्वीकार गर्दछन्, उनीहरूले भगवान्सँगको सङ्गत गरेर आनन्द लिन्छन्। निश्चय नै निर्विशेषवादीहरूको लक्ष्य भनेको ब्रह्मज्योति हो तर त्यस ब्रह्मज्योतिका स्रोत नै भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। त्यसैले, भगवान् श्रीकृष्ण नै सर्वस्व हुनुहुन्छ (**ब्रह्मेति परमात्मेति भगवान् इति शब्द्यते**)।

गाई गोठालाहरू भगवान् श्रीकृष्णसँग खेल्न पाउँदथे। उनीहरू यसरी भगवान् श्रीकृष्णसँग खेल खेल्न पाउने भाग्यशाली कसरी भए त ?

**इत्थं सतां ब्रह्मसुखानुभूत्या दास्यं गतानां परदैवतेन।**
**मायाश्रितानां नरदारकेण सार्धं विजह्नुः कृतपुण्यपुञ्जाः॥**

भगवान् श्रीकृष्णसँग खेल खेल्ने गाई गोठालाहरू पनि सामान्य बालक थिएनन। त्यसका लागि उनीहरूले चरम सिद्धि वा सर्वोच्च पूर्णता प्राप्त गरेका थिए। त्यसैले, भगवान्सँग खेल्न सक्षम भएका थिए। उनीहरूले यो पद कसरी प्राप्त गर्न सके ? **कृतपुण्यपुञ्जा**– धेरैधेरै जन्ममा गरिएका पुण्यकर्मद्वारा प्राप्त गरेका हुन्। धेरै-धेरै जन्मसम्म यी बालकहरूले तपस्या र कठोर नियमको पालना गरेर चरम सिद्धि वा सर्वोच्च पूर्णता प्राप्त गरे अनि अहिले उनीहरूले भगवान् श्रीकृष्णसँग समानस्तरमा खेल खेल्ने अवसर प्राप्त गरे। तर, उनीहरूलाई भगवान् श्रीकृष्ण भगवान् हुनुहुन्छ भन्ने जानकारी थिएन र यो नै वृन्दावनलीलाको स्वभाव वा प्रकृति पनि हो।

गाईगोठालाहरूलाई भगवान् श्रीकृष्णको स्वरूपको बारेमा जानकारी थिएन तैपनि उनीहरू उहाँसँग प्रेम गर्दथे र उनीहरूको प्रेमको कुनै सीमा नै थिएन । वृन्दावनका अन्य प्राणीको प्रेमको अवस्था पनि यस्तै थियो । उदाहरणका लागि, भगवान् श्रीकृष्णका माता, पिता, यशोदा र महाराज नन्दले भगवान् श्रीकृष्णलाई वात्सल्य प्रेम गर्दथे । त्यसै गरेर भगवान् श्रीकृष्णका साथीहरूले भगवान् श्रीकृष्णलाई प्रेम गर्दथे । भगवान् श्रीकृष्णका युवती साथीले पनि भगवान् श्रीकृष्णसँग प्रेम गर्दथे, त्यहाँका वृक्ष, जल, फूल, गाई र बाच्छाहरू सबैले भगवान् श्रीकृष्णसँग प्रेम गर्दथे । वृन्दावनको स्वभाव र वातावरण नै यस्तो थियो । यदि हामीले भगवान् श्रीकृष्णसँग कसरी प्रेम गर्ने भनेर सिक्न सक्यौं भने हामीले यस जगत्लाई तुरुन्त वृन्दावनमा परिवर्तन गर्न सक्दछौं ।

भगवान् श्रीकृष्णसँग कसरी प्रेम गर्ने (**प्रेमा पुमार्थो महान्**) भन्ने कुरा नै केन्द्रविन्दु हो । मानिसहरूले सामान्यतया धर्म, अर्थ, काम र मोक्षको पालना गर्दछन् तर चैतन्य महाप्रभु भने यी चारै कुराप्रति असहमत हुनुहुन्थ्यो । यो जीवन भनेको यी चार कुरा प्राप्त गर्नका लागि होइन । यसको वास्तविक लक्ष्य भनेको भगवान् श्रीकृष्णसँग प्रेम गर्नु हो ।

निश्चय नै, जबसम्म धर्मप्रति विचार सुरु गरिंदैन तबसम्म मानव जीवनको वास्तविक रूप नै प्रारम्भ हुँदैन । तर, यस कलियुगमा व्यावहारिकरूपमा धर्म प्रायः शून्य नै छ । अहिले न धर्म नै छ । त्यसैले, वैदिक हिसाबअनुसार अहिलेको मानव सभ्यता मानवविहीन सभ्यता हो । यस युगभन्दा पहिला मानिसले नैतिकता-अनैतिकता, धर्म-अधर्मको बारेमा सोच्दथे तर जब कलियुगको वृद्धि भयो अनि यी सबै कुरा समाप्त भए । अहिलेका मानिसहरू कुनै कुराका बारेमा सोच्दै नसोची कार्य गर्ने गर्दछन् । श्रीमद्भागवतमा भनिएको छ – कलियुगका करिब असी प्रतिशत मानिस पापी हुन्छन् र त्यो हामीले देखि पनि रहेका छौं । अवैध यौन सम्बन्ध, नशा सेवन गर्नु, मांसाहारी हुनु र जुवा खेल्नु – यी पापपूर्ण जीवनका चार स्तम्भ वा खम्बा हुन् । त्यसैले, यीमध्ये कुनै एउटा खम्बालाई भाँचिदियौं भने यो पापमय जीवनको छाना स्वतः खस्दछ भनेर हामी सबैलाई अनुरोध गर्ने गर्दछौं । अनि, हरे कृष्ण मन्त्रको जप र कीर्तन गरेर मानिस दिव्य पदमा स्थित हुन सक्दछ र यो विधि ज्यादै नै सरल पनि छ ।

पापमय जीवनमा कसैले पनि भगवान्को अनुभूति गर्न सक्दैन । त्यसैले, भगवान् श्रीकृष्णले भन्नुभएको छ –

**येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम् ।**
**ते द्वन्द्वमोहनिर्मुक्ता भजन्ते मां दृढव्रताः ॥**

"जुन मानिसले पूर्वजन्ममा र यस जन्ममा पुण्यकर्म गरेका छन्, जसका पापकर्म सबै पूर्णरूपले नष्ट भएका छन् र जो मोहको द्वन्द्वबाट मुक्त भएको छ, ऊ पूर्ण सङ्कल्पका साथ मेरो सेवामा लाग्दछ" (भगवद्गीता ७.२८) ।

**अन्तगतम्** शब्दको अर्थ समाप्त हुनु हो । जसले आफ्ना पापमय जीवनको अन्त्य गरेको छ, ऊ मात्र भक्तिसेवामा लाग्न सक्दछ । पापमय जीवनको अन्त्य कसले गर्न सक्दछ ? जसले आफूलाई पुण्य कर्ममा लगाउँदछ, उसले मात्र सक्दछ । मानिसलाई कर्म गर्नु नै पर्दछ तर यदि उसले आफूलाई पुण्य कर्ममा लगाउँदछ भने उसका पापकर्म स्वभाविक रूपले समाप्त हुन्छन् । मानिसले आफूलाई एकातर्फ पापमय जीवनका खम्बालाई ध्वस्त गर्न र अर्कोतर्फ आफूलाई पुण्य कर्मरूपी जीवनमा लगाउनुपर्दछ ।

यदि कसैले पुण्यकर्म गर्दैन भने केवल सैद्धान्तिक ज्ञानले मात्र पापकर्मबाट ऊ मुक्त हुन सक्दैन । उदाहरणका लागि – अमेरिकाको सरकारले एलएसडी र अन्य नशा दिने औषधीको जथाभावी प्रयोग रोक्नका लागि लाखौं डलर खर्च गरेको छ तर सरकार त्यस कार्यमा असफल भएको छ । केवल कानुन बनाएर र भाषण गरेर मात्र मानिसलाई त्यो नशा सेवन गर्नबाट मुक्त गराउन सकिंदैन र त्यो सम्भव पनि छैन । सरकारले वा अन्य कसैले मानिसलाई असल कार्य गर्न लगाउनुपर्दछ । त्यसो गरेमा उनीहरूले खराब कार्य स्वतः छोडिदिन्छन् । उदाहरणका लागि – हामीले हाम्रा विद्यार्थीहरूलाई "नशा गर्न छोड" भन्यौं । उनीहरू तुरुन्त नशा गर्न छोडे तर सरकार भने त्यसो गर्न असफल भएको छ, यसो गर्नु नै व्यावहारिक कार्य हो ।

**परं दृष्टावा निवर्तते** – यदि कसैलाई असल कार्य दिन सकिएन भने उसलाई खराब कार्य गर्नबाट रोक्न सकिंदैन र त्यो सम्भव पनि छैन । त्यसैले, हामीसँग दुई पक्ष हुन्छन् – एउटा पापकर्म गर्न निषेध र दोस्रो असल कार्यमा लगाउनु । हामी केवल "अवैध यौन सम्बन्ध नगर", "नशा नगर" मात्र भन्दैनौं किनभने केवल निषेध मात्र गर्नुको कुनै अर्थ नै हुँदैन र त्यो सँगसँगै केही सकारात्मक कार्य पनि हुनपर्दछ किनभने प्रत्येक व्यक्तिलाई केही न केही कार्य गर्न परेको नै हुन्छ किनभने हामी जीव हौं, कुनै मृत ढुङ्गा होइनौं । तर निर्विशेषवादी दार्शनिकहरू भने ध्यानद्वारा मृत ढुङ्गा हुन चाहन्छन् र भन्ने गर्दछन् "मलाई

शून्य वा निर्विशेषको ध्यान गर्न देऊ ।" तर कसैले पनि आफूलाई कृत्रिमरूपले कसरी शून्य बनाउन सक्दछ र ? मानिसको हृदय र मन पूर्णरूपले क्रियाशील रहन्छन् भने कसरी कोही कृत्रिम विधिद्वारा मानव समाजलाई सहयोग नगरी शून्य भएर बस्न सक्दछ ?

तथाकथित योग वा ध्यानका विधिहरू निश्चय नै दुष्टतापूर्ण हुन् किनभने यसले कसैलाई पनि कुनै कार्य प्रदान गर्न सक्दैन । तर, कृष्णभावनामृतमा सबैलाई प्रशस्त कार्य हुने हुन्छन् । प्रत्येक भक्तहरू अर्चाविग्रहको पूजासेवा गर्नका लागि बिहान सबेरै ब्रह्म मुहूर्तमा उठ्दछन्, भक्तहरूले भगवान् श्रीकृष्णका लागि स्वादिष्ट भोजन तयार गर्दछन्, मन्दिरको सजावट, श्रृङ्गार गर्दछन्, माला बनाउँदछन्, कीर्तन गर्न बाहिर जान्छन् र पुस्तकहरू बिक्री गर्दछन् । तिनीहरू यसरी चौबिसै घण्टा सेवामा लागिरहने हुनाले आफ्ना पापमय जीवनलाई त्याग गर्न सक्षम हुन्छन् । यदि कुनै बच्चाको हातमा कुनै खानेकुरा छ र यदि हामीले त्योभन्दा असल वस्तु उसलाई दियौं भने उसले त्यो कम असल वस्तुलाई फ्याँकेर हामीले दिएको असल वस्तु लिन्छ । त्यसरी नै, यस कृष्णभावनामृत समाजमा हामीले सबैलाई असल कार्य, असल जीवन, उत्तम दर्शन, असल चेतना र अन्य सबै असल वस्तु प्रदान गर्दछौं । त्यसैले, जुन व्यक्ति भक्ति सेवाको कार्यमा लाग्दछ, उसले आफ्ना सबै पापमय कर्मलाई त्याग्दछ र ऊ कृष्णभावनामृतको स्तरमा अघि बढ्दछ ।

सम्पूर्ण जीवलाई कृष्णचेतनाले युक्त बनाउने कार्य केवल मानव समाजमा मात्र होइन पशुसमाजमा पनि चलिरहेको छ किनभने यस जगत्का सबै प्राणी भगवान् श्रीकृष्णका अंश हुन् तर ती सबै यस भौतिक जगत्मा आएर सडिरहेका छन् । त्यसैले, भगवान् श्रीकृष्णसँग यी सबैलाई उद्धार गर्ने एउटा विशाल योजना छ । कहिलेकाहीँ भगवान् स्वयम् यस जगत्मा आउनुहुन्छ, कहिले आफ्नो अत्यन्त विश्वासिलो भक्तलाई पठाउनुहुन्छ, कहिले भगवद्गीताजस्तो उपदेश छोड्नुहुन्छ । भगवान् श्रीकृष्णका अवतार सर्वत्र छन् । भगवान् कहिले पशु बनेर, कहिले मानिस, कहिले ऋषि र कहिले जलचर बनेर पनि आउनुहुन्छ (**तिर्यङ्नृषिषु यादःसु**) । उदाहरणका लागि भगवान् श्रीकृष्णले माछाको अवतार पनि धारण गर्नुभएको छ ।

त्यसैले, भगवान् श्रीकृष्णको प्राकट्य र तिरोधान यी सबैले भ्रमित गर्दछ (**तदत्यन्त विडम्बनम्**) । हामी बन्धनमा बाँधिएका जीवहरू मृत्युपश्चात् एउटा

शरीरबाट अर्को शरीर प्राप्त गरिरहन्छौं, किनभने प्रकृतिका निमयद्वारा यसरी शरीर परिवर्तन गर्न हामी वाध्य गरिएका छौं तर भगवान् श्रीकृष्ण भने बाध्य भएर अवतरित हुनुहुन्न किनभने बाध्य गराउने शक्ति नै भगवान् श्रीकृष्ण स्वयम् हुनुहुन्छ। भगवान् र हामीमा यो नै भिन्नता छ। तर मूर्ख र दुष्टहरूले "मैले पनि यस पृथ्वीमा जन्म लिएको छु र भगवान् श्रीकृष्णले पनि यस पृथ्वीमा जन्म लिनुभएको छ, त्यसैले, म पनि भगवान् हुँ" भन्ने सोच्दछन्। तर, उनीहरूलाई प्रकृतिको नियमले बाध्य बनाएर अर्को जन्म लिनपर्दछ भन्ने कुरा थाहा नै छैन।

कसैलाई कुनै देशमा सुन्दर शरीर, प्रशस्त ऐश्वर्य र उत्तम शिक्षासहित जन्म लिन पाउने अवसर प्राप्त हुन सक्दछ। तर, यदि यस्तो जन्मको दुरुपयोग गऱ्यो भने उसले यस जन्मको मनोवृत्तिअनुसारको अर्को जन्म प्राप्त गर्दछ। उदाहरणका लागि – अहिलेको अवस्थामा सरकारद्वारा उत्तम स्कुल र विश्वविद्यालयहरूको व्यवस्था गरिदिंदा पनि यस संसारका सभ्य देशमा हिप्पीहरूको जन्म भइरहेको छ र त्यस्ता युवकहरू यति निराश र खिन्न छन् त्यसैले, उनीहरूले सुँगुरको पनि पूजा गर्दछन्। यदि कसैले सुँगुरजस्ताको सङ्गत गऱ्यो भने वास्तवमा उसले अर्को जन्म सुँगुरको शरीर नै प्राप्त गर्दछ। **प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः** – "ठीकै छ, महाशय, तिमी सुँगुर नै बन" यसरी प्रकृतिले सबैलाई अवसर प्रदान गर्दछिन् किनभने प्रकृतिको व्यवस्था नै यस्तो हुन्छ। प्रकृतिका तीन प्रकारका गुणहरू छन् र मानिस ती मध्ये जुन प्रकारको गुणको सङ्गतमा बस्दछ, उसले अर्को जन्म सोही गुणअनुसार प्राप्त गर्दछ।

भगवान् श्रीकृष्णको आविर्भाव र तिरोधान जीवको मृत्यु पश्चात् भइरहने शरीर प्राप्तिको अन्त्य गर्नका लागि हुने गर्दछ। त्यसैले, मानिसले भगवान् श्रीकृष्णको आविर्भाव र तिरोधान हुनु पछिको विशाल योजनाका बारेमा जान्नुपर्दछ। भगवान् श्रीकृष्ण त्यसै कल्पना गर्दै वा लहडमा परेर आउनुभएको होइन। उहाँको विशाल योजना छ। नत्र उहाँ किन यहाँ आउनुहुन्थ्यो र ? उहाँ हामीलाई भगवद्धाम फिर्ता लैजानलाई ज्यादै नै उत्सुक भइरहनुहुन्छ र भगवान् श्रीकृष्णको कार्य पनि यही नै हो। त्यसैले, उहाँले भन्नुभएको छ–

**सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज।**
**अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि मा शुचः॥**

"सबै प्रकारका धर्मको परित्याग गरेर केवल एकमात्र मेरो शरणमा आऊ । म तिमीलाई तिम्रा सबै पापबाट मुक्त गरिदिनेछु वा उद्धार गरिदिनेछु, तिमी नडराऊ" (भगवद्गीता १८.६६) । हामी सबै भगवान् श्रीकृष्णका सन्तान हौं, हामी यस भौतिक जगत्मा जन्मिएका हुनाले बारम्बार जन्म, मृत्यु, बुढ्यौली र रोग आदिबाट दु:खित भइरहेका छौं भने भगवान् श्रीकृष्ण हाम्रा लागि अरू बढी दु:खित हुनुहुन्छ । यस भौतिक शरीरमा रहेका हामीलाई यस संसारमा कुनै पनि सुख सुविधा छैन तैपनि हामी मूर्ख र दुष्टहरू त्यस विषयमा कुनै वास्ता नै गर्दैनौं । हामी यस क्षणिक जीवनका लागि सुखसुविधाको व्यवस्था गर्ने प्रयासमा नै व्यस्त छौं तर बारम्बार हुने जन्म, मृत्यु, बुढ्यौली र रोग जस्ता दु:ख र असुविधाबाट कसरी मुक्त हुने भन्ने विषयलाई भने तिरस्कार गरिरहेका छौं । यो नै हाम्रो अज्ञानता र मूर्खता हो । त्यसैले, भगवान् श्रीकृष्ण हामीलाई अज्ञानताबाट उठाउन र भगवद्धाम फिर्ता लैजानका लागि आउनुहुन्छ ।

***

# १४. भगवान् श्रीकृष्णका अद्भूत लीलाहरू

**गोप्याददे त्वयि कृतागसि दाम तावद्**
**या ते दशाश्रुकलिलाञ्जनसम्भ्रमाक्षम् ।**
**वक्त्रं निनीय भयभावनया स्थितस्य**
**सा मां विमोहयति भीरपि यद्बिभेति ॥**

हे प्रिय कृष्ण ! जब हजुरले अपराध गर्नुभयो अनि यशोदाले हजुरलाई डोरीले बाध्न खोजिन् । हजुरका आँखा क्षुब्ध भए अनि आँसु आयो अनि त्यसले हजुरको आँखाको गाजल धोइदियो । हुनत हजुरसँग साक्षात् डर वा काल पनि भयभीत हुन्छ तर हजुर भयभीत हुनुभयो । यो दृश्यले मलाई भ्रमित गरेको छ ।

**–(श्रीमद्भागवत् १.८.३१)**

यहाँ सबैलाई भ्रमित गर्ने भगवान्को अर्को लीलाको वर्णन गरिएको छ । भगवान् सबै परिस्थितिमा परमेश्वर नै हुनुहुन्छ भन्ने कुराको व्याख्या गरिसकिएको छ । भगवान् परमेश्वर भएर पनि सोही समयमा आफ्ना भक्तहरूसँग क्रीडा पनि गरिरहनुभएको छ भन्ने कुराको विशेष उदाहरण यहाँ दिइएको छ । भगवान्का शुद्ध भक्तले भगवान्को अनन्य र अहैतुकी सेवा गर्दछन् र यसरी भगवान्को भक्तिपूर्ण सेवा गर्दा भक्तले भगवान्को स्थिति र पदलाई समेत भुल्ने गर्दछन् । भगवान्ले पनि यस्तो कुनै प्रशंसा विहीन, शुद्ध प्रेमपूर्ण, प्रेमले युक्त, भक्तिले युक्त सेवालाई अत्यन्त रुचिपूर्वक स्वीकार गर्नुहुन्छ । सामान्यतया भक्तहरूले भगवान्को अति उच्च आदरपूर्वक पूजा गर्दछन्, तर जब भक्तले अति शुद्ध प्रेमले भगवान्लाई आफूभन्दा कम महत्त्वपूर्ण ठान्दछ, त्यससमय भगवान् आफ्ना भक्तसँग विशेषरूपले प्रसन्न हुनुहुन्छ । गोलोक वृन्दावनरूपी मूलधाममा भगवान्का सम्पूर्ण लीलाहरू यस्तै मनोभावनाले आदानप्रदान हुने गर्दछन् । त्यहाँ भगवान् श्रीकृष्णका साथीहरूले उहाँलाई

आफैँतुल्य नै ठान्दछन् र भगवान्‌लाई आदरणीय हुनुहुन्छ भन्ने ठान्दैनन् । भगवान्‌का मातापिता (जो शुद्ध भक्त हुन्) उनीहरूले भगवान्‌लाई एउटा शिशु ठान्दछन् । भगवान्‌का मातापिताले दिएको दण्डलाई वैदिक स्तोत्रद्वारा गरिएको प्रार्थनालाई भन्दा बढी प्रसन्न भएर स्वीकार गर्नुहुन्छ । । आफ्ना प्रियसहीरूका निन्दात्मक वा दोष लगाइएका शब्दहरू वैदिक स्तोत्रबाट गरिएका प्रार्थनाहरू भन्दा बढी रुचि लिएर सुन्नुहुन्छ । जब भगवान् श्रीकृष्ण गोलोक वृन्दावनका दिव्य जगत्‌का लीलाहरू प्रकट गर्न यस पृथ्वीमा उपस्थित हुनुभयो उहाँले सामान्य जनलाई आकर्षित गर्न आफ्नी लालनपालन गरेकी आमा यशोदाका अघि अनौठो विनम्रभाव प्रकट गर्नुभयो । भगवान्‌ले आफ्नो स्वाभाविक बालपनले युक्त क्रीडा गर्दै माता यशोदाले जम्मा गरेर राखेका मख्खनको भाँडो फोडेर सम्पूर्ण मख्खन आफ्ना मित्र, खेल्ने साथी, वृन्दावनका बाँदरहरूलाई बाँडिदिनुभयो भने उनीहरूले भगवान्‌को दानशीलताको लाभ लिए । माता यशोदाले यस्तो देखेपछि शुद्ध प्रेमले युक्त भएर आफ्नो दिव्य छोरालाई दण्ड दिन चाहिन् । जसरी सामान्य घरहरूमा हुने गर्दछ, त्यसरी हातमा डोरी लिएर भगवान्‌लाई बाँध्ने धम्की दिइन् । माता यशोदाको हातमा डोरी देखेर भगवान्‌ले सामान्य बालकले जस्तै शिर निहुर्‍याएर रुनुभयो अनि रुँदा आएको आँसु सुन्दर आँखाको गाजललाई धुँदै गालाबाट तलतिर बग्यो ।

भगवान्‌को यो रूपको कुन्तीले पूजा गरिन् किनभने उनी भगवान्‌को स्थिति वा पदका बारेमा सचेत वा सतर्क थिइन् । जोसँग साक्षात् भय पनि भयभीत हुन्छ उनै भगवान् आफ्नी आमाले सामान्य दण्ड दिन चाहँदा आमासँग भयभीत हुनुभयो । कुन्तीलाई भगवान्‌को पूजनीय पद वा स्थितिको बारेमा जानकारी थियो भने यशोदालाई थिएन । त्यसैले, यशोदाको स्थिति कुन्तीको स्थितिभन्दा श्रेष्ठ छ । माता यशोदाले भगवान्‌लाई नै आफ्ना बच्चाका रूपमा प्राप्त गरिन् तर भगवान्‌ले उनलाई आफ्नो बच्चा साक्षात् भगवान् नै हुनुहुन्छ भन्ने कुरालाई भने बिर्साइदिनु भयो । यदि माता यशोदालाई भगवान्‌को दिव्यस्थितिका बारेमा जानकारी भएकाभए उनले उहाँलाई दण्ड दिन हिचकिचाउने थिइन् । तर उनलाई यी सबै कुराहरू बिर्साइदिइएको थियो किनभने भगवान्‌ले आफ्नी ममतामयी मातासँग सम्पूर्ण बाललीलाको परिचय दिन चाहनुभएको थियो । माता र पुत्रको यो प्रेम आदानप्रदान बडो स्वाभाविकरूपमा सम्पन्न भएको थियो । कुन्ती भने यी दृश्यलाई स्मरण गर्दै भ्रममा परेकी थिइन् किनभने उनले यस्तो दिव्य

पुत्रप्रेमको प्रशंसाबाहेक अरू के नै गर्न सक्दथिन् ? परोक्षरूपमा माता यशोदाको पनि प्रशंसा भइरहेको थियो किनभने उनले भगवान्प्रति दिव्य प्रेम गरेकी थिइन् र सर्वशक्तिमान् भगवान्लाई आफ्ना प्रिय बच्चाका रूपमा प्राप्त गरेर उहाँलाई आफ्नो वशमा गरेकी थिइन् ।

यी लीलाहरूले भगवान् श्रीकृष्णका ऐश्वर्यमध्ये सौन्दर्य ऐश्वर्यलाई प्रस्तुत गरेको छ । भगवान् श्रीकृष्णसँग छ ऐश्वर्यहरू छन् – सम्पूर्ण सम्पत्ति, सम्पूर्ण बल, सम्पूर्ण प्रभाव, सम्पूर्ण ज्ञान, सम्पूर्ण त्याग र सम्पूर्ण सौन्दर्य । भगवान् श्रीकृष्ण महानतमहरूमा महान् हुनुहुन्छ र सानोभन्दा पनि सानो हुनुहुन्छ (**अणोरणीयान् महतो महीयान्**) उहाँको स्वभाव र प्रकृति नै यस्तो छ । हामीहरू आश्चर्य र आदरपूर्वक भगवान् श्रीकृष्णलाई नमस्कार गर्दछौं तर "हे कृष्ण ! हजुरले अपराध गर्नुभयो, अब म हजुरलाई बाँध्दछु" भनेर हातमा डोरी लिएर यस्तो भन्दै कोही पनि जाँदैन । तर, यसो भन्न सक्नु पनि परमपूर्ण भक्तको विशेष अधिकार हो र भगवान् श्रीकृष्ण पनि उहाँका समीप भक्त यसरी नै आऊन् भन्ने चाहनुहुन्छ ।

भगवान् श्रीकृष्णको ऐश्वर्यका बारेमा सोचेर कुन्तीदेवीले यशोदाको भूमिका निर्वाह गर्ने साहस नै गरिनन् । कुन्तीदेवी भगवान् श्रीकृष्णकी फुपू थिइन् तर पनि उनलाई यशोदाको जस्तै भगवान् श्रीकृष्णको नजिक जान पाउने सौभाग्य प्राप्त भएन । यशोदा उच्चस्तरकी भक्त थिइन्, त्यसैले उनले भगवान्लाई दण्ड दिने अधिकार पनि पाएकी थिइन् । यशोदा मातालाई यो विशेष अधिकार प्राप्त थियो । साक्षात् भयलाई पनि भयभीत गर्ने भगवान्लाई पनि धम्की दिन सक्ने यशोदा माता कति भाग्यमानी रहिछिन् भनेर कुन्ती देवीले सोच्दछिन् (**भीरपि यद्‌बिभेति**) । भगवान् श्रीकृष्णसँग को भयभीत हुँदैन र ? तर भगवान् श्रीकृष्ण भने यशोदा मातासँग भयभीत हुनुभएको छ, यो भगवान् श्रीकृष्णको महानता हो ।

यस्तो भगवान्को ऐश्वर्यको दोस्रो उदाहरणअनुसार भगवान् श्रीकृष्णको मदनमोहन नाम पनि हो । मदनको अर्थ कामदेव हो र कामदेवले सबैलाई कामवासना बढाउनु हुन्छ तर भगवान् श्रीकृष्णलाई मदनमोहन भनिन्छ किनभने भगवान् स्वयम् यति धेरै सुन्दर हुनुहुन्छ उहाँले कामदेवलाई नै मोहित गर्नुहुन्छ । भगवान् श्रीकृष्ण श्रीमती राधारानीद्वारा मोहित हुनुहुन्छ, त्यसैले, श्रीमती राधारानीलाई मदनमोहनमोहिनी भनिन्छ । भगवान् श्रीकृष्णले

कामदेवलाई मोहित गर्नुहुन्छ भने यस्तो मोहित गर्ने भगवान्‌लाई राधारानीले मोहित गर्नुहुन्छ ।

कृष्णचेतनामा यस्ता अति उच्चस्तरका आध्यात्मिक जानकारीहरू छन् । यस्ता कुराहरू कुनै गफ, मनगढन्त र काल्पनिक होइनन् । यी सबै यथार्थ र वास्तविक हुन् र प्रत्येक भक्त जो भक्तिमा अघि बढेको छ, उसले भगवान् श्रीकृष्णका यस्ता लीलालाई बुझ्ने र त्यसमा सम्मिलित हुन पाउने अधिकार प्राप्त गर्दछ । यशोदा मातालाई जुन अधिकार प्राप्त भएको थियो, त्यो हामीले प्राप्त गर्न सक्दैनौं भन्ने सोच्नुहुँदैन । प्रत्येकलाई त्यो सौभाग्य प्राप्त हुन सक्दछ । जसले भगवान् श्रीकृष्णलाई बच्चालाई जस्तै गरेर प्रेम गर्दछ उसले त्यो सौभाग्य प्राप्त गर्न सक्दछ किनभने बच्चालाई आमाले नै धेरै प्रेम गर्दछिन् । यस भौतिक जगत्‌मा पनि बच्चालाई आमाले गर्ने प्रेमको कुनै तुलना नै छैन किनभने आमाले आफ्नो बच्चालाई कुनै वस्तु प्राप्त गर्ने आशामा नभएर स्वत: प्रेम गर्दछिन् । निश्चय नै यो जगत् दूषित भएको छ । त्यसैले, कहीँकहीँ आमाले “मेरो छोरा ठुलो हुनेछ, धन कमाउने छ र मैले पनि केही धन प्राप्त गर्नेछु” भनेर सोच्दछिन्, जुन सामान्यतय सत्य नै हो । यसरी प्रेमको सट्टामा केही पाउने इच्छा हुने गर्दछ । तर, भगवान् श्रीकृष्णलाई प्रेम गर्दा कुनै स्वार्थ हुँदैन किनभने अहैतुकी भक्ति वा प्रेम सम्पूर्ण भौतिक लाभबाट रहित हुन्छ वा शुद्ध हुन्छ (**अन्याभिलाषिता शून्यम्**) ।

“हे कृष्ण ! मलाई दिनहुँ रोटी वा भोजन प्रदान गर्नुहोस् वा मलाई यो वस्तु वा त्यो वस्तु दिनुहोस् अनि मात्र म हजुरलाई प्रेम गर्दछु” भनेर हामीले भौतिक वस्तु प्राप्त गर्नका लागि भगवान् श्रीकृष्णसँग प्रेम गर्नहुँदैन । हामीले भगवान्‌सँग त्यस्तो व्यापारिक आदानप्रदान गर्नहुँदैन । भगवान् श्रीकृष्णले हामीबाट शुद्ध प्रेम वा अहैतुकी प्रेम चाहनुहुन्छ ।

जब यशोदा माताले हातमा डोरी लिएर आफूलाई बाँध्न आएको देख्नुभयो अनि भगवान् श्रीकृष्ण तुरुन्त डराएर सोच्नु भयो “अहो ! मलाई आमाले बाध्न लाग्नुभयो ।” अनि उहाँ रुन लाग्नुभयो । अनि, आँसुले उहाँको आँखाको गाजललाई पखाल्यो । आफ्नी आमालाई आदर भावको दृष्टिले हेर्दै उहाँले यसरी याचना गर्नुभयो “हो आमा, मैले अपराध गरें कृपया, मलाई क्षमा गर्नुहोस् ।” अनि उहाँले तुरुन्त शिर निहुऱ्याउनुभयो । कुन्तीदेवीले यो दृश्यको अति प्रशंसा गरिन् किनभने यो पनि भगवान् श्रीकृष्णको एउटा अर्को पूर्णता हो । हुनत उहाँ

भगवान् हुनुहुन्थ्यो तैपनि उहाँले आफूलाई माता यशोदाको वशमा वा नियन्त्रणमा राख्नुभएको थियो । भगवद्गीता (७.७) मा भगवान्ले भन्नुभएको छ – **मत्तः परतरं नान्यत किञ्चिदस्ति धनञ्जय** – "हे अर्जुन ! मभन्दा श्रेष्ठ अरू कोही पनि छैनन् ।" उहाँ भन्दा श्रेष्ठ अरू कोही पनि छैनन् । त्यस्ता भगवान् पनि आफ्नी आमा यशोदाका अघि शिर झुकाएर "हे माता ! म अपराधी हुँ" भनेर स्वीकार गर्नुहुन्छ ।

भगवान् श्रीकृष्ण ज्यादै नै डराउनुभएको देखेर माता यशोदा पनि चिन्तित भइन् । वास्तवमा भगवान् श्रीकृष्णलाई दण्ड दिएर कष्ट पुऱ्याउन उनले पनि चाहेकी थिइनन् र उनको त्यस्तो उद्देश्य पनि थिएन । यदि कुनै बच्चाले धेरै उत्पात गरेर दुःख दियो भने त्यसलाई उसकी आमाले एउटा स्थानमा बाँधेर राख्ने प्रथा अहिले पनि भारतमा विद्यमान छ । यस्तो कार्य सामान्य भएको हुनाले यशोदाले पनि त्यही गर्न चाहेकी थिइन् ।

परम पुरुष भगवान् श्रीकृष्णले एउटा पूर्ण बालकको जस्तो अभिनय गर्नु कति महानता हो भनेर यस दृश्यलाई शुद्ध भक्तहरूले अति नै प्रशंसा गर्नेगर्दछन् । भगवान् श्रीकृष्णले जब बच्चाले खेलेजस्तै गरेर खेल्नुहुन्छ, उहाँले पूर्ण बालकले जस्तै खेल्नुहुन्छ । जब सोह्र हजार पत्नीसँग पतिको अभिनय गर्नुहुन्छ, त्यहाँ पनि पूर्ण पतिको अभिनय गर्नुहुन्छ, जब गोपीसँग प्रेमीको अभिनय गर्दा त्यहाँ पनि पूर्णप्रेमीको अभिनय गर्नुहुन्छ । त्यसरी नै, गोप वा गाई चराउने मित्रसँगको अभिनय पनि पूर्णमित्रको जस्तै गर्नुहुन्छ ।

सम्पूर्ण गोपहरू भगवान् श्रीकृष्णको आश्रयमा बस्दथे । एक दिन तिनीहरूले तालवनबाट केही फल खान चाहन्थे तर त्यो वनमा गर्दभासुर नाम गरेको राक्षस बस्दथ्यो र उसले कसैलाई पनि त्यस वनभित्र प्रवेश गर्न दिँदैनथ्यो । त्यसैले, भगवान् श्रीकृष्णका गाई चराउने मित्रहरूले भने, "हे कृष्ण ! यदि तिमीले कुनै प्रबन्ध गर्न सक्दछौ भने हामीलाई त्यस वनका फलको स्वाद लिन देऊ ।" भगवान् श्रीकृष्णले हुन्छ भन्नुभयो । जहाँ त्यो राक्षस अन्य राक्षससहित बस्दथ्यो र तिनले गधाको रूप धारण गरेका थिए । जब त्यो गधाको रूप धारण गरेको राक्षसले आफ्ना पछिल्ला खुट्टाले भगवान् श्रीकृष्ण बलरामलाई हान्न लाग्यो भगवान् बलरामले त्यसको एउटा खुट्टा समातेर वृक्षमा फ्याँकिदिनुभयो र त्यो राक्षस त्यहीँ मऱ्यो । भगवान् श्रीकृष्ण बलरामले त्यसैगरेर, अन्य राक्षसहरूलाई पनि मार्नुभयो । अनि उहाँका मित्रहरू उहाँप्रति ज्यादै नै कृतज्ञ भए ।

एउटा अर्को समयमा गोपहरू जङ्गली आगोमा घेरिए । उनीहरूले भगवान् श्रीकृष्ण वाहेक अन्य कसैलाई पनि जान्दैनथे । त्यसैले, तुरुन्तै भगवान्लाई सहयोगको लागि पुकार गरे भगवान् श्रीकृष्ण पनि तयार भएर "हुन्छ" भन्नुभयो अनि सम्पूर्ण जङ्गली आगो पिउनु भयो । त्यहाँ धेरै असुरहरू थिए । तिनले ती बालकहरूलाई आक्रमण गर्दथे अनि ती बालकहरूले दिनहुँ आफ्नो घर फर्केपछि (भगवान्ले आफूलाई कसरी बचाउनुभयो भनेर) आफ्नी आमाहरूलाई "आमा कृष्ण धेरै नै अद्भूत छन्" भनेर भन्दथे । आमाले पनि "हो, तिम्रा कृष्ण अद्भूत छन्" भन्दथिन् किनभने ती आमालाई भगवान् श्रीकृष्ण परम पुरुष वा ईश्वर हनुहुन्छ भन्ने नै थाहा थिएन । उनीहरूलाई केवल भगवान् श्रीकृष्ण अद्भूत हुनुहुन्छ भन्ने मात्र थाहा थियो । उनीहरूले जति भगवान् श्रीकृष्णका अद्भूत कार्य देख्दथे, त्यति नै उनीहरूको उहाँप्रतिको प्रेम बढ्दथ्यो । "उहाँ कुनै देवता हुन सक्नुहुन्छ" भनेर उनीहरू सोच्दथे । जब भगवान् श्रीकृष्णका पिता महाराज नन्द आफ्ना मित्रहरूसँग कुरा गर्दथे, उनका मित्रहरुले भगवान् श्रीकृष्णका बारेमा कुरा गर्दै "हे महाराज नन्द ! तिम्रो छोरो कृष्ण अद्भूत नै छ" भन्दथे अनि महाराज नन्दले पनि "हो मैले पनि त्यस्तै देखिरहेको छु । हुन सक्दछ, ऊ कुनै देवता नै हो ।" उनीहरूले निश्चित गरेर भन्न सक्दैनथे त्यसैले, "हुन सक्दछ" भन्दथे ।

त्यसैले, वृन्दावनवासहीरूले को भगवान् हो र को होइन कुनै वास्ता गर्दैनथे । उनीहरू केवल भगवान् श्रीकृष्णलाई प्रेम गर्दथे । कृष्ण भगवान् हुनुहुन्छ वा हुनुहुन्न भनेर पहिला विश्लेषण गर्न खोज्ने व्यक्ति उच्चस्तरको भक्त हुन सक्दैन । जसले भगवान् श्रीकृष्णसँग स्वतःस्फूर्त भक्ति गर्दछ, त्यो नै उच्चकोटीको भक्त हो । हामीले भगवान् श्रीकृष्णको बारेमा विश्लेषण कसरी गर्न सक्दछौं ? उहाँ असीमित वा अनन्त हुनुहन्छ त्यसैले, विश्लेषण गर्न असम्भव नै छ । हाम्रा अनुभूति सीमित छन् । हाम्रा इन्द्रियका शक्ति सीमित छन् । त्यसैले, हामीले भगवान् श्रीकृष्णका बारेमा अध्ययन कसरी गर्न सक्दछौं ? त्यसो गर्न कुनै पनि अवस्थामा सम्भव छैन । भगवान् श्रीकृष्णले कुनै सीमासम्म आफूलाई प्रस्तुत गर्नुहुन्छ, त्यो नै पर्याप्त हुन्छ ।

कल्पनाको अनुमानद्वारा भगवान्लाई खोज्ने प्रयास गरिने मायावादी दार्शनिकहरूलाई हामीले मन पराउनुहुँदैन । उनीहरू –"**नेतिनेति** अर्थात् यो पनि भगवान् होइन, त्यो पनि भगवान् होइन" भन्दछन् । तर भगवान् को हो त ? उनीहरूलाई थाहा नै हुँदैन । भौतिक वैज्ञानिकहरूले पनि परम कारण वा

अन्तिम कारण के हो त भनेर खोज्ने प्रयास गर्दछन् तर तिनीहरूको विधि पनि त्यस्तै "यो पनि होइन, त्यो पनि होइन" भन्ने नै छ । उनीहरू जति अघि बढ्दै जान्छन् झन् "यो पनि होइन, त्यो पनि होइन" भन्ने नै पाउँदछन् । अन्तिम परम कारण के हो त भन्ने नै खोज्न सक्दैनन् र त्यो प्राप्त गर्न सम्भव पनि छैन ।

भगवान् श्रीकृष्णलाई खोज्ने कुरा नै नगरौं । भौतिकवादी वैज्ञानिकहरूले भौतिक वस्तुलाई पनि ठीकसँग जान्न सक्दैनन् । उनीहरू चन्द्रमामा जाने प्रयास गरिरहेका छन् तर उनीहरूलाई त्यो वस्तु के हो भन्ने जानकारी नै छैन । यदि उनीहरूले चन्द्रमा के हो भनेर जान्ने भए उनीहरू पुनः यहाँ किन फर्केर आउँदथे ? यदि उनीहरूले चन्द्रमा के हो भनेर पूर्णरूपले जानेका भए उनीहरू त्यहीं नै बस्दथे । विगत बीस वर्षदेखि उनीहरू चन्द्रमामा जाने र त्यहाँ बस्ने प्रयास गरिरहेका छन् तर उनीहरू "यो पनि होइन, त्यो पनि होइन" भनेर हेरिरहेका छन् । अनि भन्दछन् – "त्यहाँ कुनै जीवको अस्तित्व नभएका हुनाले हामी त्यहाँ बस्न सम्भव नै छैन ।" त्यसैले, चन्द्रमामा के छैन त्यसको विवरण दिन सक्दछन् तर चन्द्रमामा के छ भनेर उनीहरू भन्न सक्दछन् ? अहँ, उनीहरूलाई केही पनि थाहा छैन । यो ग्रह हो कि तारा हो भन्ने पनि थाहा छैन ।

वैदिक साहित्यअनुसार चन्द्रमालाई एउटा तारा मानिन्छ तर वैज्ञानिकहरूले भने सबै तारा सूर्य हुन् भन्दछन् । भगवद्गीताअनुसार चन्द्रमाको जस्तो प्रकृति छ, ताराको पनि त्यस्तै छ । भगवद्गीता (१०.२१) मा भगवान् श्रीकृष्णले भन्नुहुन्छ – **नक्षत्राणां अहं शशी** – ताराहरूमा म चन्द्रमा हुँ । त्यसैले, चन्द्रमा अन्य ताराजस्तै नै छ । चन्द्रमाको स्वभाव कस्तो छ ? यो चम्किलो छ किनभने यसले सूर्यको प्रकाशलाई परावर्तन गर्दछ । वैज्ञानिकहरूले ताराहरू नै धेरै सूर्य हो भन्दछन् तर हामी त्यस कुरामा सहमत छैनौं । वैदिक हिसाबअनुसार असङ्ख्य सूर्य छन् तर प्रत्येक ब्रह्माण्डमा केवल एउटा मात्र सूर्य हुन्छ भनेर भनिन्छ ।

यस ब्रह्माण्डमा हामीले जे देखेका छौं । त्यो अपूर्ण देखेका छौं । किनभने हाम्रो ज्ञान नै पूर्ण छैन । कति तारा र ग्रह छन् भनेर हामी गन्न पनि सक्दैनौं । हामीले हाम्रो चारैतिरका भौतिक वस्तुलाई पनि पूर्ण तरिकाले बुझ्न सक्दैनौं भने यो सम्पूर्ण ब्रह्माण्डको सृष्टि गर्ने परमेश्वरका बारेमा कसरी जान्न सक्दछौं ? त्यो सम्भव पनि छैन त्यसैले, ब्रह्मसंहिता (५.३४) मा भनिएको छ –

**पन्थास्तु कोटिशतवत्सरसम्प्रगम्यो**
**वायोरथापि मनसो मुनिपुंगवानाम् ।**
**सोऽप्यस्ति यत्प्रपदसीम्न्यविचिन्त्यतत्त्वे**
**गोविन्दमादिपुरुषं तमहं भजामि ॥**

अन्तरिक्ष असीमित छ, त्यसैले ब्रह्मसंहिताले सुझाव दिएको छ - यदि कुनै व्यक्ति वायुको वेग वा मनको वेगमा अन्तरिक्षयानमा बसेर करोडौं वर्ष यात्रा गर्दछ । हामी सबैलाई थाहा छ, मनको वेग एक सेकेन्डको दसहजार भागमा पनि त्यसले हामीलाई करोडौं माइल परसम्म लैजान सक्दछ । यदि हामीले करोडौं माइल पर कुनै वस्तु देख्यौं भने पनि मनले हामीलाई तुरुन्त त्यहाँ पुऱ्याइदिन्छ । **तैपनि मुनिपुंगवानाम्** – महान् वैज्ञानिक र विचारका व्यक्तिबाट निर्मित अन्तरिक्षयानमा चढेर यात्रा गर्दा पनि के त्यो पूर्ण हुन सक्ला ? हुन सक्दैन । ब्रह्म संहिता भन्दछ – **सोऽप्यस्ति यत्प्रपदसीम्न्यविचिन्त्यतत्त्वे** । तैपनि यो सृष्टि हाम्रा लागि बुझ्न नसकिने र पार पाउन नसकिने नै हुन्छ । यो सम्पूर्ण वस्तु भगवान् श्रीकृष्णले सृष्टि गर्नुभएको हो । त्यसैले, हामीले भगवान् श्रीकृष्णका बारेमा कसरी अध्ययन गर्न वा बुझ्न सक्दछौं ? भगवान् श्रीकृष्णले सृष्टि गर्नुभएका वस्तुका बारेमा त बुझ्न सकेका छैनौं भने भगवान् श्रीकृष्णलाई कसरी बुझ्न सक्दछौं ? त्यो कुनै पनि अवस्थामा सम्भव छैन ।

त्यसैले, भक्तहरूका लागि वृन्दावनमा हुने भगवान् नै पूर्ण अवस्था हो । वृन्दावनका निवासीहरूलाई भगवान् श्रीकृष्णका बारेमा बुझ्ने कुनै आवश्यकता नै छैन । उनीहरू त केवल भगवान् श्रीकृष्णसँग अहैतुकी वा बीना सर्तको प्रेम गर्न चाहन्छन् । "भगवान् श्रीकृष्ण परमेश्वर हुनुहुन्छ । त्यसैले, म उहाँलाई प्रेम गर्दछु" भनेर उनीहरूले सोच्दा पनि सोच्दैनन् । वृन्दावनमा भगवान् श्रीकृष्णले आफू परमेश्वर हुँ भनेर अभिनय पनि गर्नु हुन्न त्यहाँ उहाँले केवल एउटा सामान्य गाई गोठालाले गर्ने अभिनय गर्नुहुन्छ तर कहिलेकाहीं भने आफू भगवान् हुँ भन्ने कुरा पनि सिद्ध गर्नुहुन्छ तर त्यहाँका भक्तहरू भने यस्तो कुरा जान्न कुनै वास्ता नै गर्दैनन् ।

कुन्तीदेवी वृन्दावन निवासी होइनन् । उनी वृन्दावनभन्दा बाहिरको हस्तिनापुरकी निवासी हुन् । वृन्दावनभन्दा बाहिरका भक्तहरूले वृन्दावनका भक्तहरू महान् छन् भन्ने सोच्दछन् भने वृन्दावनका भक्तहरूले भगवान् श्रीकृष्ण कति महान् हुनुहुन्छ भन्ने कुरा पनि सोच्दैनन् । ती दुई भक्तहरूबीच यो नै

अन्तर छ। त्यसैले, हाम्रो चिन्ताको एक मात्र विषय भनेको भगवान् श्रीकृष्णसँग प्रेम गर्ने हुनुपर्दछ। हामी भगवान् श्रीकृष्णसँग जति धेरै प्रेम गर्दछौं, त्यति नै बढी पूर्ण बन्दछौं। हामीलाई भगवान् श्रीकृष्णका बारेमा धेरै जान्ने आवश्यकता छैन। साथै उहाँले कसरी सृष्टि गर्नुहुन्छ भन्ने बारेमा जान्ने आवश्यकता नै छैन किनभने भगवान् श्रीकृष्ण स्वयम्ले यस विषयमा भगवद्गीतामा वर्णन गर्नुभएको छ। त्यसैले, हामीले त्यसभन्दा बढी जान्ने प्रयास गर्न आवश्यक नै छैन। भगवान् श्रीकृष्णका बारेमा अरू बढी जान्नका लागि चिन्ता गर्नु आवश्यक नै छैन र त्यसो गर्न सम्भव पनि छैन। हामीले केवल भगवान् श्रीकृष्णप्रतिको अहैतुकी प्रेम बढाउनुपर्दछ। त्यसबाट नै जीवनले पूर्णता प्राप्त गर्दछ।

***

# १५. जन्म-मृत्यु भन्दा पर

**केचिदाहुरजं जातं पुण्यश्लोकस्य कीर्तये ।**
**यदोः प्रियस्यान्ववाये मलयस्येव चन्दनम् ॥**

कसैकसैले (हजुर) अजन्मा भएर पनि पुण्यात्मा राजाको कीर्ति बढाउन जन्मनुभएको हो भन्दछन्, कसैले हजुर आफ्ना परम भक्त राजा यदुलाई प्रसन्न गर्न जन्मनुभएको हो भन्दछन् । जसरी चन्दन मय पर्वतमा उत्पन्न हुन्छ, त्यसरी नै हजुर उनको कुलमा उत्पन्न हुनुभएको हो ।

**–(श्रीमद्भागवत् १.८.३२)**

यस जगत्मा भगवान्को प्राकट्य नै मोहित र भ्रमित गर्ने हुन्छ । त्यसैले, यस्ता अजन्माको जन्मका बारेमा विभिन्न मतहरू छन् । भगवद्गीतामा भगवान्ले भन्नुभएको छ– हुनत उहाँ सम्पूर्ण सृष्टिका स्वामी वा ईश्वर हुनुहुन्छ र अजन्मा पनि हुनुहुन्छ तैपनि उहाँले यस जगत्मा जन्म लिनुहुन्छ । त्यसैले, यस्ता अजन्मा भगवान्को जन्मको बारेमा अस्वीकार गर्न सकिँदैन किनभने यस बारेमा भगवान् स्वयम्ले यो सत्यलाई स्थापित गर्नुभएको छ । तैपनि उहाँले किन जन्म लिनुपर्दछ र भन्ने कुरामा भक्तहरुका विभिन्न मत छन् । त्यस सन्दर्भमा भगवद्गीतामा घोषणा नै गरिएको छ । धर्मको पुनः स्थापना गर्न, पुण्यात्माहरूको रक्षा गर्न र पापीहरूको संहार गर्न भगवान् आफ्नो अन्तरङ्गा शक्तिद्वारा प्रकट हुने गर्नुहुन्छ र यस्ता अजन्माको प्राकट्यको उद्देश्य यो नै हो । तैपनि, कसैले भने भगवान्, पुण्यआत्मा राजा युधिष्ठिरको कीर्ति बढाउन आउनुभएको हो भन्दछन् । निश्चय नै भगवान् श्रीकृष्णले सम्पूर्ण विश्वको कल्याणका लागि पाण्डवको राज्य स्थापित गर्न चाहनुभएको थियो किनभने जब कुनै पुण्यात्मा राजाले राज्य गर्दछ अनि संसारका सबै व्यक्ति सुखी हुन्छन् र जब पापी राजाले राज्य गर्दछ अनि सबै व्यक्ति सुखी हुँदैनन् । कलियुगमा धेरैजसो राजाहरू पापी हुन्छन् त्यसैले, जनता लगातार दुःखी भइरहनेछन् ।

प्रजातान्त्रिक व्यवस्थामा पापी नागरिकहरू स्वयम्ले नै आफ्ना त्यस्तै पापी प्रतिनिधिहरूलाई चुनेर पठाउँदछन् । त्यसैले, उनीहरूले आफ्नो दुःखको लागि कसैलाई पनि दोष दिन पाउँदैनन् । महाराज नल पनि महान् पुण्यात्मा राजाका रूपमा प्रख्यात थिए तर उनको भगवान् श्रीकृष्णसँग कुनै सम्बन्ध नै थिएन तर महाराज युधिष्ठिरको भने थियो । त्यसैले, यहाँ महाराज युधिष्ठिरको प्रशंसा भगवान् श्रीकृष्णद्वारा गरिएको हो भन्ने तात्पर्य मिल्दछ र त्यसरी नै भगवान् यदुवंशमा प्रकट भएर त्यस वंशको पनि कीर्ति बढाउनुभयो । त्यसैले, भगवान् यादव, यदुवीर, यदुनन्दन नामले प्रख्यात हुनुहुन्छ । हुनत भगवान् यस्ता उपाधीबाट सधैँ स्वतन्त्र हुनुहुन्छ । भगवान् मलय पर्वतमा उम्रने चन्दनको रुख समान हुनुहुन्छ । रुखहरू त यत्रतत्र उम्रन्छन् तर चन्दनको रुख केवल मलय पर्वतमा मात्र उम्रन्छ । त्यसैले, चन्दन र मलयको परस्पर सम्बन्ध छ । त्यसैले, भगवान् सूर्य जस्तै अजन्मा भएर पनि जसरी सूर्य क्षितिजमा देखा पर्दछन् । त्यसरी नै भगवान् पनि देखा पर्नुहुन्छ । सूर्य पूर्णक्षितिजमा देखा परे पनि ऊ पूर्णक्षितिजको मात्र सूर्य हुँदैन, त्यसरी नै भगवान् पनि कुनै एउटा पुत्र मात्र हुन सक्नुहुन्न बरु उहाँ सबैका पिता हुनुहुन्छ ।

भगवद्गीता (४-६) मा भगवान्ले भन्नुभएको छ –

**अजोऽपि सन्नव्ययात्मा भूतानामीश्वरोऽपि सन् ।**
**प्रकृतिं स्वामधिष्ठाय सम्भवाम्यात्ममायया ॥**

“हुनत म अजन्मा र अविनाशी हुँ । हुनत म सम्पूर्ण जीवको स्वामी हुँ तैपनि प्रत्येक युगयुगमा म आफ्नो आदि दिव्यरूपमा प्रकट हुनेगर्दछु ।”

भगवान् श्रीकृष्ण अजन्मा हुनुहुन्छ र हामी पनि अजन्मा हौं तर हामी यस भौतिक शरीरमा अल्झिएका छौं । भगवान् भने यसरी अल्झिनु हुँदैन । हामीबिच यही नै भिन्नता छ । त्यसैले, हामीले हाम्रो अजन्मारूपी स्थितिलाई कायम राखीराख्न सक्दैनौं । त्यसैले, हामीले जन्म लिनपर्दछ र मृत्युपश्चात् बारम्बार अर्को शरीर धारण गरिरहनुपर्दछ । साथै, अर्को जन्म कस्तो र कुन शरीर प्राप्त हुने हो, त्यो पनि निश्चित छैन । यही जीवनमा पनि हामीले एकपछि अर्को शरीरलाई स्वीकार गर्नपरेको छ । एउटा शिशुले आफ्नो बच्चाको शरीरलाई त्यागेर बालकको शरीर धारण गर्दछ, अनि बालकको शरीर त्यागेर युवा शरीर ग्रहण गर्दछ त्यसपछि युवा शरीर त्यागेर वृद्ध शरीर धारण गर्दछ, त्यसैले, यदि कसैले आफ्नो वृद्ध शरीर त्याग गर्दछ भने उसले अर्को शरीर

धारण गर्दछ त्यो पनि शिशुको शरीर धारण गर्नुपर्दछ भन्ने स्वभाविक निष्कर्ष निकाल्न सकिन्छ ।

यो भौतिक जगत्को प्राकृतिक चक्र हो र यो ऋतुको परिवर्तन भएजस्तै नै हो । जसरी वसन्त ऋतुपछि ग्रीष्म, ग्रीष्मपछि शिशिर, शिशिरपछि हेमन्त र फेरि बसन्त ऋतु आउँदछ । त्यसैगरेर, दिनपछि रात र रातपछि दिन आउँदछ । जसरी यी चक्र अनुसार एकपछि अर्को परिवर्तन भइरहन्छ, त्यसरी नै हामीले पनि एकपछि अर्को शरीर परिवर्तन गरिरहन्छौं । त्यसैले, अहिलेको यो वर्तमान शरीरलाई त्याग गरेपछि हामीले अर्को शरीर प्राप्त गर्दछौं भन्ने स्वाभाविक निष्कर्ष निक्लन्छ । (**भूत्वा भूत्वा प्रलीयते**)

यो निष्कर्ष अत्यन्त तर्कसङ्गत र शास्त्रद्वारा समर्थित पनि छ र यसको पुष्टि सबैभन्दा महान् अधिकारी स्वयम् भगवान् श्रीकृष्णले पनि गर्नुभएको छ । त्यसैले, हामीले यो निष्कर्षलाई किन स्वीकार नगर्ने ? यदि कसैले यो कुरालाई स्वीकार गर्दैन र मृत्युपछि जीवन वा जन्म हुँदैन भन्ने सोच्दछ भने त्यो मूर्ख नै हो ।

मृत्युपछि जन्म हुने निश्चित छ र बारम्बार हुने जन्ममृत्युको चक्रबाट आफूलाई मुक्त गर्ने वा अमरत्व प्राप्त गर्ने अवसर पनि छ । हुनत हामी अनन्त कालदेखि नै एउटा शरीर त्यागेर अर्को शरीर धारण गर्ने कार्यमा नै अभ्यस्त भइसकेका छौं । त्यसैले, त्योबाहेकको शाश्वत नित्य जीवन पनि हुन्छ भन्ने विषयमा सोच्न पनि हामीलाई कठिन छ । यस भौतिक जगत्को जीवन यति धेरै कष्टकर छ, त्यसैले यदि शाश्वत जीवन प्राप्त गरे त्यो जीवन यति धेरै कष्टकर हुन्छ होला भनेर मानिसले सोच्दछ । उदाहरणका लागि, यदि कुनै बिरामी व्यक्ति जो बिछ्यौनामा परेको छ, जसले खाना पनि त्यही सुतेर खान्छ दिसा, पिसाब पनि बिछ्यौनामा नै गर्दछ, औषधी पनि अति नै तीतो र नमिठो खानु पर्दछ र हिँड्डुल पनि गर्न सक्दैन भने उसले आफ्नो जीवन असह्य भएको देखेर आत्म हत्या गर्नेसम्म पनि सोच्न सक्दछ । त्यसैगरेर, यो भौतिक जीवन यति दुःखमय र कष्टकर छ । त्यसैले, मानिसले आफ्नो जीवनलाई रोक्न र प्रत्येक वस्तुलाई शून्य बनाउन आत्तिएर शून्यवाद वा निर्विशेषवादलाई स्वीकार गर्दछ । वास्तवमा शून्य बन्न सम्भव नै छैन र त्यसो हुनु आवश्यक पनि छैन हामी यस भौतिक अवस्थामा भएका हुनाले दुःख भोगिरहेका छौं तर यदि यस भौतिक अवस्थाबाट बाहिर पुग्यौं भने हामीले सही जीवन र शाश्वत जीवन प्राप्त गर्न सक्दछौं ।

भगवान् श्रीकृष्ण अज अर्थात् जन्ममृत्युरहित हुनुहुन्छ । हामी उहाँका अंश भएका हुनाले हामी पनि अज नै हौं । हामी अन्य पनि कसरी नै हुन सक्दछौं र ? यदि मेरा पिता सुखी हुनुहुन्छ भने म उहाँको पुत्र भएका हुनाले म कसरी दुःखी हुन सक्दछु ? मैले मेरो पिताको सम्पत्तिको सुखभोग मेरा पिताले समान नै गर्नुपर्दछ भन्ने स्वाभाविक निष्कर्ष निकाल्न सक्दछु । त्यसैगरेर, भगवान् श्रीकृष्ण सम्पूर्ण शक्तिले युक्त, सर्व सुन्दर, सर्वज्ञानले युक्त र सबै कुरामा सम्पूर्ण हुनुहुन्छ तर म भने पूर्ण नहुन सक्दछु तर म भगवान्को अंश भएको हुनाले थोरै मात्रामा भए पनि भगवान्मा भएका सम्पूर्ण गुण मसँग छन् ।

भगवान्को मृत्यु हुँदैन । त्यसैले, म पनि मर्दिन र त्यो नै मेरो पद वा स्थिति हो । यो कुरा भगवद्गीतामा उल्लेख गरिएको छ – **न जायते म्रियते वा कदाचित्** । आत्माको बारेमा वर्णन गर्दै भगवान् श्रीकृष्णले भन्नुभएको छ – आत्माले कहिल्यै पनि जन्म लिंदैन (**न जायते**) । यदि कसैको जन्म नै हुँदैन भने मृत्यु कसरी हुन सक्दछ ? त्यसैले, आत्माको मृत्यु हुने कुरै भएन (**म्रियते वा**) । मृत्यु भनेको त्यसका लागि हो, जसले जन्म लिएको हुन्छ । यदि कसैको जन्म नै भएको छैन भने त्यसको मृत्यु पनि हुँदैन ।

हामीले त्यो कुरा नै जानेका छैनौं, त्यो नै हाम्रो दुर्भाग्य हो । हामीले धेरै वैज्ञानिक अनुसन्धान गरेका छौं तर जीव एउटा आत्मा हो र त्यसको न जन्म हुन्छ, न मृत्यु नै हुन्छ भन्ने कुरा भने जान्न सकेका छैनौं, त्यो नै हाम्रो अज्ञानता हो । आत्मा भनेको नित्य, शाश्वत र सनातन हुन्छ - (**नित्यः शाश्वतोऽयं पुराणो**) शरीर नष्ट भए पनि आत्मा भने मर्दैन, (**न हन्यते हन्यमाने शरीर**) अर्को शरीर ग्रहण गर्दछ, यसलाई नै भवरोग भनिन्छ ।

भगवान् श्रीकृष्ण परमजीव (**नित्यो नित्यानां चेतनश्चेतनानां**) हुनुहुन्छ र हामी पनि निश्चय नै भगवान्समान नै छौं तर भगवान् श्रीकृष्ण विभु अर्थात् असीमित हुनुहुन्छ भने हामी अणु सीमित छौं । त्यही नै हामी दुईमा अन्तर छ । गुणको दृष्टिले भने हामी भगवान् श्रीकृष्णसमान नै छौं । त्यसैले, भगवान् श्रीकृष्णसँग जेजे गुणहरू छन् ती सबै गुण हामीसँग पनि छन् । उदाहरणका लागि – भगवान् श्रीकृष्णसँग विपरीत लिङ्गीसँग प्रेम गर्ने गुण छ, त्यसैले हामीसँग पनि त्यो गुण छ । प्रेमको शुभ प्रारम्भ नै राधारानी र भगवान् श्रीकृष्णसँगको दिव्य प्रेमबाट भएको छ । हामीहरू पनि त्यस्तै दिव्य प्रेम गर्ने इच्छा गर्दछौं तर भौतिक नियममा बाँधिएका हुनाले हाम्रो प्रेममा व्यवधान आइरहन्छ । यदि यस

व्यवधानलाई पार गर्न सक्यौं भने हामीले पनि राधारानी र भगवान् श्रीकृष्णको जस्तै दिव्य प्रेम गर्न सक्दछौं । त्यसैले, हाम्रो लक्ष्य भनेको परमधाम फर्कनु हो वा भगवान् श्रीकृष्णको समीप जानु हो किनभने त्यहाँ हामीले नित्य शरीर प्राप्त गर्न सक्दछौं ।

कुन्तीले भनेकी छिन् – **केचिदाहुरजं जातम्** – परमनित्य र परम अजन्माले अहिले जन्म लिनुभएको छ । हुनत भगवान् श्रीकृष्णले जन्म लिनुभएको छ तर उहाँको जन्म हाम्रो जन्मजस्तो भने हुँदैन र यो कुरा हामीले जान्नुपर्दछ । भगवद्गीता (४.९) मा भगवान्ले भन्नुभएको छ–

**जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।**
**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ॥**

"हे अर्जुन ! जसले मेरो आविर्भाव र कर्मको दिव्य स्वभावलाई जान्दछ, उसले यो शरीर त्याग गरेपछि पुनः ऊ यस संसारमा जन्म लिनुपर्दैन उसले मेरो सनातन धाम प्राप्त गर्दछ ।"

श्रीमद्भागवत्मा वर्णन गरिएको छ, जब भगवान् श्रीकृष्ण सर्वप्रथम प्रकट हुनु भयो त्यससमय उहाँ देवकीकागर्भबाट जन्मनुभएन । उहाँ त चार हात भएका भगवान् श्रीकृष्णका रूपमा प्रकट हुनुभयो । त्यसपछि, देवकीको काखमा एउटा सानो शिशु बन्नु भयो । त्यसैले, भगवान् श्रीकृष्णको जन्म दिव्य हुन्छ भने हाम्रो जन्म प्रकृतिको नियम अनुसार बलपूर्वक हुने गर्दछ । भगवान् श्रीकृष्ण प्रकृतिको नियमको अधीनमा हुनुहुन्न बरु प्रकृतिको नियम भगवान्को अधीनमा हुन्छ (**मयाध्यक्षेण प्रकृतिः सूयते सचाराचरम्**) । प्रकृतिले भगवान् श्रीकृष्णको आदेशअनुसार कार्य गर्दछिन् भने हामीले प्रकृतिको अधीनमा रहेर उनको आदेश अनुसार कार्य गर्दछौं । भगवान् श्रीकृष्ण प्रकृतिका स्वामी हुनुहुन्छ भने हामी प्रकृतिका दास हौं । त्यसैले, कुन्तीदेवीले भनेकी छिन् – **केचिदाहुः** – "कसैले भन्न सक्दछन् अजन्मा भगवान्ले जन्म लिनुभयो ।" यस्तो सुन्दा भगवान्ले पनि हामीले जस्तै गरेर जन्म लिनुभएको होला भन्ने बुझिन्छ तर वास्तवमा उहाँले त्यसोगरेर जन्म लिनुभएको भने होइन । त्यसैले, कुन्तीदेवीले स्पष्ट शब्दमा भन्दछिन् – **केचिदाहुः** – कुनै मूर्खले भन्न सक्दछ "भगवान्ले जन्म लिनुभयो" भनेर । भगवद्गीता (९.११) मा भगवान् श्रीकृष्णले स्वयम् भन्नुभएको छ – **अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम्** – "हुनतः म मनुष्यरूपमा प्रकट भएको छु । त्यसैले, दुष्टहरूले मलाई अन्य सामान्य व्यक्तिजस्तो ठान्दछन्" तर

**परं भावमजानन्तः** मानिसको रूपमा भगवान्‌ले जन्म किन लिनुभयो भन्ने रहस्यका बारेमा उनीहरूले केही पनि जान्दैनन् ।

भगवान् श्रीकृष्ण सर्वत्र हुनुहुन्छ। भगवान् सबै प्राणीहरूका हृदयमा निवास गर्नुहुन्छ (**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति**) । यसरी भगवान् हामीभित्र नै हुनुहुन्छ र उहाँ सर्वशक्तिमान पनि हुनुहुन्छ भने उहाँलाई हाम्राअघि प्रकट हुन के कठिनाई नै हुन्छ र ? जब महान् भक्त महाराज ध्रुव चार हात धारण गर्नुभएका भगवान् श्रीकृष्णको ध्यानमा एकाग्र भएका थिए । तत्काल उनको ध्यान भङ्ग भयो र उनले आफ्नोअघि आफूले जुन रूपको ध्यान गरेका थिए, सोहीरूपलाई देखे । के यसरी प्रकट हुन भगवान् श्रीकृष्णलाई कठिनाई भयो र ? अहँ, निश्चय नै भएन । त्यसरी नै भगवान्‌लाई देवकीको अघि चार हात धारण गरेर प्रकट हुन कठिनाइ भएन । त्यसैले, भगवान् श्रीकृष्णले भन्नुहुन्छ – **जन्म कर्म च मे दिव्यम्** – "मेरा जन्म र कर्म दिव्य हुन्छन् भन्ने कुरा मानिसहरूले बुझ्नुपर्दछ ।" कुन्तीदेवीलाई भने यस्तो ज्ञान थियो । मूर्खहरूलाई भने भगवान् श्रीकृष्ण जन्मनुभएको प्रतीत हुन्छ तर वास्तवमा उहाँ अजन्मा हुनुहुन्छ भन्ने कुरा कुन्तीलाई थाहा थियो ।

तर, भगवान् श्रीकृष्णलाई यस्तो जन्म लिनेजस्ता लीला किन गर्नुपर्दथ्यो र ? कुन्तीदेवीले उत्तरमा भन्दछिन् – **पुण्यश्लोकस्य कीर्तये** – जुन व्यक्ति अत्यन्त पवित्र छ र आध्यात्मिक ज्ञानमा धेरै माथि उठेको छ, त्यस्ता व्यक्तिको कीर्ति बढाउनका लागि (भगवान्‌को जन्म हुनेगर्दछ) हो । भगवान् श्रीकृष्ण देवकीको पुत्ररूपमा जन्म लिएर आफ्नी भक्तिनी देवकीको कीर्ति बढाउनुभयो । यशोदाको पुत्र भएर यशोदाको महिमा बढाउनु भयो । त्यसैगरेर यदु वंशमा उत्पन्न भएर आफ्ना महान् भक्त महाराज यदुको कीर्ति बढाउनुभयो । त्यही कारणले भगवान् श्रीकृष्ण अहिले पनि यादव वा यदुवंशी भनेर प्रख्यात हुनुहुन्छ। भगवान् श्रीकृष्ण कुनै पनि परिवार वा कुलमा जन्म लिन बाध्य हुनुहुन्न तर कुनै पनि परिवार वा कुलले गरेको भक्तिको कारणले गर्दा त्यस परिवार वा कुलको कीर्ति बढाउन त्यस परिवार वा कुलमा जन्म लिने गर्नुहुन्छ। त्यसैले, भगवान्‌को जन्मलाई **'दिव्यम्'** भनिन्छ ।

भगवान् यस जगत्‌मा जन्म लिन बाध्य हुनुहुन्न तर हामी भने वाध्य छौं । भगवान् श्रीकृष्णको जन्म र हाम्रो जन्ममा त्यही भिन्नता छ । हामी हाम्रा कर्मअनुसार योग्य छौं भने असल मानव समाजमा वा देव समाजमा जन्म लिन

सक्दछौं तर यदि हाम्रा कर्महरू पशुका जस्ता तल्लोस्तरका छन् भने हामीले पशु परिवारमा जन्म लिनुपर्दछ । यो कर्मको बाध्यता वा शक्ति हो । **कर्मणा दैवनेत्रेण जन्तोर्देहोपपत्तये** (भागवत् ३.३१.१) । हामीले हाम्रो कर्मअनुसार विशेष प्रकारको शरीरको विकास गर्दछौं वा तयार गर्दछौं ।

यो मानव शरीर रूपी जीवन भनेको परब्रह्मका बारेमा जान्न र बुझ्नका लागि हो (**अथातो ब्रह्मजिज्ञासा**) । तर यदि हामीले त्यस कार्यका लागि प्रयास गरेनौं भने, यस्तो सुअवसरको सदुपयोग गरेनौं भने र केवल पशुजस्तै भएर बस्यौं भने हामी पशुजीवनमा नै फर्कने छौं । त्यसैले, कृष्णभावनामृत आन्दोलनले मनिसलाई पशुजीवनमा जानबाट बचाउने प्रयास गरेको छ । भगवान् श्रीकृष्णको आविर्भावलाई मलय पर्वतमा उम्रेको चन्दनको वृक्षसँग तुलना गरिएको छ (**मलस्येवचन्दनम्**) । मलय दुई वटा छन् - एउटा मलय पर्वत र अर्को मलेसिया नाम गरेको देश । हुनत चन्दनको वृक्ष जहाँकहीँ पनि उम्रन सक्दछ, केवल मलय पर्वत वा मलेसियामा मात्र उम्रन पर्दछ भन्ने नियम पनि छैन तर अधिकांश चन्दन त्यसक्षेत्रमा उम्रने हुनाले त्यसलाई मलय चन्दन भनिन्छ । पाश्चात्य देशमा "ओ द कोलोन" नाम गरेको सुगन्धित जल पाइन्छ । यो जहाँ पनि उत्पादन गर्न सकिन्छ तर मूलतः यो कोलोन नाम गरेको सहरमा उत्पादन गरिएको हो त्यसैले, यो जललाई कोलोन भनिन्छ । त्यसैगरेर, चन्दन पनि जहाँ पनि उमार्न सकिन्छ तर मूलतः यो मलेसिया वा मलय पर्वतमा यसको प्रधानता भएको हुनाले यसलाई मलय चन्दन भनिन्छ । कुन्तीले यो स्तुती पाँच हजार वर्षअघि गरेकी हुन् । त्यसैले, पाँच हजार वर्षअघि देखि नै चन्दन मलेसियामा उत्पादन गरिन्थ्यो भन्ने कुरा थाहा पाउन सकिन्छ । मलेसिया नयाँ नाम होइन । वैदिक संस्कृतिका अनुयायीहरूलाई हजारौं हजार वर्ष अघि देखि नै यसवारेमा जानकारी थियो । अहिले मलेसियामा रबरको वृक्ष लगाइन्छ किनभने आजभोलि रबरको धेरै नै माग छ तर पहिला मलेसियामा ठुलो परिमाणमा चन्दनको उत्पादन गरिन्थ्यो किनभने त्यससमय विशेष गरेर भारतमा र अन्यत्र चन्दनको धेरै नै माग हुने गर्दथ्यो ।

भारत एउटा उष्ण देश भएको र चन्दनले शीतलता प्रदान गर्ने भएकोले भारतका बासिन्दाहरू चन्दनलाई प्रसाधन वा श्रृङ्गारका लागि प्रयोग गर्ने गर्दछन् । अहिले पनि गर्मीको समयमा चन्दन खरिद गर्न सक्नेले आफ्नो शरीरमा चन्दनको लेप लगाउँदछन् र दिनभरि शीतलताको अनुभव गर्दछन् । भारतमा

अहिले मानिसले स्नान गरेर पवित्र भएपछि शरीरमा तिलक लगाउँदछन्, अर्चाविग्रहलाई प्रणाम गर्दछन् र अर्चाविग्रह कक्षबाट केही मात्रामा चन्दन प्रसाद लिएर शरीरमा लेप लगाउँदछन्, यसलाई **प्रसाधनम्** भनिन्छ । तर, अहिलेको यस कलियुगमा **स्नानमेव प्रसाधनम्** (भागवत् १२.२.५) भनिन्छ अर्थात् यदि कसैले राम्रोसँग स्नान गऱ्यो भने त्यो नै 'प्रसाधनम्' हो । भारतमा गरिबले पनि प्रत्येक दिन बिहान सबेरै स्नान गर्दछ तर जब म अमेरिका आएँ यहाँ नित्य स्नान गर्न कठिन भएको देखें र प्रायःजसो यहाँ नित्य स्नान गर्ने अभ्यास वा प्रचलन नै रहेनछ । भारतमा हामीहरूले दिनमा तीन पटक स्नान गर्ने बानी परेका मानिसहरूलाई देखेका छौं तर यहाँ न्यूयोर्कमा मानिसहरू आफ्नो घरमा स्नान गर्ने सुविधा नभएकाले साथीहरूको घरमा स्नान गर्न गएको देखेको छु । यो कलियुगको लक्षण हो । **स्नानमेव प्रसाधनम्** – कलियुगमा स्नान गर्न ज्यादै कठिन हुनेछ ।

कलियुगको अर्को लक्षण – **दाक्ष्यं कुटुम्बभरणम्** (भागवत् १२.२.७) – यदि कसैले आफ्नो परिवारको भरणपोषण गर्न सक्यो भने त्यो नै पुण्यकर्म हुनेछ र त्यो व्यक्ति प्रख्यात हुनेछ । '**दाक्ष्यं**' शब्दको अर्थ "पुण्य कर्मका लागि प्रख्यात" हो । यो दक्ष शब्द अर्थात् कुशल शब्दबाट बनेको हो । कलियुगमा आफू, पत्नी र छोराछोरीसहित बनेको परिवारको भरणपोषण गर्न सक्यो भने त्यो व्यक्तिलाई कुशल ठानिनेछ । भारतमा संयुक्त परिवारको प्रचलन छ, जहाँ ऊ स्वयम्, पत्नी, छोराछोरी, उसका मातापिता, बुहारी र अन्य व्यक्तिहरू हुन्छन् । तर, कलियुगमा भने आफ्नो सानो परिवार, जहाँ आफू, पत्नी र केही बालबच्चा हुन्छन् तिनीहरूको पालनपोषण गर्न पनि कठिनाइ हुनेछ । जब म न्यूयोर्कमा बस्दथें । हाम्रो कक्षामा एकजना वृद्ध महिला आउँदथिन् । उनको पुत्र युवक थियो । मैले उनलाई सोधें "किन तिम्रो छोराले विवाह गर्दैनन् ?" "जब उसले आफ्नो परिवारको पालनपोषण गर्न सक्दछ उसले विवाह गर्नेछ" भनेर उनले उत्तर दिइन् । आफ्नो परिवारको पालन-पोषण गर्न यहाँ यति कठिन हुन सक्दछ भन्ने कुरा मलाई थाहा नै थिएन । तर, त्यो कुरा भागवत्मा वर्णन गरिएको छ – "यदि कसैले आफ्नो परिवारको पालनपोषण गर्न सक्दछ भने त्यो व्यक्ति यशस्वी ठानिनेछ र यदि कुनै युवतीको पति छ भने ऊ भाग्यशाली ठानिनेछ ।"

कसैको आलोचना गर्ने हाम्रो कार्य होइन तर कलियुगको लक्षण अति नै भयावह छ र त्यो अरू बढी मात्रामा भयावह भएर बढ्दै छ । कलियुगको अवधि

४३२,००० वर्षको छ र त्यसमध्ये अहिले केवल पाँच हजार वर्ष बितेको छ । अहिले नै हामीले कलिमा हुने कठिनाइहरू देख्न सुरु गरेका छौं र जति कलिको समय बढ्दै जान्छ, हामीले अरू बढी कलिका कठिनाईहरूको सामना गर्नुपर्दछ । त्यसैले, सबैभन्दा उत्तम उपाय भनेको कृष्णभावनामृत कार्य पूरा गरेर भगवद् धाम फर्कनु नै हो, त्यसले नै हामीलाई बचाउँदछ । अन्यथा, हामी कलियुगको अर्को जीवनमा आयौं भने हामीले आउने दिनहरूमा अरू बढी कठिनाइहरूको सामना गर्नपर्नेछ । अरू धेरै कष्ट भोग्नपर्नेछ ।

***

# १६. आफ्नो स्वभाविक चेतनामा फर्कनु

**अपरे वसुदेवस्य देवक्यां याचितोऽभ्यगात् ।**
**अजस्त्वमस्य क्षेमाय वधाय च सुरद्विषाम् ॥**

वसुदेव र देवकीले हजुरका लागि प्रार्थना गरे । त्यसैले, हजुरले उनीहरूका पुत्रका रूपमा जन्म लिनुभयो भनेर अरूहरूले भन्दछन् । निसन्देह हजुर अजन्मा हुनुहुन्छ तर पनि देवताहरूको कल्याण गर्न र उनीहरूप्रति ईर्ष्या गर्ने असुरहरूको वध गर्न हजुरले जन्म लिनुभएको हो ।

**–(श्रीमद्भागवत् १.८.३३)**

वसुदेव र देवकी पूर्वजन्ममा सुतपा र पृश्नि हुँदा भगवान्लाई पुत्ररूपमा पाउन सकूँ भनेर कठोर तपस्या गरेका थिए भनेर भनिन्छ र त्यसको फलस्वरूप भगवान् उनीहरूको पुत्रका रूपमा प्रकट हुनुभयो । भगवद्गीतामा घोषणा गरिएको छ, भगवान् सम्पूर्ण संसारको कल्याण गर्न र असुर वा भौतिकवादी नास्तिकहरूको विनाश गर्न प्रकट हुने गर्नुहुन्छ ।

भगवान्ले भन्नुभएको छ: –

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।**
**अभ्युत्थानामधर्मस्य तदात्मानं सृजाम्यहम् ॥**

"हे भरतवंशी ! जहाँ पनि जहिले पनि, धर्मको पतन हुन्छ र अधर्मको वृद्धि हुन्छ, त्यो समय म आफैं अवतार लिने गर्दछु" (भगवद्गीता ४.७) । **'धर्मस्य ग्लानि:'** को अर्थ "धर्ममा अनियमितता हुनु" हो । जब अनियमितता बढ्छ अनि धर्म दूषित हुने गर्दछ ।

मानव समाजमा आत्मा र पदार्थबीच जहिले पनि सही सन्तुलन भइरहनुपर्दछ । वास्तवमा हामी आत्मा हौं तर कुनै कारणले गर्दा हामी यस शरीरभित्र बन्दीको रूपमा रहेका छौं । जबसम्म हामी यस शरीरमा रहन्छौं, तबसम्म हामीले खाने, सुत्ने, सम्भोग गर्ने र आफ्नो रक्षा गर्नेजस्ता शारीरिक

कार्यको आवश्यकता स्वीकार गर्नुपर्दछ, हुनत आत्मालाई यी सबै कुराको आवश्यकता भने पर्दैन । आत्मालाई केही पनि खान पर्दैन तर हामीले जेजति खानेकुरा खान्छौं त्यो केवल शरीर निर्वाह गर्नका लागि हो । जुन सभ्यताले केवल शारीरिक आवश्यकतालाई मात्र ध्यान दिन्छ र आत्माको आवश्यकतालाई तिरस्कार गर्दछ वा वास्ता गर्दैन, त्यस्तो सभ्यता मूर्खतापूर्ण र असन्तुलित सभ्यता हो । जस्तै, कसैले आफ्नो कोट भने धुन्छ तर शरीर सफा राख्न भने वास्ता नै गर्दैन, त्यस्तै हो । अर्थात् कसैले पिँजडामा पक्षी पालेको छ र उसले केवल पिँजडाको रेखदेख गर्दछ तर पक्षीको भने वास्ता नै गर्दैन त्यस्तै हो र त्यो कार्य मूर्खतापूर्ण हो । पंक्षी "काका मलाई खान देऊ खाना देऊ" भनेर कराइरहेको छ तर मानिसले भने केवल पिंजडाको मात्र रेखदेख गर्दछ भने त्यो पक्षी कसरी सुखी हुन सक्दछ ?

त्यसैले, हामी किन दुःखी छौं ? यस पाश्चात्य देशमा धन सम्पत्ति, भोजन, कार र यौनको कुनै कमी छैन । यी सबै वस्तु प्रशस्त मात्रामा उपलब्ध छन्, तैपनि यहाँका केही वर्ग भने निराश र भ्रमित भइरहेका छन् जस्तैः हिप्पीहरू । किनभने तिनीहरू यी कुराले सन्तुष्ट भएका छैनन् । किन ? किनभने यहाँ सबै कुराको सन्तुलन छैन । हामी शरीरका आवश्यकताका बारेमा चिन्ता गर्दछौं तर आत्मा र त्यसको आवश्यकताका बारेमा हामीलाई केही पनि जानकारी नै छैन । आत्मा भनेको सही वस्तु हो भने शरीर त्यसको आवरण मात्र हो । त्यसैले, आत्मालाई उपेक्षा गर्नुभनेको एकप्रकारको **'धर्मस्य ग्लानिः'** हो ।

धर्म शव्दको अर्थ "कर्तव्य" हो । कहिलेकाहीँ धर्मको अनुवाद "रिलिजन" को रूपमा पनि गरिन्छ तर रिलिजनलाई सामान्यतया एकप्रकारको "विश्वास" का रूपमा परिभाषित गरिन्छ तर धर्म भनेको वास्तवमा विश्वास होइन । धर्मको स्वाभाविक अर्थ कसैको पनि "वैधानिक कर्तव्य" हो । मानिसको कर्तव्य भनेको आफ्नो आत्माको आवश्यकताका बारेमा जान्नु हो तर दुर्भाग्यवश हामीलाई आत्माको बारेमा केही जानकारी नै छैन र हामी केवल एकमात्र शारीरिक सुविधाका लागि आवश्यक वस्तुको परिपूर्ति गर्न नै व्यस्त छौं ।

शरीरिक सुविधा प्राप्त गर्नु नै पर्याप्त होइन । कुनै व्यक्ति प्रशस्त सुविधा सम्पन्न अवस्थामा बसेको छ भने के उसको मृत्यु हुँदैन र ? निश्चय नै होइन । हामीहरू जीवनका लागि सङ्घर्ष र योग्यताअनुसार नै जीविततताका कुरा गर्दछौ तर शारीरिक सुविधाहरूले मात्र नै कसैलाई स्थायीरूपले बाँच्न वा

जीवित रहन समर्थ बनाउन सक्दैन । त्यसैले, केवल शरीरको हेरचाह गर्नुभनेको नै 'धर्मस्य ग्लानिः' वा कर्तव्य दूषित हुनु हो भनिन्छ ।

मानिसले शरीरको आवश्यकताका साथसाथै आत्माको आवश्यकताका बारेमा पनि जान्नु पर्दछ । वास्तवमा जीवनको सही आवश्यकता भनेको आत्माको लागि सुविधा प्रदान गर्नु हो तर भौतिकताको समझदारीले आत्मालाई सुविधा पुग्न सक्दैन किनभने आत्माको आफ्नो छुट्टै परिचय हुन्छ । त्यसैले, आत्मालाई आध्यात्मिक भोजन दिनुपर्दछ र त्यो आध्यात्मिक भोजन भनेको कृष्णचेतना वा कृष्णभावनामृत हो । यदि कोही व्यक्ति बिरामी छ भने त्यसलाई उचित भोजन र उचित औषधी दुवै दिनुपर्दछ । केवल औषधी मात्र दिएर उचित भोजन दिइएन भने त्यो उपचार सफल हुन सक्दैन । त्यसैले, यो कृष्ण भावनामृत आन्दोलन भनेको आत्माका लागि दुवै उचित औषधी र उचित भोजन दिनुजस्तो हो । उचित भोजन भगवान् श्रीकृष्णलाई अर्पण गरिएको कृष्णप्रसाद हो भने उचित औषधी हरेकृष्ण मन्त्र हो ।

**निवृत्ततर्षैरुपगीयमानाद्**
**भवैषधाच्छ्रोत्रमनोऽभिरामात् ।**
**क उत्तमश्लोकगुणनुवादात्**
**पुमान् विरज्येत विना पशुघ्नात् ॥**
**(भागवत् १०.१.४)**

महाराज परीक्षितले महान् मुनि शुकदेव गोस्वामीसँग भने – "तपाईंले मेरा लागि जुन श्रीमद्‌भागवत्‌को प्रवचन गरिरहनुभएको छ, त्यो सामान्य छैन वा होइन । भागवत्‌को प्रवचन निवृत्ततृष्णहरू वा आशक्तिबाट मुक्त भएकाहरूका लागि रसको आस्वादन गर्नुजस्तै हो ।" यस भौतिक जगत्‌का प्रत्येक व्यक्ति सुखभोग गर्न आसक्त भइरहन्छन् त ? जुन व्यक्ति यस्ता आसक्तिबाट मुक्त छन्, उनीहरूले मात्र यस भागवत्‌को रसको आस्वादन गर्न सक्दछन् । भागवत् शब्द भगवान्‌सँग सम्बन्धित जुनसुकै वस्तुको सूचक हो भने हरे कृष्ण मन्त्र पनि भागवत् नै हो । त्यसैले, महाराज परीक्षितले भनेका छन् - जुन व्यक्ति भौतिक इच्छाको परिपूर्ति गर्ने आशक्तिबाट मुक्त छ, उसले मात्र भागवत्‌को आस्वादन गर्न सक्दछ । यो भागवत्‌को आस्वादन किन गर्नुपर्‍यो ? **भवौषधी** – किनभने यो हाम्रो जन्ममृत्युरूपी रोगको उपचार गर्ने औषधी हो ।

अहिलेको अवस्थामा हामी रोगले ग्रसित छौं । भौतिकवादीहरूलाई रोग के

हो र स्वास्थ्य के हो ? केही पनि थाहा छैन । उनीहरूलाई केही पनि थाहा छैन तैपनि आफूलाई महान् वैज्ञानिक र दार्शनिक ठान्दछन् । "म मर्न चाहँदिनँ तैपनि ममाथि मृत्यु किन बलपूर्वक दिइएको छ ?" भनेर जिज्ञासा पनि राख्न सक्दैनन् । न उनीहरूसँग यससम्बन्धी समस्याको कुनै समाधान नै छ, तैपनि उनीहरू आफूलाई वैज्ञानिक भन्दछन् । उनीहरू कस्ता वैज्ञानिक हुन् ? वैज्ञानिक विकासद्वारा प्राप्त ज्ञान भनेको मानिसका दुःख कष्ट हटाउनका लागि हुनुपर्दछ । होइन भने विज्ञानको के नै अर्थ हुन्छ र ? वैज्ञानिकहरूले प्रतिज्ञा गर्दछन्, हामीहरूलाई भविष्यमा सहायता गर्नेछौं भनेर तर हामीले उनीहरूलाई सोध्नपर्दछ "हामीलाई अहिले के दिँदैहुनुहुन्छ, महाशय ?" "अहिले तिमीहरू जसरी कष्ट भोगिरहेका छौ त्यसरी नै भोगी राख, भविष्यमा हामी यस्तो रसायनको खोजी गर्दछौं जसले तिमीहरूलाई सहायता गर्नेछ" भनेर कुनै पनि सही वैज्ञानिकले भन्दैन । **अत्यन्तिक दुःखनिवृत्तिः** – 'आत्यन्तिक' को अर्थ 'चरम' वा 'परम' हुन्छ र दुःखको अर्थ कष्ट हो । मानव जीवनको उद्देश्य भनेको उसले भोग्ने चरम कष्टको अन्त्य गर्नका लागि हो तर मानिसलाई यसको चरम कष्ट के हो भन्ने नै थाहा छैन । भगवद्गीतामा यी दुःख कष्टलाई **'जन्ममृत्युजराव्याधि'** अर्थात् जन्म, मृत्यु, बुढ्यौली र रोग हो भनेर सङ्केत गरिएको छ । हामीले यी दुःख कष्टबाट मुक्ति प्राप्त गर्न के गरेका छौं ? यस भौतिक जगत्मा यी कष्टबाट मुक्ति पाउने कुनै उपचार नै छैन । यी सबै कष्टलाई त्याग गर्ने अन्तिम उपाय भगवद्गीतामा भनिएको छ, जहाँ भगवान्ले भन्नुभएको छ –

**मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्वतम् ।**
**नाप्नुवन्ति माहात्मानः संसिद्धिं परमां गताः ॥**

"मलाई प्राप्त गरेपछि महान् आत्मा, भक्ति गर्ने योगी यस दुःखैदुःखले भरिएको क्षणिक संसारमा आउँदैनन् किनभने उनीहरूले परम सिद्धि पाइसकेका हुन्छन् ।"

त्यसैले, भगवान्ले भन्नुहुन्छ प्रत्येक व्यक्तिले भगवान्को समीप जाने कार्य गर्नुपर्दछ अर्थात् भगवद्धाम फर्कनुपर्दछ । तर दुर्भाग्यवश मानिसलाई भगवान्को बारेमा जानकारी नै छैन । ऊ भगवान्को धाम जान सक्दछ कि सक्दैन भन्ने पनि थाहा छैन र यसो गर्नु व्यावहारिक हो, होइन भन्ने पनि थाहा नै छैन । उनीहरूसँग यी सबै ज्ञान नै छैनन्, त्यसैले, पशुतुल्य भएर बसेका छन् । ऊ "हे भगवान् ! मलाई दैनिक रोटी वा भोजन दिनुहोस्" भनेर प्रार्थना गर्दछ, तर यदि

हामीले "भगवान् को हो ?" भनेर सोधे के उसले भन्न सक्दछ ? सक्दैन । यदि भगवान् को हो भनेर भन्न सक्दैन भने उसले कसको प्रार्थना गरिरहेको छ त ? के उसले केवल हावाको प्रार्थना गरेको हो ? यदि मैले निवेदन गरेको छु वा बिन्ती गरिरहेको छु भने निश्चय नै त्यो निवेदन सुन्ने कुनै व्यक्ति हुनुपर्दछ जसको अघि मैले यो निवेदन गरिरहेको हुन्छु । तर, उनीहरूलाई त्यो निवेदन दिनुपर्ने व्यक्ति को हो भन्ने पनि थाहा छैन र त्यो निवेदन कहाँ दिने हो, त्यो पनि थाहा नै छैन । उनीहरू भगवान् आकाशमा हुनुहुन्छ मात्र भन्दछन् तर आकाशमा त प्रशस्त चराहरू पनि त हुन्छन् । के ती पनि भगवान् हुन् र ? त्यसैले, मानिसहरूको ज्ञान अपूर्ण छ वा उनीहरूसँग ज्ञान नै छैन । तैपनि मानिसहरू आफूलाई वैज्ञानिक, दार्शनिक, लेखक वा महान् विचारक भन्दछन् तर उनीहरूको विचार सबै काम नलाग्ने फोहोरजस्तै हो ।

वास्तवमा सही र उपयोगी पुस्तक भनेको श्रीमद्भागवत् र भगवद्गीता मात्र हुन् । भागवत् (१.५.१०-११) मा भनिएको छ –

**न यद्वचश्चित्रपदं हरेर्यशो**
**जगत्पवित्रं प्रगृणीत कर्हिचितु ।**
**तद्वायसं तीर्थमुशन्ति मानसा**
**न यत्र हंसा निरमन्त्युषिक्क्षया ॥**

"सम्पूर्ण ब्रह्माण्डलाई पवित्र गर्ने भगवान्का कीर्ति वा महिमाको वर्णन नगर्ने शब्दहरूलाई साधु पुरुषहरूले कागको तीर्थस्थान समान ठान्नुहुन्छ किनभने पूर्ण वा परमहंस पुरुषहरू दिव्य लोकका निवासी हुने हुनाले उनीहरू यस्तो तीर्थस्थानमा आनन्द लिन सक्दैनन् वा रमाउँदैनन् ।

**तद्वाग्विसर्गो जनताघविप्लवो**
**यस्मिन् प्रतिश्लोकमबद्धवत्यपि ।**
**नामान्यनन्तस्य यशोऽङ्कितानि यत्**
**शृण्वन्ति गायन्ति गृणन्ति साधवः ॥**

"अर्कोतिर त्यो साहित्य, जसमा भगवान्का दिव्य नाम, यश, रूप र लीलाका महिमाको वर्णन परिपूर्ण छ त्यो अलि भिन्न रचना हो र त्यो यस जगत्मा भ्रमित सभ्यताले दिएको अपवित्र जीवनमा क्रान्ति नै ल्याइदिने दिव्य शब्दले भरिपूर्ण छ । यस्ता दिव्य साहित्यहरूको रचना ठीक र सही तरिकाले नगरिएका

भए पनि अत्यन्त इमानदार वा सत्यवादी पवित्र व्यक्तिले त्यो सुन्ने, गाउने र त्यसलाई स्वीकार गर्ने गर्दछन् ।"

जुन साहित्यको भगवान्सँग कुनै पनि सम्बन्ध छैन, त्यस्तो स्थान केवल कागहरूले रमाइलो गर्ने स्थानजस्तो मात्र हुन्छ । कागहरू कुन स्थानमा रमाउँदछन् ? फोहोर स्थानमा रमाउँदछन् । तर, सेतो हाँस भने बगैंचाले घेरिएको निर्मल पानीमा खेल्दा आनन्द मान्दछन् । त्यसैले, पशुहरूमा पनि प्राकृतिक विभागहरू छन् । कागहरू हाँस भएतिर जाँदैनन्, हाँसहरू काग भएतिर जाँदैनन् । त्यसरी नै मानव समाजमा पनि कुनै मानिस कागजस्ता छन् भने कुनै हाँसजस्ता छन् । हाँसजस्तो व्यक्ति कृष्णभावनामृतको केन्द्रमा आउँदछ जहाँ प्रत्येक वस्तु स्वच्छ र पवित्र छ, उत्तम भोजन, उत्तम शिक्षा, उत्तम बुद्धि छन् तर कागजस्तो व्यक्ति भने क्लब, भोज-भतेर, नग्न नृत्य र अन्य यस्तैमा जाने गर्दछ ।

त्यसैले, यो कृष्णभावनामृत आन्दोलन भनेको हाँसजस्ता व्यक्तिहरूका लागि हो, काग जस्ता व्यक्तिहरूका लागि होइन । तर, हामीले कागजस्ता व्यक्तिलाई हाँस जस्ता व्यक्तिमा परिणत गर्न सक्दछौं । जुन व्यक्ति पहिला कागजस्तै थियो, अहिले हाँसजस्तै भएर तैरिरहेको छ । कृष्णभावनामृतमा आएको यही नै लाभ हो ।

भौतिक जगत् भनेको त्यो जगत् हो, जहाँ हाँस पनि काग बन्दछन् । भौतिक जगत्मा जीव कुनै भौतिक शरीर भित्र बन्दी जस्तो भएर बसेको हुन्छ र उसले एकपछि अर्को शरीरमा प्रवेश गर्दै इन्द्रियतृप्ती गर्ने प्रयास गर्दछ । तर धर्मको पुनः स्थापना भए पछि काग पनि हाँसजस्तै बिस्तारै परिवर्तित हुन्छ । उदाहरणका लागि – एउटा अशिक्षित र असभ्य व्यक्ति प्रशिक्षण पश्चात् शिक्षित र सभ्य व्यक्तिमा परिवर्तित हुन सक्दछ । यस्तो प्रशिक्षण मानव जीवनमा प्राप्त गर्न सम्भव छ । मैले कुकुरलाई प्रशिक्षण दिएर भक्त बनाउन सक्दिनँ, त्यो कठिन कार्य हो । हुन सक्दछ त्यो पनि गर्न सकिन्छ होला तर मसँग त्यसो गर्न सक्ने पर्याप्त शक्ति छैन होला । जब श्रीचैतन्य महाप्रभु झारखन्डको जङ्गल भएर यात्रा गर्दै हुनुहुन्थ्यो । त्यहाँका बाघ, सर्प, मृग र अन्य सबै पशु भक्त बनेका थिए । श्रीचैतन्य महाप्रभुका लागि यसो गर्न सम्भव थियो किनभने उहाँ साक्षात् भगवान् हुनुहुन्थ्यो । त्यसैले, उहाँले जे पनि गर्न सक्नुहुन्थ्यो । हामीले भने त्यसो गर्न सक्दैनौं तर मानव समाजमा कार्य गर्न सक्दछौं । मानिस जतिसुकै पतित भए

पनि यदि कृष्णभावनामृतका उपदेशहरूको पालना गऱ्यो भने ऊ आफ्नो मूल पद वा स्थितिमा फर्कन सक्दछ । निश्चय नै ज्ञानका विभिन्न स्तर र श्रेणी छन् तर कुनैपनि व्यक्तिको मूलस्थिति भनेको ऊ भगवान्को अंश हो भन्ने नै हो । यस्तो स्थितिको बारेमा जान्नु वा बुझ्नुलाई ब्रह्म साक्षात्कार वा आध्यात्मिक साक्षात्कार भनिन्छ र यो त्यही अनुभूति हो, जसलाई पुनःस्थापना गर्न भगवान् श्रीकृष्ण यस भौतिक जगत्मा आउने गर्नुहुन्छ ।

आफ्ना भक्त वसुदेव र देवकीको अनुरोधमा भगवान् श्रीकृष्ण यस जगत्मा आउनुभएको हो (**वसुदेवस्य देवक्यां याचितोऽभ्यागत्**) । पहिलो जन्ममा वसुदेव र देवकी विवाहित थिए तर उनीहरूका कुनै सन्तान भएनन् त्यसैले, उनीहरूले घोर तपस्या गरे अनि भगवान् श्रीकृष्ण उनीहरू अघि आएर “तिमीहरू के चाहन्छौ” भनेर सोध्नु भयो अनि उनीहरूले “हामी हजुरजस्तै छोरा चाहन्छौं, हाम्रो इच्छा त्यही नै छ” भने । तर भगवान्जस्तै अर्को भगवान् हुन कसरी सम्भव हुन सक्दछ र ? भगवान् श्रीकृष्ण भगवान् हुनुहुन्छ र भगवान् केवल एउटा हुनुहुन्छ । उहाँ दुई वटा हुन सक्नुहुन्न । त्यसैले, वसुदेव र देवकीका छोरा अर्कै भगवान् भएर कसरी आउन सक्ने ? त्यसैले, भगवान् श्रीकृष्णले भन्नु भयो – “अर्को भगवान् खोज्न सम्भव नै छैन । त्यसकारण, म आफैं स्वयम् तिमीहरूको छोरा बन्दछु ।” त्यसैले, कसै-कसैले वसुदेव र देवकीले भगवान् श्रीकृष्णलाई आफ्नो छोराको रूपमा चाहन्थे, त्यसैले, भगवान् श्रीकृष्ण प्रकट हुनुभएको हो भनेर भन्दछन् ।

हुनत भगवान् श्रीकृष्ण वसुदेव र देवकीजस्ता आफ्ना भक्तहरूलाई सन्तुष्ट गर्न आउनुहुन्छ तर जब उहाँ पृथ्वीमा आउनुहुन्छ, उहाँले अन्य कार्यहरू पनि सम्पन्न गर्नुहुन्छ । **वधाय च सुरद्विषाम्** – ‘वधाय’ शब्दको अर्थ ‘वध गर्नु’ वा मार्नु हो र ‘सुरद्विषाम्को’ अर्थ ती मानिस, जो सधैं भक्तप्रति ईर्ष्या गर्दछन् अर्थात् असुर हुन् । भगवान् श्रीकृष्ण त्यस्तै असुरहरूलाई मार्न आउनुहुन्छ ।

उदाहरणका लागि, हिरण्यकशिपु नाम गरेको असुर हो किनभने महाराज प्रह्लाद भगवान्का भक्त थिए तर पिता हिरण्यकशिपु भने उनको ईर्ष्या गर्दथ्यो र कहिलेकाहीँ उनलाई मार्न पनि तयार हुन्थ्यो कारण यो सानो बालकको एउटै दोष थियो, उनी हरे कृष्णको जप र कीर्तन गर्दथे । असुरहरूको स्वभाव हिरण्यकशिपुको जस्तो हुन्छ । जिसस क्राइष्ट पनि यस्तै सुरद्विषामद्वारा मारिएका हुन्, जसले उहाँको ईर्ष्या गर्ने गर्दथे । उहाँको के नै गल्ती वा दोष थियो र ?

उहाँको एउटै दोष थियो उहाँले भगवान्‌को बारेमा उपदेशहरू दिनुहुन्थ्यो । उहाँका धेरै शत्रुहरू थिए, जसले उहाँलाई क्रसमा झुन्ड्याइदिए । त्यसैले, भगवान् श्रीकृष्ण त्यस्ता सुरद्विषामलाई मार्न आउनुभयो । यस्ता ईर्ष्यालुहरूलाई मार्ने कार्य भगवान् श्रीकृष्ण नभए पनि गर्न सकिन्छ । भगवान् श्रीकृष्णले अनिकाल, रोग, युद्धद्वारा करोडौं मानिसलाई मार्न सक्नुहुन्छ । यस्ता दुष्टहरूको वध गर्न भगवान् श्रीकृष्ण यहाँ आउनुपर्दैन, उहाँको निर्देशनमा प्रकृतिको नियमले नै तिनीहरूलाई मार्दछ । **सृष्टिस्थितिप्रलयसाधनशक्तिरेका** (ब्रह्मसंहिता ५.४४) प्रकृतिसँग यति शक्ति छ कि उनले सृष्टि, पालन र संहार गर्न सक्दछिन् । यो भौतिक विराट जगत् केवल प्रकृतिको कृपाद्वारा नै स्थिर छ । त्यसबाट नै हामीले सूर्यको प्रकाश, वायु र वर्षा प्राप्त गर्दछौं । तर, प्रकृति यति शक्तिशाली छिन् कि उनले कुनै पनि समय हावाको उग्ररूपद्वारा प्रत्येक वस्तु नष्ट गर्न सक्दछिन् । प्रकृतिले भगवान् श्रीकृष्णको निर्देशनमा कार्य गर्दछिन् (**मयाध्यक्षेण प्रकृतिः सूयते सचाराचरम्**) । त्यसैले, यदि भगवान् श्रीकृष्णले कुनै असुरलाई मार्न चाहनु भयो भने हावाको उग्ररूप धारण गरेर करोडौं असुर मार्न सक्नुहुन्छ ।

त्यसैले, असुरहरूलाई मार्न भगवान् श्रीकृष्ण यहाँ आउनुपर्दैन । जब वसुदेव र देवकी जस्ता भक्तहरूले अनुरोध गर्दछन् अनि भगवान् आउनुहुन्छ । त्यसलाई कुन्तीदेवीले याचितः शब्दको प्रयोग गरेकी छिन् । याचित शब्दको अर्थ प्रार्थना गर्नु वा अनुरोध गर्नु हो । त्यसैले, भगवान् यहाँ आउनुको सही कारण भनेको उहाँका भक्तहरूको अनुरोध वा प्रार्थना नै हो तर जब उहाँ यहाँ आउनुहुन्छ अनि आफ्ना भक्तहरू प्रति ईर्ष्या गर्नेहरूको पनि वध गर्न तयार छु भनेर देखाउनुहुन्छ । निश्चय नै भगवान्‌ले वध गर्नु र पालनपोषण गर्नु एउटै जस्तो हो किनभने उहाँ परम हुनुहुन्छ । भगवान् श्रीकृष्णद्वारा जुन व्यक्ति मर्दछ, उसले तुरुन्त मोक्ष प्राप्त गर्दछ तर त्यस्तो मोक्ष सामान्यतया प्राप्त गर्न लाखौं वर्ष लाग्दछ ।

सामान्य व्यक्तिहरू भगवान् श्रीकृष्ण यो काम वा त्यो काम पूरा गर्ने उद्देश्यले आउनु भएको हो भन्दछन् तर वास्तवमा भगवान् श्रीकृष्ण आफ्ना भक्तहरूको लाभका लागि आउनुभएको हो । भगवान् श्रीकृष्णले जहिले पनि आफ्नो कल्याणका बारेमा सोच्नुहुन्छ । त्यसैले, कुन्तीदेवीले दिनुभएको यो शिक्षाबाट हामी कसरी भक्त बन्न सक्दछौ भन्ने विषयमा चिन्ता गर्नुपर्दछ । त्यसपछि हामीमा सबै राम्रा गुणहरू स्वतः आउँदछन् ।

**यस्यास्ति भक्तिर्भगवत्यकिञ्चना ।**
**सर्वैर्गुणैस्तत्र समासते सुराः ॥**
**(भागवत् ५.१८.१२)**

यदि व्यक्तिले आफूभित्र सुषुप्त अवस्थामा रहेको स्वाभाविक कृष्णभक्तिलाई विकसित गर्दछ भने उसमा सबै सद्‌गुण देखा पर्दछन् ।

भगवान् श्रीकृष्णप्रतिको हाम्रो भक्ति स्वाभाविक र प्राकृतिक नै हो । जसरी छोराको आफ्ना पितामाताप्रति स्वाभाविक भक्ति हुन्छ, त्यसरी नै हाम्रो भगवान् श्रीकृष्णप्रति स्वाभाविक भक्ति हुन्छ । यदि कुनै सङ्कट देखापर्दछ भने भौतिकवादी वैज्ञानिकहरूले पनि भगवान्‌को प्रार्थना गर्दछन् । निश्चय नै, जवसम्म उनीहरूलाई सङ्कट परेको हुँदैन तबसम्म उनीहरूले भगवान्‌लाई चुनौती दिँदै उहाँको अनादर गर्दछन् त्यसैले, यस्ता दुष्टहरूलाई शिक्षा दिन सङ्कट आउन आवश्यक नै हुन्छ । **जीवेर स्वरूप हय-कृष्णेर नित्यदास** – हाम्रो स्वाभाविक स्थिति भनेको भगवान्‌मा आश्रित हुनु हो । "भगवान्‌को मृत्यु भइसक्यो" "भगवान् हुनुहुन्न" वा "म नै भगवान् हूँ" आदिजस्ता कुरा भनेर हामीले कृत्रिमरूपले भगवान्‌लाई हामीबाट बाहिर निकाल्न चाहन्छौं । यदि हामीले यस्ता दुष्टतापूर्ण व्यवहारलाई त्याग गर्न सक्यौं भने भगवान् श्रीकृष्णले हामीलाई सबैतिरबाट सुरक्षा प्रदान गर्नुहुन्छ ।

***

# १७. संसारको भार कम गर्नु

**भारावतारणायान्ये भवो नाव इवोदधौ ।**
**सदिन्त्या भूरिभारेण जातो ह्यात्मभुवार्थितः ॥**

जसरी समुद्रमा रहेको नाउजस्तै यो संसार भारले गह्रौं भएर पीडित भइन् अनि हजुरका पुत्र ब्रह्माजीले प्रार्थना गर्नुभयो अनि त्यो कष्ट कम गर्न हजुर यहाँ प्रकट हुनुभयो भनेर कसैकसैले भन्दछन् ।

**–(श्रीमद्भागवत् १.८.३४)**

ब्रह्माजी परमपिता परमेश्वरका पुत्र हुनुहुन्छ र उहाँ माताको गर्भमा स्थापित गरिनु भएको थिएन । त्यसैले, उहाँलाई **"आत्मभ"** भनिन्छ । उहाँ ब्रह्माजी नै यो सम्पूर्ण ब्रह्माण्डको अब आउने सृष्टिका लागि प्रमुख हुनुहुन्छ र उहाँ सर्वशक्तिमान्को शक्तिद्वारा गौणरूपमा प्रतिबिम्बित हुनुहुन्छ । यस ब्रह्माण्डको मण्डलभित्र एउटा श्वेतद्वीप नाम गरेको दिव्य धाम छ, जुन परमेश्वरको परमात्मारूपी क्षीरोदकशायी विष्णुको धाम हो । जहिले यस ब्रह्माण्डमा कुनै सङ्कट उत्पन्न हुन्छ र यहाँका प्रशासकरूपी देवताहरूले त्यो समाधान गर्न सक्नुहुन्न, उहाँहरू त्यो सङ्कट समाधान गर्न ब्रह्माजीसमक्ष जानुहुन्छ । यदि ब्रह्माजीले पनि त्यस सङ्कटको समाधान गर्न सक्नुभएन भने उहाँले क्षीरोदकशायी विष्णुसँग परामर्श गरेर त्यस सङ्कटको समाधान गर्नका लागि अवतार लिन प्रार्थना गर्नुहुन्छ । कंस र अन्यले पृथ्वीको शासन गरिरहँदा यस्तै सङ्कट उत्पन्न भयो र पृथ्वी यस्ता असुरहरूका दुष्कर्मका कारणले भारयुक्त भइन् । त्यसैले, ब्रह्माजी अन्य देवतासहित भएर क्षीरोदक सागरको किनारमा गएर प्रार्थना गर्दै भगवान् श्रीकृष्णलाई वसुदेव र देवकीको पुत्रको रूपमा अवतरित हुने परामर्श दिनुभयो । त्यसैले, कसैकसैले ब्रह्माजीको प्रार्थनाले गर्दा भगवान्को आविर्भाव भएको हो भन्दछन् ।

भगवान् श्रीकृष्ण किन प्रकट हुनभयो भन्ने विषयमा विभिन्न व्यक्तिहरूद्वारा

विभिन्न प्रकारले व्यक्त गरेका उद्‌गारहरूको वर्णन कुन्तीदेवीले गरेकी छिन् । कसैले भगवान् वसुदेव र देवकीले प्रार्थना गरेको हुनाले प्रकट हुनुभएको हो भन्दछन् भने कसैले ब्रह्माजीको प्रार्थना सुनेर प्रकट हुनुभएको हो भन्दछन् । – **भारावतारणायान्ये भुवो नाव इवोदधौ** – "जसरी समुद्रमा रहेको नाउ बढी भारले युक्त हुन्छ, त्यसरी नै बढी भारले ग्रसित पृथ्वीको भार कम गर्न प्रकट हुनुभएको हो" भनेर कसैले भन्दछन् । जब संसार बढी भारले पीडित हुन्छ अनि युद्ध, महामारी, अनिकाल हुने गर्दछ, यो प्रकृतिको नियम पनि हो ।

अन्य लाखौं ग्रहहरू, जस्तैः पृथ्वी पनि अन्तरिक्षमा तैरिरहेकी छिन् र ती सबैमा विशाल समुद्र र महासागरहरू छन् । यो पृथ्वी तैरिरहेकी छिन् किनभने त्यसभित्र भगवान् श्रीकृष्ण प्रवेश गर्नुहुन्छ, जसरी परमाणुमा प्रवेश गर्नुहुन्छ । यो कुराको वर्णन भगवद्‌गीतामा गरिएको छ (**माम् आविश्य**) । पृथ्वी भाररहित छैनन् अति नै भारी वा गह्रौं छिन् तैपनि यिनी भित्र परमात्मा हुनुभएको हुनाले तैरिरहन्छिन् ।

आत्माको उपस्थिति भएको हुनाले प्रत्येक वस्तु हलुङ्गो वा भाररहित हुन्छ । जबसम्म मानिसको शरीरमा आत्माको उपस्थिति हुन्छ, तबसम्म शरीर पानीमा तैरिरहन्छ तर जब आत्माले शरीरलाई छोड्दछ तुरुन्त शरीर पानीमा डुब्दछ । जबसम्म बच्चा जीवित हुन्छ हामी उसलाई एक हातले उठाएर हिंड्न सक्दछौं तर बच्चाको मृत्यु पश्चात् ऊ गह्रौं हुन्छ । अहिले हाम्रो भार गह्रौं छ तर जब हामी आध्यात्मिकरूपले अघि बढ्दछौं अनि यस्ता भारबाट हुने अवरोधबाट मुक्त हुनेछौं । अहिले हामी उँड्न सक्दैनौं तर आत्मा भने यति हलुङ्गो हुन्छ कि जब ऊ यस शरीरबाट मुक्त हुन्छ अनि त्यही आत्मा एक सेकेन्डमा नै आध्यात्मिक जगत्‌को वैकुण्ठमा पुग्न सक्दछ (**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति**) ।

त्यसो हो भने पृथ्वी भारले किन पीडित भइन् ? किनभने भक्तिका विरोधी असुरहरूको उपस्थितिले नै पीडित भएकी हुन् । जब पृथ्वी मातालाई भार बढी भयो भन्ने अनुभव भयो अनि भगवान् श्रीकृष्ण आएर त्यो भार कम गरिदिनुभयो । यदि पानी जहाजमा धेरै सामान राखियो भने त्यो जहाजको अवस्था ज्यादै नै भयावह हुन्छ र त्यो कुनै पनि समयमा डुब्न सक्दछ । त्यसैले, जब असुरहरूको बढी भारले पृथ्वीमातालाई पीडा भयो अनि (**सीदान्त्या भूरिभारेण**) उनी ब्रह्माण्डका प्रमुख जीव ब्रह्माजीको समीप गइन् । जब

कसैलाई कुनै कुराको आवश्यकता पर्दछ, सबै ब्रह्माण्डका प्रमुख पुरुष ब्रह्माजीसँग जान्छन् भने ब्रह्माजी पृथ्वी भार कम गर्नका लागि भगवान् श्रीविष्णुकहाँ जानुहुन्छ। अनि भगवान् श्रीविष्णु वा कृष्ण अवतारको रूप लिएर आउनुहुन्छ, जुन कुरा भगवद्गीता (४.७) मा उल्लेख गरिएको छ।

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम्॥**

"हे भरतवंशी ! जहाँ पनि र जहिले पनि धर्मको पतन हुन्छ र अधर्मको प्रधानता हुन्छ, त्यससमय म आफैं अवतार लिनेगर्दछु।"

जब राज्यमा अत्याधिक दण्डहीनता हुन्छ, अपराधीहरू बढ्दछन् र राज्य तिनीहरूका कारण पीडित र व्याकुल हुन्छ अनि त्यहाँ शासकहरू के गर्ने भनेर असमञ्जसमा पर्दछन्। त्यसरी नै जब पृथ्वीमा असुर र नास्तिकहरूको प्रधानता बढ्दछ र बढी भार हुन्छ अनि ब्रह्माण्डका पवित्र शासक देवताहरू चिन्तित बन्नुहुन्छ। जब जनताले राज्यको नियमको पालना गर्दछन्, त्यहाँको शासन सरल तरिकाले चल्दछ तर यदि त्यहाँका मानिस अपराधी प्रवृत्तिका छन् भने त्यो राज्य तिनीहरूको भारले पीडित हुनेगर्दछ। कहिलेकाहीँ यस्तै परिस्थितिले गर्दा यस भौतिक जगत्‌को सन्तुलन पनि बिग्रन्छ। पृथ्वीमा असुर र देवता सधैं भइरहन्छन् तर जब आसुरी शक्ति बढ्दछ अनि पृथ्वी बढी भारले पीडित हुन्छिन् र देवताहरू सहायताका लागि ब्रह्माजीसमक्ष जानुहुन्छ।

बाह्र जना द्वादश महाजनहरू मध्ये ब्रह्माजी एक हुनुहुन्छ (**स्वयम्भूर्नारदः शम्भुः कौमारः कपिलो मनुः**) **प्रह्लादो जनको भीष्मो बलिर्वैयासकिर्वयम्,** भागवत् ६.३.२०)। यदि दिव्य ज्ञान प्राप्त गर्न चाहन्छौं भने हामीले महान् आधिकारिक व्यक्ति महाजनहरूको अनुगमन गर्नपर्दछ। **तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत्** – यदि कुनै व्यक्तिले प्रत्येक कुराको ज्ञान प्राप्त गर्न चाहन्छ भने ऊ आधिकारिक व्यक्ति वा आध्यात्मिक गुरुकहाँ जानुपर्दछ भनेर वैदिक शास्त्रमा आदेश गरिएको छ। आदि वा सर्वप्रथम गुरु भगवान् श्रीकृष्ण नै हुनुहुन्छ। जसरी भगवान् श्रीकृष्णले अर्जुनलाई शिक्षा दिनुभयो, त्यसरी नै ब्रह्माजीलाई पनि शिक्षा दिनुभयो। उक्त कुरा श्रीमद्भागवत्‌मा भनिएको छ (**तेने ब्रह्म हृदा य आदि कवये**)

सृष्टिको मूल स्रोतका बारेमा श्रीमद्भागवत्‌मा वर्णन गरिएको छ र हाम्रो शोध वा खोजको प्रमुख विषय यही हुनुपर्दछ। सृष्टिको मूलस्रोत के हो त ?

**जन्माद्यस्य यतः** – प्रत्येक वस्तुको मूलस्रोत जन्म, स्थिति र प्रलयको स्रोत नै हो । हाम्रो शरीरले एउटा निश्चित तिथिमा जन्म लिएको छ र यो केही वर्ष दश वर्ष, बीस, पचास वा त्यस भन्दा बढी वर्षसम्म रहन्छ र त्यसपछि समाप्त हुन्छ । यो शरीर कहाँबाट आएको हो र नष्ट भएपछि यो कहाँ जान्छ ? शक्तिको संरक्षणका सम्बन्धमा वैज्ञानिक नियम छन् । त्यो शक्तिको स्रोत के हो त ? त्यसको स्रोत छ (**यतो वा इमानि भूतानि जायन्ते**) र त्यो स्रोतका बारेमा श्रीमद्भागवत्मा वर्णन छ ।

यो स्रोत अन्धो छैन । दुष्टहरू प्रत्येक वस्तुहरू शून्यबाट आउँदछ भनेर सोच्दछन् तर शून्यबाट कुनै वस्तु कसरी उत्पन्न हुन सक्दछ ? यस्तो हुन सक्दछ भनेर कुनै प्रमाण नै छैन तैपनि मूर्खहरू यस्तो हुन्छ भनेर दाबी गर्दछन् । त्यसैले, तिनीहरू अन्धा हुन् ।

ज्ञ को अर्थ ज्ञान हो र अभिको अर्थ विशेष हो । हामी कहाँबाट आएका हौं र मृत्यु पश्चात् कहाँ जान्छौं भन्ने विषयमा हामीसँग पर्याप्त ज्ञान छैन । त्यसैले, हामी अभिज्ञ अथवा पूर्णरूपमा विज्ञ छैनौ तर परम स्रोत भने अभिज्ञ हुनुहुन्छ । त्यसैले, उहाँ ढुङ्गा वा शून्य हुनुहुन्न । उहाँ कसरी त्यस्तो हुन सक्नुहुन्छ ? यो सम्पूर्ण सृष्टि नै उहाँको चेतनाको प्रमाण हो । यो विराट् जगत्को र यसको कार्य प्रणालीको प्रशंसा प्रत्येक व्यक्तिले गर्न सक्दछ । सेकेन्ड समयको दश हजार भागको एक मात्र जति पनि फरक नपरी सूर्य र चन्द्रमा आफ्नो निश्चित समयमा उदाउँछन् । यसैगरेर, मौसम र ऋतु पनि आफ्नो समय अनुसार परिवर्तन भइरहन्छन् र फलफूल फूल्न थाल्ने समय ल्याउने कार्य पनि समयमा हुने गर्दछ । यस प्रकारले यस विराट् जगत् अत्यन्त व्यवस्थित र क्रमसहित चलिरहेको छ । यदि कुनै पनि व्यक्ति अभिज्ञ अर्थात् सबै कुरा जान्ने र चलाख छैन भने यो सबै कुरा सम्पन्न गर्न कसरी सक्दछ र ? तर केही व्यक्तिहरू भने यो सबै वस्तु शून्यबाट उत्पन्न भएको हो भन्दछन् । यो मूर्खतापूर्ण कुरा होइन र ? के यस्तो सृष्टि शून्यताबाट उत्पन्न हुन सक्दछ ? के यस्तो कुरा तर्कसङ्गत देखिन्छ ? भागवत्ले भने होइन, देखिंदैन भन्दछ ।

भागवत्को भनाइअनुसार यो सबै सृष्टि अभिज्ञ, अत्यन्त बुद्धिमान् र अनुभवी पुरुषबाट उत्पन्न हुन्छ र उनै बुद्धिमान् पुरुषले यो ज्ञान आदिकवि र मूल सृष्टिकर्ता ब्रह्माजीलाई दिनुभएको हो (**तेने ब्रह्म हृदा या आदिकवये**) । ब्रह्माजी, जो आदि सृष्टिकर्ता हुनुहुन्छ र उहाँको पनि आदि श्रोत जो हुनुहुन्छ उहाँसँग

सम्पर्कमा रहिरहनुहुन्छ । हाम्रोअघि जो हुन्छ, उसैबाट हामीले ज्ञान प्राप्त गर्दछौं भन्ने कुरा हामी बुझ्दछौं । तर, जब ब्रह्माजी उत्पन्न हुनुभयो, त्यससमय उहाँ एक्लै हुनुहुन्थ्यो । त्यसैले, उहाँले ज्ञान कसरी प्राप्त गर्नुभयो ? त्यसको बारेमा भागवत्मा व्याख्या गरिएको छ, **तेने ब्रह्म हृदा** । हृदा शब्दको अर्थ "हृदयको माध्यमबाट" हो । परमात्मा प्रत्येक जीवको र ब्रह्माजीको पनि हृदयमा निवास गर्नुहुन्छ । त्यसैले, ब्रह्माजी एक्लै भए पनि परमात्माद्वारा दिइएको ज्ञान उहाँले प्राप्त गर्नुभयो । ब्रह्म शब्दको अर्थ "वैदिक ज्ञान" हुन्छ । त्यसैले, त्यो वैदिक ज्ञान सर्वप्रथम ब्रह्माजीलाई दिइएको थियो ।

यो वैदिक ज्ञान प्रत्येक व्यक्तिलाई दिइन्छ किनभने भगवान् श्रीकृष्ण प्रत्येक प्राणीको हृदयमा निवास गर्नुहुन्छ **(सर्वस्य चाहं हृदि सन्निविष्टः)** तर त्यो ज्ञान प्राप्त गर्नका लागि प्राणीमा योग्यता पनि हुनपर्दछ । भगवान् श्रीकृष्णले हामीलाई ज्ञान प्राप्त होस् भनेर भित्रबाट परमात्माको रूपमा (चैत्यगुरु) र बाहिरबाट आध्यात्मिक गुरुको रूपमा सहायता गर्नुहुन्छ ।

ब्रह्माजीले भगवान् श्रीकृष्णबाट ज्ञान प्राप्त गर्नुभयो र त्यो ज्ञान वितरण गर्नुभयो । त्यसैले, महाजन वा आधिकारिक व्यक्ति हुनुभयो । वैदिक ज्ञानको वितरण चार सम्प्रदायबाट भएको छ, ब्रह्माजीबाट एउटा, लक्ष्मीजीबाट एउटा, शिवजीबाट एउटा र चार कुमारबाट एउटा सम्प्रदाय छ । हामी यीमध्ये कुनै एउटा सम्प्रदायका भगवान् श्रीकृष्णका प्रतिनिधि स्वरूप प्रकट भएका आधिकारिक व्यक्ति समक्ष जान पर्दछ अनि मात्र हामीले सही ज्ञान प्राप्त गर्न सकिन्छ । त्यसैले, साक्षात् पृथ्वी ब्रह्माजीसमक्ष गइन् र ब्रह्माजीले "यो पृथ्वी असुरहरूका कारणले पीडित भएकी छिन् त्यसैले, हजुर प्रकट हुनुहोस् भनेर प्रार्थना गर्दछु" यसरी प्रार्थना गर्नुभयो । त्यसैले, कसैकसैले पृथ्वीको भार कम गर्न ब्रह्माजीका यस्तो अनुरोध स्वीकार गरेर भगवान् प्रकट हुनुभएको हो भन्दछन् ।

जब भगवान् श्रीकृष्ण पृथ्वीमा प्रकट हुनुहुन्छ उहाँले भक्तको रक्षा गर्नुहुन्छ र असुरहरूको वध गर्नुहुन्छ , त्यसैले, भगवान् श्रीकृष्णको नारायणरूपमा चार हात हुने गर्दछ । उहाँका दुई हातमध्ये एउटामा चक्र र अर्कोमा गदा धारण गर्नुहुन्छ, जसले असुरहरूको वध गर्दछ र अन्य दुई हातमा शङ्ख र कमलको फूल धारण गर्नुहुन्छ जसले भक्तहरूको रक्षा गर्दछ । भगवान्ले भन्नुहुन्छ – **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति** – त्यसैले, भगवान् श्रीकृष्णले आफ्नो

शंख बजाउँदै भन्नुहुन्छ – "मेरा भक्तको कहिल्यै विनाश हुँदैन ।" अनि कमल फूलद्वारा आफ्नो आशीर्वाद प्रदान गर्नुहुन्छ । कमलको फूल कहिलेकाहीँ लक्ष्मीजीको हातमा पनि देखिन्छ, त्यो पनि आशीर्वादको प्रतीक नै हो ।

अब कसैले भगवान् श्रीकृष्ण यो उद्देश्यले वा त्यो उद्देश्यले प्रकट हुनुभएको हो भनेर भन्दछन् तर निष्कर्षमा भन्दा भगवान् श्रीकृष्ण केवल आफ्नो आनन्दका लागि नै प्रकट हुनुभएको हो किनभने उहाँ कुनै कारणको अधीनमा परेर प्रकट हुनुभएको होइन । हामीहरू कर्मको बन्धनमा पर्नेहुनाले जन्म लिन्छौं तर भगवान् श्रीकृष्ण पूर्ण स्वतन्त्र हुनुहुन्छ । त्यसैले, न कसैको अनुरोधमा वा न कर्मको कारणले नै यहाँ आउनुहुन्छ । उहाँ त केवल आफ्नो स्वतन्त्रइच्छाले (**आत्ममायया**) गर्दा नै आउने गर्नुहुन्छ । हामीहरू भगवान् श्रीकृष्णको बहिरङ्ग शक्तिको कारणले गर्दा जन्म लिन बाध्य भएका छौं तर भगवान् श्रीकृष्ण अन्य कसैको माया शक्तिद्वारा नियन्त्रित हुनुहुन्न । त्यसैले, यस्तो अवस्थामा उहाँले जन्म लिनपर्दैन । माया वा भ्रमित गर्ने शक्ति भगवान् श्रीकृष्णको नियन्त्रणमा छिन् त्यसैले, उनले उहाँलाई कसरी नियन्त्रण गर्न सक्दछिन् ? जसले भगवान् श्रीकृष्ण हामी जस्तै मायाको नियन्त्रणमा हुनुहुन्छ भन्ने सोच्दछ, त्यस्ता व्यक्तिलाई भगवद्गीतामा मूढ वा मूर्ख हो भनिएको छ (**अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम्**) ।

भगवान् श्रीकृष्ण मूल वा आदि नारायण हुनुहुन्छ र उहाँ नै सम्पूर्ण भौतिक जगत्को सृष्टिको मूल स्रोत हुनुहुन्छ । सृष्टिपश्चात् सर्वप्रथम उत्पन्न जीवरूपी ब्रह्माजी भगवान् नारायणका पुत्र हुनुहुन्छ र नारायण नै गर्भोदकशायी विष्णुकारूपमा पहिला भौतिक ब्रह्माण्डमा प्रवेश गर्नुहुन्छ । आध्यात्मिक स्पर्शविना कुनै पनि पदार्थको सृष्टि हुन सक्दैन । जब आत्माको उपस्थिति हुन्छ अनि मात्र सृष्टिको कार्य सम्भव हुन्छ, भनेर भौतिक सृष्टिको मूल कारण खोज्ने व्यक्तिहरूले बुझ्नु र जान्नुपर्दछ । आत्माद्वारा पदार्थ सक्रिय हुन्छ, त्यसैले पदार्थबाट आत्माको सृष्टि भएको भने होइन ।

बुद्धवादीहरूको सिद्धान्तअनुसार प्राणशक्तिको सृष्टि भौतिक अवस्थाद्वारा हुन्छ भनिएको छ । अहिलेको अवस्थामा सम्पूर्ण संसार बुद्धवादीले प्रभावित भएको छ । तर, वास्तविक सत्य भनेको आत्माको उपस्थितिले नै पदार्थको सृष्टि हुन्छ र उसको शरीरको विकास हुन्छ तर यदि मृत बच्चा जन्म्यो भने त्यस शरीरमा आत्माको उपस्थिति नहुने हुनाले त्यस शरीरको विकास हुन सक्दैन ।

त्यसैले, पदार्थको विकासको लागि आत्मा नै प्रमुख हो र पदार्थ आत्माको विकासको प्रमुख तत्त्व होइन । मृत बच्चाको विकास किन हुँदैन ? किनभने त्यस शरीरमा आत्माको उपस्थिति हुँदैन । रुखहरू तबसम्म बढ्छन्, जबसम्म त्यसमा जीवन हुन्छ । यदि हामीले पिपलको सानो बीजलाई राम्रो माटोमा छरेर पानी दियौं भने त्यो बीजबाट रुख बढ्न सुरु गर्दछ किनभने त्यसमा आत्माको उपस्थिति हुन्छ तर यदि हामीले त्यो बीजलाई आगोमा भुटेर जमिनमा छऱ्यौं भने त्यो उम्रन सक्दैन किनभने त्यसमा आत्मा हुँदैन आत्माको उपस्थितिले नै पदार्थहरू बढ्दछन्, यो नियम सृष्टिको प्रारम्भदेखि नै चलिआएको हो । सृष्टिको प्रारम्भमा परमात्मा यस ब्रह्माण्डमा प्रवेश गर्नुभयो । त्यसपछि भगवान् श्रीविष्णुको दिव्य पेटमा उम्रेको कमलमा पहिलो जीव ब्रह्माजीको उत्पत्ति भयो । यदि जुन कमलमा ब्रह्माजी उत्पन्न हुनुभयो, त्यो पदार्थ हो भनेर स्वीकार गर्ने हो भने पनि त्यो पदार्थ आत्माबाट नै उम्रेको हो भनेर पनि हामीले बुझ्नुपर्दछ । त्यसैले, आत्मा नै सृष्टिको आधार हो ।

जुन कमलको फूलमा ब्रह्माजी उत्पन्न हुनुभयो त्यो कमल भगवान् श्रीकृष्णको नाभिबाट उत्पन्न भएको हो । त्यसैले, भगवान् श्रीविष्णुलाई पद्मनाभ पनि भनिन्छ । ब्रह्माजीलाई आत्म-भू भनिन्छ किनभने उहाँ आफ्ना पिता भगवान् नारायण वा विष्णुबाट उत्पन्न हुनुभएको हो । यस कार्यमा भगवान्ले माता लक्ष्मीजीलाई स्पर्श पनि गर्नुभएको थिएन । लक्ष्मीजी भगवान् नारायणको सेवा गर्दै निकट हुनुहुन्थ्यो तर भगवान् नारायणले उहाँलाई स्पर्श पनि नगरी ब्रह्माजीलाई उत्पन्न गर्नुभयो, त्यो नै भगवान्को सर्वशक्तिशीलता हो । यदि हामीले बच्चा जन्माउन चाहृयौं भने हाम्री पत्नीको सहायता लिनुपर्दछ किनभने हामी एक्लैले बच्चा जन्माउन सक्दैनौं । तर, भगवान् श्रीकृष्ण वा भगवान् श्रीविष्णुले आफ्नी पत्नी आफैंसँग हुँदा पनि उहाँको सहायता विना नै ब्रह्माजी उत्पन्न गर्नुभयो किनभने उहाँलाई कसैसँग निर्भर हुन आवश्यक नै छैन । मूर्खतावश जुन व्यक्तिले भगवान् नारायणलाई अन्य जीवसमान ठान्दछ, उसले यस कुराबाट शिक्षा ग्रहण गर्नपर्दछ ।

अन्य जीवलाई भगवान् नारायणको समान स्तरमा सोच्नुहुँदैन भनेर वैदिक साहित्यमा भनेको छ ।

**यस्तु नारायणं देवं ब्रह्मरुद्रादिदैवतैः ।**
**समत्वेनैव वीक्षेत स पाषण्डी भवेद् ध्रुवम् ॥**

केही व्यक्तिले दरिद्रनारायण जस्तो शब्दको खोज गरे अनि नारायण दरिद्र हुनुभयो भन्ने देखाउन खोज्दछन् र मेरो घरको ढोकामा जुन भिकारी भिक्षा माग्न आएको छ त्यो नै नारायण हो भन्ने गर्दछन् । वैदिक साहित्यले यस्तो कुरालाई मान्यता दिएको छैन । किनभने भगवान् नारायण भाग्यकी देवी लक्ष्मीजीका स्वामी हुनुहुन्छ । त्यसैले, जुन व्यक्ति मूर्ख छ उसले मात्र भगवान् नारायण दरिद्र वा गरिब हुनुहुन्छ भनेर सोच्दछ । केवल मूर्खले मात्र भगवान् नारायण, ब्रह्मा, शिव, अन्य सबै देवता, तिमी, म र अन्य सबै समान स्तरका हौं भन्ने सोच्दछ । त्यो मूर्खता मात्र हो । भगवान् नारायण **असमौर्ध्व** हुनुहुन्छ, अर्थात् उहाँ समान न कोही हुन सक्दछ, न उहाँभन्दा माथि नै कोही हुन सक्दछ । त्यसैले, भगवान् श्रीकृष्ण स्वयम् वा आदि भगवान् नारायणले भगवद्गीतामा भन्नुभएको छ – **मत्तः परतरं नान्यत्** – "मभन्दा श्रेष्ठ अरू कोही पनि छैन" न उहाँ समान अन्य कोही नै छन् । 'असम' शब्दको अर्थ उहाँ समान अन्य कोही पनि छैन भन्ने हो र 'अनर्ध्व' शब्दको अर्थ उहाँभन्दा श्रेष्ठ अन्य कोही छैन भन्ने हो । भगवान्को स्थिति वा पद यस्तो छ ।

भगवान् नारायण सामान्य व्यक्ति हुनुहुन्न । उहाँ भगवान् हुनुहुन्छ । उहाँको दिव्य शरीरका सम्पूर्ण अङ्गहरूमा सम्पूर्ण इन्द्रियहरूको शक्ति विद्यमान हुन्छ । सामान्य व्यक्तिले केवल मैथुनद्वारा मात्र बच्चा उत्पन्न गर्न सक्दछ यसको अतिरिक्त सन्तान उत्पन्न गर्ने अङ्गबाहेक अन्य कुनै साधन नै छैन । तर, भगवान् नारायण सम्पूर्णरूपले शक्तिशाली हुनुहुन्छ । त्यसैले, उहाँले आफ्नो नाभिबाट पनि बच्चा उत्पन्न गर्न सक्नुहुन्छ । उहाँको सम्पूर्ण शरीरका अङ्गहरूमा पूर्णशक्ति विद्यमान हुन्छ, जुन कुरा ब्रह्मसंहिता (५.३२) मा भनिएको छ – **अङ्गानि यस्य सकलेन्द्रियवृत्तिमन्ति** – उदाहरणका लागि मैले मेरा आँखाले केवल हेर्न सक्दछु तर भगवान् श्रीकृष्णले आफ्नो आँखाले खान पनि सक्नुहुन्छ तर दुष्टहरूले भने "तिमीले भगवान् श्रीकृष्णलाई भोजन अर्पण गरेका थियौ, तर उहाँले खोई खानु भएको त ? खाना जस्ताको त्यस्तै छ, उहाँले केही पनि खानु भएन" भनेर भन्दछन् । तर, त्यस्ता दुष्टलाई भगवान् श्रीकृष्णले केवल हेरेर मात्र पनि भोजन ग्रहण गर्न सक्नुहुन्छ भन्ने ज्ञान नै छैन । त्यसरी उहाँले आफ्ना दिव्य शरीरका कुनै पनि अङ्गले कुनै पनि कार्य गर्न सक्नुहुन्छ । मथुराको धोवीले भगवान् श्रीकृष्णलाई लुगा दिन अस्वीकार गऱ्यो अनि भगवान् श्रीकृष्णले आफ्नो दिव्यशक्तिको प्रदर्शन गर्दै आफ्ना हातले त्यस धोवीको शिर

काटिदिनुभयो । त्यो कसरी सम्भव हुन्छ र ? तर सर्वशक्तिमान भगवान्लाई त्यो सबै सम्भव हुन्छ ।

भगवान् आफ्ना विविध प्रकारका शक्तिद्वारा जुनसुकै कर्म गर्न पूर्ण र स्वतन्त्र हुनुहुन्छ । यस कुराको व्याख्या श्रीमद्भागवतम्को प्रारम्भमा – **अभिज्ञः स्वराट्** शब्दको प्रयोग गरेर गरिएको छ । 'स्वराट्' शब्दको अर्थ उहाँ आत्म सन्तुष्ट र कसैसँग निर्भर हुनुहुन्न भन्ने हुन्छ । यो नै भगवान्को योग्यता वा क्षमता हो । तर आजकल स्वयम् घोषित भगवान्का अवतारहरू छन् तर यदि दाँत दुख्यो भने "अहो, दुख्यो भन्दै चिकित्सक, मलाई सहायता गर, मलाई बचाऊ" भन्दछन् । यदि तिमी भगवान् हौ भने आफ्नो रक्षा आफैं गर, किन चिकित्सक कहाँ जान्छौ ? त्यस्ता व्यक्तिहरू दुष्ट हुन् र तिनीहरूको कारणले नै यो कृष्णभावनामृतलाई विस्तार गर्न अप्ठ्यारो भइरहेको छ। यो सम्पूर्ण जगत् यस्तै दुष्ट र असुरहरूको भारले पीडित भइरहेको छ। त्यसैले, भगवान्को इच्छाअनुसार परमाणु बमले तिनीहरूको प्रतीक्षा गरिरहको छ ।

***

# १८. अज्ञान र कष्टबाट मुक्ति

**भवेऽस्मिन् क्लिश्यमानानाम् अविद्याकामकर्मभिः ।**
**श्रवणस्मरणार्हाणि करिष्यन्निति केचन ॥**

अन्य कसैले हजुर श्रवण, स्मरण, पूजा आदि भक्तिका अङ्ग जागृत गर्नका लागि प्रकट हुनुभएको हो भन्दछन् । यी क्रियाबाट बन्धनमा परेका जीवले लाभ लिँदै भौतिक कष्टबाट मुक्त भएर मुक्ति प्राप्त गर्न सक्दछन् ।

**–(श्रीमद्भागवत् १.८.३५)**

भगवद्गीतामा भगवान्ले आफू धर्मको पुनःस्थापना गर्न प्रत्येक युगमा प्रकट हुन्छु भनेर जोड दिनुभएको छ । यस प्रकारको धर्म भगवान्ले नै निर्माण गर्नुभएको हो । कुनै पनि व्यक्तिले नयाँ धर्म निर्माण गर्न सक्दैन तर केही महत्त्वाकाङ्क्षीले भने त्यसो गर्ने प्रयास गरेका छन् । भगवान्लाई परम आधिकारिक व्यक्तित्व हुनुहुन्छ भनी स्वीकार गरेर उहाँमा स्वतः स्फूर्त प्रेम गर्दै सेवा गर्नु नै वास्तविक धर्म हो । जीवले कुनै सहायता गर्न सक्दैन । उसले केवल सेवा मात्र गर्ने हो किनभने ऊ यही उद्देश्यका लागि जन्मेको हो । त्यसैले, जीवको एकमात्र कार्य भनेको भगवान्को सेवा गर्नु हो । भगवान् महान् हुनुहुन्छ र जीव उहाँको अधीन वा नियन्त्रणमा छ । त्यसैले, जीवको एक मात्र कर्तव्य भनेको भगवान्को सेवा गर्नु हो । दुर्भाग्यवश जीव मोहले ग्रस्त र अज्ञानताले युक्त भएको हुनाले भौतिक इच्छा मात्र गर्ने हुनाले इन्द्रियहरूको दास भएको छ । त्यही इच्छालाई अविद्या वा अज्ञानता भनिन्छ । त्यही इच्छाका कारणले गर्दा जीवले सम्भोग र मैथुनको जीवनलाई केन्द्रविन्दु बनाएर भौतिक सुख भोग प्राप्त गर्ने विभिन्न योजनाहरू बनाउँदछ । त्यही कारणले जीव जन्ममृत्युको चक्रमा बाँधिएर भगवान्को निर्देशनमा मृत्युपश्चात् विभिन्न लोकका विभिन्न शरीरमा प्रवेश गर्दछ । जबसम्म जीव यो अज्ञानको सीमालाई पार गर्न सक्दैन, तबसम्म यस भौतिक जीवनका तीन प्रकारका कष्ट र दुःखबाट मुक्त हुन सक्दैन

र यो नै प्रकृतिको नियम पनि हो । भगवान् यी दुःख, कष्ट भोगेका जीवले सोचेभन्दा ज्यादै कृपालु हुनुहुन्छ । आफ्नो अहैतुकी अर्थात् कुनै कारणविनाको कृपाले उनीहरू समक्ष प्रकट भएर उनीहरूमा श्रवण, कीर्तन, स्मरण, पूजा, प्रार्थना, आत्मनिवेदन र शरणागतिले युक्त भक्तिको सिद्धान्त जागृत गरिदिनुहुन्छ । माथि उल्लेख गरिएका सम्पूर्ण विधि वा यीमध्ये कुनै एउटा विधि ग्रहण गरेर बन्धनमा परेको जीव अज्ञानताको भुमरीबाट मुक्त भएर बाहिरी शक्तिद्वारा भ्रमित भएर उत्पन्न भएका भौतिक कष्टहरूबाट पनि मुक्त हुन सक्दछ । भगवान्, चैतन्य महाप्रभुको रूपमा आएर यो विशेष प्रकारको कृपा जीवहरूलाई प्रदान गर्नुहुन्छ ।

यस श्लोकको महत्त्वपूर्ण शब्द **भवेऽस्मिन्** को अर्थ "यो भौतिक जगत्मा" भन्ने हुन्छ । भव शब्दको अर्थ उम्रनु वा बढ्नु पनि हुन्छ । यो शब्द जन्म लिएको अर्थको द्योतक पनि हो । यस भौतिक जगत्मा छ प्रकारका परिवर्तनहरू हुने गर्दछन् । ती जन्म, बढ्नु, जन्मपछि केही समय यथास्थितिमा रहनु, आनुषङ्गिक उत्पादनको सृजना गर्नु, ह्रास वा क्षय र अन्त्यमा नष्ट हुनु हुन् । यी छ परिवर्तनलाई षड्विकार भनिन्छ । उदाहरणका लागि– यो शरीरको कुनै एउटा निश्चित दिनमा जन्म हुन्छ अनि त्यो बढ्दछ र केही दिन यसरी नै रहन्छ । त्यस शरीरबाट आनुषङ्गिक उत्पादनको रूपमा छोराछोरीको जन्म हुन्छ, त्यसपछि शरीर वृद्ध र कमजोर हुन्छ अनि अन्त्यमा ज्यादै वृद्ध भएर मर्दछ ।
तर जब शरीर मर्दछ तैपनि म भने मर्दिनं वा शरीर नष्ट भए पनि म नष्ट हुन्नँ । जब यो स्थूल शरीर मर्दछ तैपनि म भने मन, बुद्धि र अहङ्काररूपी सूक्ष्म शरीरमा उपस्थित भइरहन्छु । त्यस सूक्ष्म शरीरले मलाई अर्को स्थूल शरीरमा लिएर जान्छ । हुनत सबैले सूक्ष्म शरीर धारण गर्नपर्दछ । तर, वैज्ञानिक र चिकित्सकले भने यो देख्न सक्दैनन् । मसँग पनि मन छ, तिमीसँग पनि मन छ, तैपनि मैले तिम्रो मन देख्न सक्दिन, तिमीले मेरो मन देख्न सक्दैनौ । मसँग पनि बुद्धि छ, तिमीसँग पनि बुद्धि छ, तिमीले मेरो बुद्धि देख्न सक्दैनौ, मैले तिम्रो बुद्धि देख्न सक्दिन किनभने तिनीहरू अति सूक्ष्म छन् । त्यसैगरेर, आत्मा योभन्दा पनि सूक्ष्म हुन्छ । त्यसैले, यी भौतिकवादी वैज्ञानिकले कसरी देख्न सक्दछन् ? तिनीहरूले मन, बुद्धि र अहङ्कारलाई त देख्न सक्दैनन् भने आत्माका बारेमा के नै भन्ने । त्यसैले, तिनीहरूले "यो शरीर नै सबै हो, योबाहेक अन्य केही छैन" भन्दछन् तर वास्तवमा यो यथार्थ वा सत्य होइन ।

सत्य भनेको आत्मा अत्यन्त सानो वा सूक्ष्म हुन्छ । **बालाग्रशतभागस्य शतधा कल्पितस्य च** (श्वेताश्वतर उपनिषद ५.९) । कपालको अघिल्लो भागको दश हजार भागको सानो भाग जत्रो आकारको आत्मा हुन्छ । यदि हामीले कपाललाई लिएर त्यसको सय भाग गर्न सक्दछौं ? सक्दैनौं र त्यो सम्भव पनि छैन तर यदि हामीले त्यसो गर्न सक्यौं भने त्यो सयौं भागलाई पुनः एक सय टुक्रा गर्दा जत्रो भाग बन्दछ, आत्मा त्यही आकारको हुन्छ ।

निश्चय नै प्रयोगात्मक ज्ञानद्वारा आत्मालाई बुझ्न सकिँदैन । यसलाई अन्य कुन तरिकाले नै जान्न सकिन्छ र ? यसबारेमा बुझ्न आधिकारिक व्यक्तिबाट नै सिक्नपर्दछ । हाम्रो ज्ञान ज्यादै अपूर्ण छ । त्यसैले, यति सूक्ष्म कुराका बारेमा जान्न सक्दैन तर दुष्टहरू भने यस कुराको विचार नै नगरी केवल पदार्थ नै जीवनको कारण हो भन्दछन् । यस्तो विचार व्यक्त गरेर पनि उनीहरूले पदार्थ नै जीवनको कारण हो भन्ने कुरा देखाउन भने सक्दैनन् । उनीहरूले आवश्यक रसायन लिएर प्रयोगशालामा हात, खुट्टा र आँखा भएको सानो किरा बनाएर देखाऊन् । रात्रीमा हामीले यस्ता खुट्टा र आँखा भएका धेरै किराहरू उज्यालोमा बत्तीतिर गएका देख्न सक्दछौं । यस्ता साना किरादेखि ब्रह्माजीसम्म, जसमा चौरासी लाख विभिन्न प्रकारका जीवन वा योनि छन्, तिनीहरूमा हामी एकपछि अर्को शरीर त्याग गर्दै अर्को धारण गर्दै यात्रा गरिरहेका छौं, जुन कुरा भगवान् श्रीकृष्णले भगवद्गीतामा भन्नुभएकोछ **(तथा देहान्तर प्राप्तिः)** । त्यसैले, कि हामीले भगवान् श्रीकृष्णले भन्नुभएको शब्दलाई बहिष्कार गर्नुपर्दछ, होइन भने पदार्थबाट जीवन आउँदछ भन्ने तथाकथित वैज्ञानिकको ती सबै सिद्धान्तको बहिष्कार गर्नुपर्दछ । हामीहरू सबै कृष्णभावनामृतप्रति प्रतिज्ञारत वा वचनवद्ध छौं । त्यसैले, हामीले भगवान् श्रीकृष्णका शब्दलाई बहिष्कार वा तिरष्कार गर्न सक्दैनौं । यदि भगवान् श्रीकृष्णले हामीहरू एक शरीरबाट अर्को शरीरमा जानुपर्दछ भनेर भन्नुहुन्छ भने हामी त्यो वचन स्वीकार गर्दछौं ।

यस भौतिक संसारभित्रका सबै जीवहरू अविद्या वा अज्ञानताको प्रभावमा छन् । **अविद्याकर्मसंज्ञान्या तृतीया शक्तिरिष्यते** । भगवान् श्रीकृष्णसँग लाखौं शक्तिहरू छन् (**परास्य शक्तिर्विविधैव श्रूयते**) र यी सबै शक्तिलाई तीन भागमा विभाजन गरिएको छ – बहिरङ्ग शक्ति, अन्तरङ्ग शक्ति र तटस्थ शक्ति । अन्तरङ्ग शक्ति र तटस्थ शक्तिको गुण एउटै प्रकारको आध्यात्मिक गुण भएको हुन्छ भने बहिरङ्ग शक्ति निम्नस्तरको हुन्छ ।

**विष्णुशक्तिर्परा प्रोक्ता क्षेत्रज्ञाख्या तथा परा ।**
**अविद्या कर्मसंज्ञान्या तृतीया शक्तिरिष्यते ॥**
**(विष्णु पुराण ६.७.६१)**

यस भौतिक जगत्का प्रत्येक प्राणी अविद्याले युक्त छन् । जबसम्म भगवान् श्रीकृष्णले ज्ञान प्रदान गर्नुभएन तबसम्म ब्रह्माजी पनि अविद्याले युक्त हुनुहुन्थ्यो । त्यसैले, कसैले पनि आफ्नो ज्ञानप्रति अहं वा घमण्ड गर्नुहुँदैन । किनभने यस भौतिक जगत्का प्रत्येक व्यक्ति मूर्ख र दुष्ट नै छन् । कुनै व्यक्तिले "यदि मलाई ब्रह्मा बन्ने अवसर प्राप्त भयो भने म विशाल ब्रह्माण्डको सृष्टि गर्दछु" भनेर सोच्दछ भने उसले ब्रह्माजीको शरीर प्राप्त गर्दछ । त्यसरी नै कुनै सानो किराले "मैले यो कोठामा सानो प्वाल बनाउन पाए म शान्तिसँग बसेर खान सक्दछु" भनेर सोच्दछ भने उसले त्यस्तै गर्न पाउँदछ । ब्रह्माजीले ब्रह्माण्डको सृष्टि गर्ने ईच्छा गर्नुहुन्छ भने हामीले विशाल गगनचुम्बी भवन बनाउने इच्छा गर्दैछौं र एउटा सानो किराले आफू बस्ने सानो प्वाल बनाउन चाहन्छ तर यी सबैमा कार्यगत गुण भने समान छ । हामी सबै मूर्ख हौं किनभने यी सबै वस्तु भौतिक र क्षणिक छन् भन्ने हामीलाई जानकारी नै छैन । अज्ञानताको कारणले गर्दा हामीले "यो राम्रो छ त्यो राम्रो छ" भन्ने मात्र सोच्दछौं । **काम कर्मभिः** । हामीले कुनै कुराको इच्छा गर्दछौं र सोहीअनुसार कार्य गर्दछौं । यस्ता कार्य गर्दा धेरै कठिनाइहरू आउँदछन् **(क्लिश्यन्ति)** । ब्रह्माजी बन्न त्यति सजिलो छैन किनभने ब्रह्मा भनेको ठुलो पद हो र यो पद तपस्या र समर्पणमा धेरै अघि बढेको व्यक्तिलाई मात्र प्रदान गरिन्छ । तर, त्यस्ता व्यक्ति पनि हामी जस्तै जीव हुने गर्दछन् । अमेरिकामा धेरै नागरिक छन्, राष्ट्रपति फोर्ड पनि नागरिक नै हुन् तर उनले आफ्नो कठिन परिश्रम र कुटनीति वा कुशलताबाट त्यो पद प्राप्त गर्न सके । तैपनि उनी सामान्य नागरिक नै हुन् । उदाहरणका लागि, राष्ट्रपति निक्सनलाई पदच्युत गरियो र अहिले राष्ट्रपति पदमा छैनन् । यस्तो किन भयो भने उनी सामान्य नागरिक मात्र हुन् । त्यसैगरेर, यदि हामी ब्रह्मा बन्न चाहन्यौं भने हामी ब्रह्मा बन्न सक्दछौं । त्यसैले, भक्ति विनोद ठाकुरले भन्नुहुन्छः –

**कीटजन्म हाओ यथा तुया दास ।**
**बहिर्मुख ब्रह्मजन्मे नाहि आशा ॥**

"जहाँ हजुरका भक्तहरू रहन्छन्, त्यहाँ मलाई किरा हुन दिनुहोस् किनभने यदि म भक्तहरूको गोडाको धुलोमा लडे भने मेरो जीवन सफल हुनेछ ।" भक्ति विनोद ठाकुरले भन्नुहुन्छ – **बहिर्मुख ब्रह्म जन्मे नाहि आशा** – "म ब्रह्माजी पनि बन्न चाहन्न, यदि म कृष्ण भक्त भइन भने ।"

किनभने हामी अज्ञानमा वा मायामा छौं । त्यसैले, कुनै पनि समयमा हामीले भगवान् श्रीकृष्णलाई भुल्न सक्दछौं त्यसैले, हामी सधैँ कृष्णभावनामृतमा लागिरहनपर्दछ । जसले गर्दा हामीले उहाँलाई भुल्न नसकौं । **श्रवण्स्मरणां-र्हाणि** शब्द प्रयोग गर्दै कुन्तीदेवीले त्यस कुराको सङ्केत गरेकी छिन् । श्रवण शब्दको अर्थ सुन्नु हो र स्मरण शब्दको अर्थ सम्झना गरिरहनु हो र अर्हण शब्दको अर्थ भगवान् श्रीकृष्णको अर्चाविग्रहको पूजा गर्नु हो । त्यसैले, प्रत्येक मानिसले आफूलाई भगवान् श्रीकृष्णको बारेमा सुन्ने, उहाँको स्मरण गर्ने र उहाँको पूजा गर्ने कार्यमा लगाउनुपर्दछ । कृष्णभावनामृत आन्दोलनका सम्पूर्ण केन्द्रहरू केवल जप वा कीर्तन गर्न, नाच्न र भगवान् श्रीकृष्णको पूजा सेवा गर्दै उहाँलाई नभुल्ने उद्देश्यका लागि नै सञ्चालन गरिएका वा खोलिएका हुन् । **सदा तद् भावभावितः** – यदि यसरी, हामीले सधैँ भगवान् श्रीकृष्णका बारेमा मात्र सोचिरह्यौं भने हाम्रो जीवनको अन्त्यमा भगवान् श्रीकृष्णको स्मरण रहने सम्भावना रहन्छ (**अन्ते नारायणस्मृतिः**) ।

जुनसुकै कार्य गर्नका लागि अभ्यासको आवश्यकता पर्दछ । उदाहरणका लागि – यदि कसैले मञ्चमा गएर नाच नाचेर देखाउनुछ भने उसले त्यो नाच नाच्नपूर्व धेरै अभ्यास गर्नुपर्दछ । यसरी अभ्यास गरेपछि दक्ष नर्तक भएर मञ्चमा गएर नाचेपछि सबैले स्याबासी दिंदै "अहो, कति राम्रो नर्तक रहेछ" भन्दछन् । तर, कसैले पनि "म सीधा मञ्चमा जान्छु र तत्काल राम्रो नर्तक बन्दछु" भनेर भन्न सक्दैन र त्यो सम्भव पनि छैन । कसैले "म पूर्व अभ्यास गर्दिन, मलाई मञ्च प्रयोग गर्न देऊ म नाच्दछु" भन्दछ भने पनि निर्देशकले त्यसो गर्ने स्वीकृति दिने छैनन् किनभने अभ्यास विना कोही पनि राम्रो नर्तक बन्न सक्दैन । जीवनको सही उद्देश्य भनेको जीवनको अन्त्यमा भगवान् श्रीकृष्णको स्मरण गर्नु हो (**अन्ते नारायणस्मृतिः**) । यदि कसैले जीवनको अन्त्यमा भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दछ भने उसको जीवन सफल हुन्छ ।

यस भौतिक जगत्मा मानिसले दुःखकष्ट भोग्नु नै पर्दछ तर अज्ञानमा डुबेका दुष्टहरू भने यो कुरा बुझ्ने प्रयत्न नै गर्दैनन् । तस्करी गर्ने व्यक्तिलाई आफू

पक्राउ पर्ने र त्यसको सजाय पनि भोग्नुपर्ने थाहा हुँदाहुँदै पनि आफ्नो कार्यमा लागिरहन्छ। चोरलाई आफू पक्रिएपछि सजाय हुन्छ भन्ने थाहा भएर पनि र बारम्बार पक्रिएर सजाय पाए पनि उसले त्यही अपराध पुनः गरिरहन्छ (**पुनः पुनश्चर्वितचर्वणानाम्**)। किन गर्दछ त ? त्यो अज्ञानको कारणले गरिरहन्छ। ऊ अज्ञानमा यति धेरै डुबेको हुन्छ कि उसले "मैले बारम्बार चोरी गरिरहेको छु र बारम्बार पक्रिएर बन्दीगृहमा पनि सजायका लागि गइरहेको छु भने मैले यो कार्य किन गरिरहेको छु ? यसको नतिजा राम्रो पनि छैन" भनेर सोच्दा पनि सोच्दैन। कुनै व्यक्ति जो मैथुनप्रति ज्यादै आसक्त छ भने ऊ बारम्बार यौन रोगले पीडित भएर त्यससम्बन्धी उपचार गराउनपर्दछ तैपनि पुनः वेश्या गमन गरिरहन्छ। यसैलाई अवैध स्त्रीसँग भनिन्छ। तर, वैध स्त्रीसङ्गले पनि विभिन्न प्रकारका समस्या उत्पन्न गर्दछ। सम्भोग पश्चात् स्त्री गर्भवती बन्दछिन् र उनले दश महिनासम्म कष्ट भोग्नुपर्दछ। सुत्केरी हुने समयमा पनि ठुलो खतरा हुने गर्दछ। पुत्रको जन्म भएपछि पिताले त्यसको पालन-पोषण गर्नुपर्दछ अनि पुत्रको शिक्षाका लागि धन एकत्र गर्न धेरै परिश्रम गर्नुपर्दछ। त्यसैले, वैदिक साहित्यले भनेको छ – **बहुदुःखभाजः** – वैध वा अवैध जुनसुकै सम्भोगबाट पनि धेरै प्रकारका कष्टमात्र हुने गर्दछन्। **तृप्यन्ति नेह कृपणाः** – तर जुन व्यक्ति अज्ञानी र दुष्ट छ, ऊ भने यस्ता कार्यबाट कहिल्यै पनि सन्तुष्ट हुँदैन। त्यसको बदलामा उसले बारम्बार यस्ता कार्य गरिरहन्छ, (**पुनः पुश्चर्वितचर्वणानाम्**) र यसैलाई भवरोग वा यस भौतिक जगत्को रोग भनिन्छ।

**यन्मैथुनादिगृहमेधिसुखं हि तुच्छं।**
**कण्डूयनेन करयोरिव दुःखदुःखम्॥**
**(भागवत् ७.९.४५)**

त्यसैले, वैदिक सभ्यतामा सानासाना बालकहरूलाई ब्रह्मचारी बस्न र सम्भोगबाट हुने कष्टमा नलाग्ने प्रशिक्षण दिइन्छ। तर, जुन बालक ब्रह्मचारी बस्न सक्दैन, उसलाई विवाह गर्ने अनुमति दिइन्छ। प्रारम्भमा ब्रह्मचारीको प्रशिक्षण दिएपछि ऊ लामो समयसम्म गृहस्थ जीवनमा बस्न पाउँदैन ऊ तुरुन्त वानप्रस्थ जीवनमा जानुपर्दछ र त्यसपछि संन्यास ग्रहण गर्नुपर्दछ।

यस भौतिक जगत्का सबै चरा, जङ्गली पशु, वृक्ष, जनावर, बिरुवा, ब्रह्माजी र इन्द्रले पनि कष्ट भोगिरहेका छन्। आफ्नो कुनै प्रतिद्वन्द्वी आउला कि भनेर इन्द्र सधैं चिन्तामा रहिरहनुहुन्छ।

**तत्साधु मन्येऽसुरवर्य देहिनां ।**
**सदा समुद्विग्नधियामसद्ग्रहात् ॥**
**(भागवत् ७.५.५)**

यस भौतिक जगत्का सबै प्राणी सधैँ किन चिन्तित छन् ? **अविद्याकामकर्मभिः** – किनभने ती सबै दुष्ट वा अज्ञानी छन् । त्यसैले, भगवान् श्रीकृष्णले जोड दिएर भन्नुभएको छ – "हे दुष्टहरू ! सबै मूर्खतापूर्ण कार्य बन्द गरेर मेरो शरणमा आओ ।" यो नै भगवान् श्रीकृष्णको ठुलो कृपा हो । उहाँ परमपिता हुनुहुन्छ त्यसैले, उहाँले भन्नुहुन्छ – **सर्वगुह्यतमम्** – "यो नै सबैभन्दा गोप्य ज्ञान हो ।" **सर्वर्मान्यपरित्यज्य मामेकं शरणं व्रज** – "हे दुष्टहरू ! सबै कार्य छोडेर मेरो शरणमा आऊ ।"

त्यसैले, कुन्तीले भन्दछिन् – "हजुर मूर्ख वा दुष्टलाई यस्तै शिक्षा दिन र उनीहरूलाई श्रवण, स्मरण र पूजामा लगाउनका लागि नै आउनु भएको हो ।" यो नै भक्ति हो । **श्रवणं कीर्तनं विष्णो** – मानिसले केवल भगवान् श्रीविष्णु वा कृष्णका बारेमा सुन्ने र कीर्तन गर्ने गर्नुपर्दछ । तर जब भक्तले भगवान् श्रीविष्णुका बारेमा सुन्ने र उहाँको नामको कीर्तन गर्न सुरु गर्दछन् अनि कुनै दुष्ट स्वामी आएर भन्ने गर्दछ – कुनै पनि नामको कीर्तन र श्रवण गरेर केही पनि हुँदैन । किन विष्णुको मात्र ? कालीको नाम किन लिन हुँदैन ? बङ्गालका केही व्यक्तिहरूले "काली कीर्तन" काली देवीको नामको कीर्तन गर्न सुरु गरेका छन् । यो कस्तो मूर्खतापूर्ण कार्य हो ? वैदिक साहित्यमा काली कीर्तनजस्तो कुनै कुराको उल्लेख छैन । कीर्तनको अर्थ **श्रवणं कीर्तनं विष्णो** – केवल भगवान् श्रीविष्णु वा कृष्णका नामको श्रवण र कीर्तन गर्नु हो । वैदिक साहित्यले हरे नाम अर्थात् भगवान् श्रीहरि वा कृष्णको नामको कीर्तन गर्ने कुरा सिफारिस गरेको छ, अन्य कसैको पनि होइन ।

श्रीमद्भागवत् (२.४.१५) मा श्रवणं कीर्तनम्को व्याख्याको बारेमा शुकदेव गोस्वामीले अति सुन्दर वर्णन गर्नुभएको छ ।

**यत्कीर्तनं यद्स्मरणं यदीक्षणं**
**यद्वन्दनं यच्छ्रवणं यदर्हणम् ।**
**लोकस्य सद्यो विधुनोति कल्मषं**
**तस्मै सुभद्रश्रवसे नमो नमः ॥**

श्रीमद्भागवत् प्रारम्भ गर्नुअघि शुकदेव गोस्वामीले यी श्लोकद्वारा भगवान् श्रीकृष्णलाई प्रणाम गर्नुभएको छ । उहाँले भन्नुभएको छ – "जसको विषयमा केवल श्रवण मात्र गर्नाले सुभद्र वा शुभ हुन्छ, म उहाँलाई नमस्कार गर्दछु ।" सम्पूर्ण भागवत् केवल भगवान् श्रीकृष्णको महिमाको वर्णनले युक्त छ र यो महिमा शुकदेव गोस्वामीले गर्नुभएको हो । यदि कसैले भगवान्‌का महिमाको वर्णन गर्दछ वा उहाँको ध्यान स्मरण गर्दछ वा केवल उहाँका अर्चाविग्रहअघि बस्दछ वा "अहो भगवान् श्रीकृष्ण कति सुन्दर वस्त्रले अलङ्कृत हुनुहुन्छ, राधारानीको वस्त्र पनि कति सुन्दर छ" भनेर सोच्दछ भने त्यो व्यक्ति पूर्णरूपले शुद्ध पवित्र हुन्छ भनेर शुकदेवले भन्नुभएको छ । यदि कसैसँग भगवान्‌का नामको जप गर्ने वा कीर्तन गर्ने क्षमता छैन, अथवा मन चञ्चल भएकाले भगवान्‌मा मन स्थिर गर्न सक्दैन भने उसलाई "यहाँ अर्चाविग्रह छ, केवल यसको दर्शन गर" भन्ने अवसर प्रदान गरिएको छ । यदि यसरी अर्चाविग्रहको सेवा गरियो भने चौबिस घन्टा नै भगवान्‌को दर्शन गर्ने राम्रो अवसर प्राप्त हुन्छ । मन्दिर सफा गर्दा, अर्चाविग्रहलाई वस्त्र लगाइ दिंदा, अर्चाविग्रहलाई स्नान गराउँदा, उहाँलाई प्रसाद अर्पण गर्दा व्यक्तिले बारम्बार भगवान्‌को दर्शन गर्न पाइरहेको हुन्छ । यो नै भक्तिमय सेवा हो तर मानिसहरू यति पतित र दुष्ट छन् उनीहरू यस्ता अर्चाविग्रहको दर्शन गर्न पनि जान्दैनन् । "अहो ! यो अर्चाविग्रहको पूजा के हो ? भनेर उनीहरू सोच्दछन् । यो त मूर्ति पूजा पो हो भन्दछन् ।" उनीहरू गान्धीको वा अन्य मूर्तिको पूजा गर्दछन् तर अर्चाविग्रहको पूजा गर्न आओ भन्यो भने "अहँ, यो त मूर्ति पूजा हो" भनेर आउँदैनन् ।

कलकत्ताको चौरङ्गी स्क्वायरमा आशुतोष मुखर्जीको मूर्ति छ, जहाँ पूरै वर्ष दिनसम्म काग आएर मूर्तिको अनुहारमा विष्टा त्याग गर्दछन् र त्यो विष्टा सुक्दछ । वर्षको कुनै एक दिन सफाइ कर्मचारी बिहान आएर मूर्तिको सफाइ गर्दछ । त्यस दिन साँझ ठूलाठूला व्यक्तित्व आएर त्यस मूर्तिमा फूलमाला लगाउँदछन् र जान्छन् । भोलिपल्टदेखि फेरि काग आएर त्यस मूर्तिमा विष्टा त्याग गर्न सुरु गर्दछन् । यसरी नगरपालिकाको सफाई कर्मचारीले एकपटक सफाइ गरेर गरिने आशुतोष मुखर्जीको पूजा मान्य हुन्छ मानिसलाई तर भगवान् श्रीकृष्णको अर्चाविग्रह स्थापित गरेर सुन्दर तरिकाले पूजा गरिएको हाम्रो पूजालाई यो त मूर्ति पूजा हो भनेर मानिसहरू भन्ने गर्दछन् । मानिसहरू अज्ञानता र अविद्यामा फसेर त्यहीं अल्झिरहेका छन् । यसैले, उनीहरूलाई शिक्षा दिएर त्यो

अवद्यिाको बन्धनबाट मुक्त गर्ने एउटै उपाय भनेको भक्तिपूर्ण सेवा गर्न सिकाउनु हो । त्यसैले, मानिस सक्नेले भगवान् श्रीकृष्णको नाम जप्ने वा कीर्तन गर्ने वा भगवान् श्रीकृष्णको ध्यान स्मरण गर्ने र नसक्नेले केवल भगवान् श्रीकृष्णको मूर्तिअघि बस्ने गर्नुपर्दछ भनेर शुकदेव गोस्वामीले भन्नुभएको छ । एउटा बालक पनि भगवान्का अघि बस्न सक्दछ र "यहाँ भगवान् श्रीकृष्ण र राधारानी हुनुहुन्छ" भन्न सक्दछ । अन्य बुद्धिमान्ले प्रार्थना पनि गर्न सक्दछ र यदि आध्यात्मिक गुरुद्वारा प्रशिक्षण प्राप्त गरेको छ भने सही तरिकाले पूजा पनि गर्न सक्दछ ।

क्रिस्चियन र मुस्लिम पनि वैष्णव वा भक्त हुन् किनभने उनीहरूले पनि भगवान्को प्रार्थना गर्दछन् । उनीहरूले "हे भगवान् ! हामीलाई दैनिक रोटी वा भोजन दिनुहोस्" भन्दछन् । जसले यसरी भगवान्को प्रार्थना गर्दछन्, उनीहरूलाई पूजाका बारेमा त्यति धेरै ज्ञान हुँदैन वा उनीहरू निम्नस्तरमा हुन सक्दछन् तैपनि यो उनीहरूको सुरुआत हो किनभने उनीहरूले भगवान्लाई प्रार्थना त गरेका छन् । चर्च वा मस्जिदमा जानु पनि पवित्र कार्य हो (**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन**) । जसले यसरी प्रर्थाना गर्न प्रारम्भ गर्दछ, एक दिन त्यो व्यक्ति शुद्ध वैष्णव बन्दछ । तर चर्च, मन्दिर र मस्जिद जानुहुँदैन भनेर प्रचार-प्रसार गर्ने नास्तिकका कारणले गर्दा मानव समाजलाई अत्यन्त खतरा उत्पन्न हुन सक्दछ ।

कुनै व्यक्ति आध्यात्मिक कार्यमा धेरै अघि पुगेको नहुन पनि सक्दछ तर उसले भगवान्का बारेमा बुझ्ने प्रयास भने गर्नुपर्दछ । बच्चालाई विद्यालय पढ्न पठाइन्छ, उसले त्यहाँ क, ख, ग, घ नै पढ्दछ तर यदि उसले मन लगाएर पढ्यो भने एक दिन ऊ विद्वान् बन्न सक्दछ । यसरी नै, कुनै पनि पवित्र व्यक्ति एक दिन शुद्ध भक्त बन्न सक्दछ । मानिसले आफ्नो धर्मलाई नै छोडेर पूर्णरूपले धर्मनिरपेक्ष किन बन्दछ अनि आफ्नो उद्योगमा केवल पार्टपुर्जा निर्माण गर्ने कठिन परिश्रम गरेर प्राप्त धन रक्सी र मासु खान किन खर्च गर्ने ? यो कस्तो सभ्यता हो ? त्यसैकारणले गर्दा यो तथाकथित सभ्यताका मानिसहरू दुःखकष्ट भोगिरहेका छन् ।

अज्ञानताले गर्दा मानिसहरू उद्योग सञ्चालन गरे सुखी भइन्छ भन्ने ठान्दछन् । उनीहरूले उद्योग किन सञ्चालन गर्ने ? त्यसो गर्न कुनै आवश्यकता नै छैन । संसारमा प्रशस्त जमिन छ । त्यसैले, उद्योगहरू सञ्चालन नै नगरी

त्यस जमिनमा अन्न उत्पादन गरेर राम्रोसँग खान सक्दछ । उद्योगले दूध र अन्न उत्पादन गर्न सक्दैन । अहिले यस संसारमा अन्नको कमी भएको पनि उद्योगको कारणले गर्दा नै हो । मानिसहरू सहरमा आएर फलामका पार्टपुर्जा बनाउने कार्य गर्न लागे । अनि कसले अन्न उत्पादन गर्ने ? सादा जीवन उच्च विचार नै आर्थिक संकटको समाधान हो । त्यसैले, यस कृष्णभावनामृत आन्दोलनले आफ्ना भक्तहरूलाई अन्न उत्पादनमा लगाएको छ, जसले गर्दा दुष्टहरूले हामी कसरी प्रशस्त अन्न उत्पादन गरेर शक्तिपूर्वक जीवनयापन गरेका छौं, हेर्न सकून् । अनि हामीले आफैंले उत्पादन गरेको अन्न खाएर, गाईको दूध पिएर हरे कृष्णको कीर्तन गरेका हेरून् ।

कृष्णभावनामृतको विधि संसारभरि व्यापक रूपमा प्रचार-प्रसार गर्नपर्दछ । केवल अर्चाविग्रहको दर्शन गरेर र केवल हरे कृष्ण मन्त्रको कीर्तनमा सम्मिलित भएर पनि मानिसले प्रशस्त लाभ प्राप्त गर्न सक्दछ । यदि कसैले कीर्तन गर्दछ भने पनि उसले भगवान् श्रीकृष्णका बारेमा सोच्न सक्दछ । मैले दुई घण्टा नाचेँ अनि हरे कृष्ण कीर्तन गरेँ यसको अर्थ के होला ? भनेर सोच्न सकिन्छ । यो नै भगवान् श्रीकृष्णको बारेमा सोचिएको स्मरण कार्य हो । कसैले सोच्न सक्दछ "अहो ! मैले मूर्खतापूर्ण तरिकाले दुई घण्टासम्म कृष्ण कृष्ण भनेर कीर्तन गरें" यस्तो सोच्नु पनि भगवान् श्रीकृष्णको स्मरण नै हो । कृष्णभावनामृत आन्दोलन फैलिरहेको छ । मानिसले हाम्रा कृष्णसम्बन्धी पुस्तक खरिद गरिरहेका छन् किनभने तिनीहरू यस सन्दर्भमा उत्सुक छन् अनि भन्दछन्, – "यो कृष्ण के हो त ? यो पुस्तक पढौं न त ।" अनि उनीहरूले पुस्तकमा राधाकृष्णको तस्बिर देख्दछन् अनि पुस्तक खोलेमा अन्य धेरै देख्न सक्दछन् । पुस्तकमा भगवान् श्रीकृष्णको महिमाको वर्णन गरिएका प्रार्थनाहरू छन् । कसैले पढ्दछन्, कसैले भगवान् श्रीकृष्णका बारेमा सुन्दछन् । यदि भाग्यमानी रहेछन् भने कृष्णचेतनाले युक्त भएर अर्चाविग्रहको सेवामा लाग्दछन् । यस्ता भक्ति सेवाका तरिका, जस्तैः- श्रवण गर्नु, कीर्तन गर्नु, स्मरण गर्नु र अन्य यी सबै क्रिया यति पूर्ण छन् कि यदि कसैले यी सबै वा कुनै एउटा विधि ग्रहण गरे पनि त्यो व्यक्ति पवित्र बन्दछ । त्यसैले, शुकदेव गोस्वामीले प्रार्थना गर्दै भन्नुहुन्छ – "म भगवान्को पूजा गर्दछु किनभने एक मात्र उहाँको स्मरणले उहाँको महिमाको वर्णन गर्नाले र उहाँको दर्शनले नै धेरै लाभ प्राप्त गर्न सकिन्छ ।"

शुकदेव गोस्वामी बाह्र जना आध्यात्मिक अधिकारी वा महाजन मध्ये एक

हुनुहुन्छ, त्यसैले, हामीले यस्ता अधिकारीको अनुसरण गर्नुपर्दछ (**महाजनो येगतः स पन्थाः**) । यस्ता भक्तिका विधिहरू सम्पन्न गर्नाले मानिस भौतिक दूषितताबाट रहित हुन्छ भनेर उहाँले पुष्टि गर्नुभएको छ । कहिले भइन्छ त ? **सद्यः** अर्थात् तुरुन्त कुनै प्रतीक्षा नै नगरी भइन्छ । कृष्णभावनामृत आन्दोलनको सबैभन्दा ठुलो लाभ भनेको नै यही हो ।

***

# १९. मायाको लहरलाई पार गरेर अघि बढ्नु

**शृण्वन्ति गायन्ति गृणन्त्यभीक्ष्णशः**
**स्मरन्ति नन्दन्ति तवेहितं जनाः ।**
**त एव पश्यन्त्यचिरेण तावकं**
**भवप्रवाहोपरमं पदाम्बुजम् ॥**

हे कृष्ण ! जसले हजुरको दिव्य कार्यको बारेमा सुन्दछ, कीर्तन गर्दछ, स्मरण गर्दछ वा अरूले यस्तो गरेको देखेर आनन्दित हुन्छ, उसले निश्चय नै यो जन्ममृत्युको चक्रलाई रोक्ने हजुरका चरणकमलको दर्शन गर्न सक्दछ ।

**–(श्रीमद् भगवत १.८.३६)**

हाम्रा यी वर्तमान अवस्थाका आँखाले हामीले भगवान् श्रीकृष्णको दर्शन गर्न सक्दैनौं । भगवान्को दर्शन गर्न पाउनका लागि हामीले हाम्रो यो वर्तमान अवस्थाको दृष्टिलाई भगवान्सँगको स्वतः स्फूर्त प्रेमतर्फ बढाउनुपर्दछ र त्यसबाट भिन्न प्रकारको जीवनशैली उत्पन्न गर्नुपर्दछ । जब भगवान् श्रीकृष्ण स्वयम् साक्षात् सशरीर यस पृथ्वीमा विराजमान हुनुहुन्थ्यो तैपनि सबैले उहाँलाई भगवान्को रूपमा देख्न सकेनन् । रावण, हिरण्यकशिपु, कंस, जरासन्ध र शिशुपालजस्ता भौतिकवादी अपार भौतिक सम्पत्तिका मालिक थिए र उनीहरू अत्यन्त निपुण व्यक्ति मानिन्थे तैपनि उनीहरूले भगवान्को उपस्थितिलाई बुझ्न सकेनन् र त्यस कुराको प्रशंसा पनि गर्न सकेनन् । त्यसैले, यदि भगवान् हाम्रो अघि नै उपस्थित भए पनि आवश्यक दृष्टि नभएसम्म हामीले उहाँको दर्शन पाउन सम्भव हुँदैन । त्यस्तो आवश्यक दृष्टिको विकास भक्तिद्वारा मात्र हुन सक्दछ र त्यो भक्ति भगवान्का विषयमा सही स्रोतबाट सुन्न प्रारम्भ गरेपछि मात्र प्राप्त हुन्छ । भगवद्गीता त्यस्तो लोकप्रिय साहित्य हो, जुन सामान्यतया सुन्ने र बारम्बार पढ्ने गरिन्छ । कहिलेकाहीँ यस्तो भक्ति सेवाको कार्य गर्नेले पनि भगवान्को दर्शन नपाएको अनुभव गरिएको छ । यसको कारण श्रवण वा

सुन्ने पहिलो विधि ज्यादै नै महत्त्वपूर्ण छ किनभने यदि सही स्रोतबाट सुन्ने कार्य गरियो भने त्यसले धेरै चाँडो प्रभाव गर्ने गर्दछ। तर, साधारणतया मानिसले अनधिकृत व्यक्तिबाट नै सुन्ने गर्दछन्। त्यस्ता अनाधिकृत व्यक्तिहरू ठूला विद्वान् हुन सक्दछन् तर उनीहरूले भक्तिसम्बन्धी सिद्धान्तको पालना नगर्ने हुनाले उनीहरूले भनेको वर्णन सुन्ने भनेको व्यर्थमा समय नष्ट गर्नु नै हो किनभने कहिलेकाहीँ उनीहरूले मूल श्लोकलाई आफ्नो स्वार्थ पूरा गर्नका लागि आफ्नो अनुकूल व्याख्या गर्दछन्। त्यसैले, सर्वप्रथम मानिसले सक्षम र योग्य वक्ताको चयन गर्नुपर्दछ र उसले भनेको सुन्नुपर्दछ। जब यसरी सुन्ने विधि पूर्ण र सम्पूर्ण बन्दछ अनि अन्य विधिहरू स्वतः पूर्ण बन्दछन्।

भगवान्‌का विभिन्न प्रकारका दिव्य कार्यहरू छन् यदि श्रवणविधि परिपूर्ण भयो भने ती प्रत्येक विधिहरूबाट इच्छा गरिएको फल प्राप्त गर्न सकिन्छ। भागवत्‌मा भगवान्‌का क्रियाकलापहरू पाण्डवसँग भगवान्‌ले गर्नुभएको व्यवहारबाट प्रारम्भ हुन्छन्। असुर र अन्यहरूसँग भगवान्‌ले गर्नुभएका अन्य धेरै क्रियाकलाप वा लीलाहरू पनि छन्। दसौं स्कन्धमा भगवान्‌ले आफ्ना प्रेमी गोपीहरूसँग र द्वारकामा आफ्ना पत्नीहरूसँग गर्नुभएका व्यवहारका बारेमा वर्णन छ। भगवान् परम र सर्वश्रेष्ठ हुनुहुन्छ। त्यसैले, उहाँले गर्नुभएका प्रत्येक व्यवहारमा र उहाँको दिव्य प्रकृतिमा कुनै भिन्नता छैन। तर कहिलेकाहीँ मनिसहरूले अनधिकृत व्यक्तिबाट श्रवण गर्ने हुनाले भगवान्‌को गोपीहरूप्रतिको व्यवहारका बारेमा सुन्न बढी इच्छा राख्दछन्। यस्तो प्रवृत्तिले श्रोताको कामुक विचार प्रति सङ्केत गर्दछ। त्यसैले, आधिकारिक वक्ताले भगवान्‌का यस्ता क्रीडा वा क्रियाकलापका बारेमा कहिल्यै पनि सुनाउँदैनन्। त्यसैले, मानिसले श्रीमद्‌भागवत् वा अन्य शास्त्रहरू प्रारम्भबाट नै भगवान्‌का बारेमा श्रवण गर्ने गर्नुपर्दछ अनि मात्र श्रोताको सुन्ने कार्यमा प्रगति हुन्छ र उसले पूर्णता प्राप्त गर्दछ। त्यसकारण, कसैले पनि भगवान्‌ले पाण्डवहरूसँग गर्नुभएको व्यवहार गोपीहरूसँग गर्नुभएको व्यवहारभन्दा कम महत्त्वपूर्ण छ भनेर सोच्नहुँदैन। भगवान् यी संसारका मूर्खताले युक्त आसक्तीभन्दा पर र दिव्य हुनुहुन्छ भन्ने सधैँ सोच्नुपर्दछ। माथि उल्लेख गरिएका सम्पूर्ण व्यवहारहरूमा भगवान् सधैँ नायक नै हुनुहुन्छ। त्यसैले, भगवान्‌का बारेमा सुन्ने वा उहाँका भक्तका बारेमा वा उहाँको लागि सङ्घर्ष गर्ने योद्धाका बारेमा सुन्नु आध्यात्मिक जीवनका लागि असल हुन्छ। वेद, पुराण अन्य शास्त्रहरू सबै हाम्रो भगवान्‌सँगको बिर्सिएको

सम्बन्ध पुनः स्थापित गर्नका लागि हुन् भनिन्छ । त्यसैले, ती ग्रन्थको अध्ययन गर्नु आवश्यक छ ।

यो भन्दा पहिलो श्लोकमा कुन्तीदेवीले भन्छिन् मानिस जो यस भौतिक संसारमा आएका छन्, उनीहरू गधाले जस्तै कठोर परिश्रम गर्दछन् र त्यो बोझलाई उनीहरूले सहन नै सक्दैनन् किनभने तिनीहरूका यति धेरै कामुक आकाङ्क्षाहरू छन्, जसले गर्दा उनीहरूले त्यो पूरा गर्न कठोर परिश्रम गर्नुपर्दछ । त्यसैले, ती कार्यले उनीहरूलाई सधैं कष्ट भइरहेको हुन्छ । त्यसैले, भगवान् श्रीकृष्ण यस्तो पद्धतिको प्रारम्भ गर्न आउनुहुन्छ, जसले गर्दा मानिसहरू यी निरन्तर हुने कष्टप्रद जीवनबाट मुक्त हुन सकून् ।

धर्म भगवान्को नियमले युक्त हुन्छ, तर मानिसले भने धर्म भनेको श्रद्धा हो भन्ने ठान्दछन् र यो भगवान्को नियम हो भनेर जान्दैनन् । तिम्रो कुनै वस्तुप्रति श्रद्धा होला, मेरो कुनै वस्तुप्रति श्रद्धा होला । मैले तिमीलाई विश्वास गर्न सक्छु तर तिमीले मलाई विश्वास गर्न पनि सक्दछौ, नगर्न पनि सक्दछौ । यस्तो श्रद्धा र विश्वास भनेको धर्म होइन । एउटा धार्मिक उद्देश्यले प्रेरित समुदाय छ, जसले "तिमीले तिम्रो आफ्नो मार्ग आफैं बनाउन सक्दछौं" भन्दछ । **यत मत तत पथ** – "तिमीले जे सोच्दछौ, त्यो नै सही हो ।" यस्तो तिनीहरूको दर्शन छ तर त्यो विज्ञान होइन । यदि म पागल छु भने के मैले जे सोच्दछु त्यो सही हुन्छ र ? यो कसरी सही हुन सक्दछ ? "दुईमा दुई जोडे चार हुन्छ" त्यो नै विज्ञान हो । यदि मैले दुई मा दुई जोडे पाँच वा तीन हुन्छ भन्दछु भने त्यो सत्य होइन । के त्यो सत्य हुन्छ र ? अवश्य नै हुँदैन । भगवान्का नियम हुन्छन् । यदि ती नियममा **धर्मस्य ग्लानिः** – यी नियममा विचलन आयो भने हामीले कष्ट भोगन पर्दछ । यसरी हामीले राज्यको कानुनको पालना गरेनौं भने हामीले सजायँ भोग्नुपर्दछ । त्यसरी नै, भगवान्को नियमको पालना गरेनौं भने हामीले धेरै कष्ट पाउँदछौं ।

अब हामीले यस्ता कुराबाट कसरी छुटकारा पाउने हो त ? हामीलाई यी कष्टबाट मुक्त गर्न भगवान् श्रीकृष्ण आउनुहुन्छ र हामीलाई भक्तियोग प्रदान गर्नुहुन्छ । भगवान् श्रीकृष्णले "यो गर (भक्तियोग)" भन्दै सिफारिस गर्नुहुन्छ अनि यदि हामीले भक्तियोग गर्‍यौं भने हामी कष्टबाट मुक्त हुन्छौं । महाराज प्रह्लादले भक्तियोगमा नौ वटा कुरा हुन्छन् भनेर भन्नुहुन्छ –

**श्रवणं कीर्तनं विष्णोः स्मरणं पादसेवनम्**
**अर्चनं वन्दनं दास्यं सख्यमात्मनिवेदनम् ।**

**इति पुंसार्पिता विष्णौ भक्तिश्चेन्नवलक्षणा**
**क्रियेत् भगवत्यद्धा तन्मन्येऽधीतमुत्तमम् ॥**

भगवान् श्रीविष्णुका दिव्य नाम, रूप, गुण, सामग्री र लीलाको बारेमा सुन्ने, कीर्तन गर्ने, उहाँको स्मरण गर्ने, भगवान्का चरण कमलको सेवा गर्ने, भगवान्को सादर पूजा गर्ने, भगवान्को स्तुति वा प्रार्थना गर्ने, भगवान्को दास बन्ने, भगवान्लाई आफ्ना सर्वश्रेष्ठ मित्र ठान्ने र आफ्नो सर्वस्व भगवान्मा अर्पण गर्ने – यी नौ विधि वा पद्धतिहरू शुद्ध भक्तिका रूपमा स्वीकार गरिएका छन् । जसले यी नौ पद्धतिहरूद्वारा भगवान् श्रीकृष्णको सेवा गर्न आफ्नो जीवन समर्पित गरेको छ त्यो व्यक्ति सबैभन्दा विद्वान् हो भनेर जान्नुपर्दछ किनभने उसले पूर्ण ज्ञान प्राप्त गरिसकेको छ (भागवत् ७.५-२३-२४) ।

श्रवणको अर्थ कसैको कार्य, रूप, गुण र सामग्रीका विषयमा सुन्नु हो । यदि हामीले कसैका बारेमा सुन्न चाहन्छौं भने उसका कुनै कार्यहरू हुनुपर्दछ । हामीले इतिहासहरू सुन्दछौं, इतिहास के हो ? यो विभिन्न युग वा समयमा विभिन्न पुरुषहरूद्वारा गरिएका कार्यको अभिलेख हो । जब श्रवण गर्ने भन्ने प्रश्न आउँदछ अनि कसको विषयमा श्रवण गर्ने भन्ने हुन्छ । **श्रवणं कीतनं विष्णोः** – हामीले भगवान् श्रीविष्णु वा कृष्णका कार्यहरूका विषयमा सुन्नुपर्दछ समाचारपत्रमा लेखिएका समाचारका बारेमा होइन । **ब्रह्म जिज्ञासा** – अर्थात् हामीले ब्रह्मको विषयमा जिज्ञासा राख्नुपर्दछ र यो नै वेदको भनाइ पनि हो । हाम्रो यस कृष्णभावनामृत आन्दोलनमा पनि हामीले श्रवण र कीर्तन गर्दछौं तर हाम्रो विषयवस्तु के हुन्छ त ? हाम्रो विषय भनेका भगवान् श्रीकृष्ण नै हुनुहुन्छ । हामीले बजार भाउ वा यसको सेयर त्यसको सेयर आदि सूचनाका बारेमा सुन्दैनौं । हामीले केवल भगवान् श्रीकृष्णका विषयमा मात्र सुन्दछौं ।

यदि श्रवण क्रिया हुन्छ भने त्यहाँ बोल्ने र कीर्तन गर्ने पनि हुनपर्दछ । त्यसैले, हामीले भगवान् श्रीकृष्णका विषयमा बोल्ने र कीर्तन गर्ने गर्दछौं (**श्रवणं कीर्तनं विष्णोः**) । जब हामी श्रवण गर्ने र कीर्तन गर्ने कार्यमा निपुण हुन्छौं, त्यसपछिको अवस्था भनेको स्मरण अर्थात् ध्यान गर्ने हो । जुनकुराका बारेमा हामी बोल्दछौं वा सुन्दछौं, त्यसको बारेमा पछि हामीले ध्यान गर्दछौं । सर्वप्रथम हामीले श्रवण सुन्ने कार्य गर्नुपर्दछ अन्यथा कसको ध्यान गर्ने ? यदि कसैले पनि विषयवस्तुका बारेमा नै जान्दैन भने उसले कसको ध्यान गर्ने ? त्यसैले, पहिलो भगवान् श्रीविष्णुको बारेमा श्रवण र कीर्तन गर्ने कार्य हुनुपर्दछ (**श्रवणं कीर्तनं विष्णोः**) ।

वास्तवमा योगको लक्ष्य भनेको नै आफ्नो हृदयमा विराजमान चार हात भएका भगवान् श्रीविष्णुको स्वरूपको दर्शन गर्नु हो र यो नै सही ध्यान हो । तर, आजभोलि दुष्टहरूले अर्कै प्रकारको ध्यानको विधि सुरु गरेका छन् र त्यसलाई उनीहरू ध्यान भन्दछन् तर वास्तवमा त्यो ध्यान होइन । इन्द्रिय यति धेरै चञ्चल छ कि ऊ मनसहित कहिले यता कहिले उता दौडिरहन्छ तर अष्टाङ्ग योगको पद्धतिमा भने आसन, श्वासप्रक्रिया आदिलाई नियन्त्रण गर्दै भगवान् श्रीविष्णुमा मन एकाग्र गर्नुपर्दछ । यस्तो एकाग्रतालाई नै समाधि भनिन्छ । योगको सही लक्ष्य भनेको नै यो अवस्थालाई प्राप्त गर्नु हो । अष्टाङ्ग योग पद्धतिको लक्ष्य भनेको नै भगवान्‌को स्मरणसम्म पुग्नु हो ।

भक्तिको अर्को विधि **'अर्चनम्'** अर्थात् मन्दिरमा भगवान् श्रीकृष्णको रूप अर्थात् अर्चाविग्रहको पूजा गर्नु हो ।

**श्रीविग्रहाराधननित्यनाना श्रृंगारतन्मन्दिरमार्जनादौ ।**
**(श्रीगुर्वष्टक ३)**

भगवान् श्रीकृष्णको पूजा हप्तामा एक पटक वा महिनामा एक पटक गर्ने होइन र यस्तो गर्नु पनि हुँदैन । भगवान् श्रीकृष्णको पूजा चौबीस घण्टा (नित्य) नै गर्नुपर्दछ । अर्चाविग्रहमा दिनहुँ वा सकिन्छ भने दिनमा दुई या चार पटक नयाँ वस्त्र लगाउनुपर्दछ र यसलाई नै श्रृङ्गार भनिन्छ । भगवान् श्रीकृष्ण प्रशस्त ऐश्वर्यको भोग गर्ने हुनुहुन्छ । त्यसैले, हामीले उहाँलाई प्रशस्त वस्तु अर्पण गर्नुपर्दछ, जसको उहाँले आनन्द लिन सक्नुहुन्छ । उदाहरणका लागि यदि कसैले मलाई नयाँ वस्त्र दियो भने मैले "अहो ! यो नयाँ वस्त्र उत्तम छ" भन्दछु र म आनन्दित हुन्छु । त्यसरी हामीले पनि प्रतिदिन अति उत्तम वस्त्र प्रदान गरेर भगवान् श्रीकृष्णलाई सन्तुष्ट पार्ने प्रयास गर्नुपर्दछ । भगवान्‌लाई अर्पण गरिने वस्त्र, उत्तम हुनपर्दछ, अर्पण गरिने भोजन उच्चकोटीको हुनपर्दछ र मन्दिर जहाँ भगवान्‌लाई स्थापित गरिन्छ, त्यो पनि उच्च कोटीको वा त्यो भन्दा उत्तम हुनुपर्दछ । त्यसैगरेर मन्दिर दिनहुँ सफा गर्नुपर्दछ र त्यो ऐनाजस्तै सफा हुनुपर्दछ । कृष्णभावनामृत आन्दोलनका मन्दिर सफा हुन्छन् भनेर धेरैले भन्दछन् त्यसैले, मन्दिर अत्यन्त सफा हुनुपर्दछ । जसले मन्दिर सफा र स्वच्छ राख्दछ, उसको हृदय पनि सफा र स्वच्छ हुन्छ । यो नै भक्तिको पद्धति हो । हामीले जति उत्तम वस्त्र भगवान् श्रीकृष्णलाई लगाइदिन्छौं, हामी सबै त्यति नै सन्तुष्ट हुन्छौं । अहिलेको परिप्रेक्ष्यमा हामी आफ्नै वस्त्र हेर्न र त्यसको प्रशंसा गर्नेमा नै

बानी परेका छौं । "अहो ! मैले कति महङ्गो वस्त्र लगाएको छु" भन्ने सोचेर म आफैँ सन्तुष्ट भइरहेको छु तर जब हामीले भगवान् श्रीकृष्णलाई वस्त्र लगाई दिन्छौं अनि हामीले आध्यात्मिक सन्तुष्टिको अनुभव गर्दछौं ।

**युक्तस्य भक्तांश्च नियुञ्जतोऽपि**
**वन्दे गुरोः श्रीचरणारविन्दम् ।**

आफ्ना शिष्यहरूलाई अर्चाविग्रहको पूजा यसरी गर्ने हो भनेर पूजामा लगाई रहनु नै गुरुको धर्म हो र हामी यस्ता गुरुको वन्दना गर्दछौं ।

कुन्तीदेवीले **'शृण्वन्ति'** शब्दप्रति सङ्केत गरेकी छिन् हाम्रो पहिलो कर्तव्य पनि भगवान् श्रीकृष्णका विषयमा श्रवण गर्नु नै हो र प्रत्येक व्यक्ति यस्ता कुरा सुन्न उत्सुक हुनपर्दछ । हामीले कलेजको शुल्क किन भुक्तान गर्दछौं र कलेज किन जान्छौं ? त्यहाँ हामी सुन्न जान्छौं । कक्षा कोठामा विद्वान् प्राध्यापकद्वारा भनिएका कुरा सुन्दछौं अनि हामीले ज्ञान प्राप्त गर्दछौं । त्यसरी नै भक्तले पनि निरन्तर भगवान् श्रीकृष्णका विषयमा सुनिरहनुपर्दछ । जसले कृष्णभावनामृत प्रति अघि बढ्न चाहन्छ, उसको पहिलो कार्य भनेको नै सुन्नु हो ।

यदि उसले वास्तवमा भगवान् श्रीकृष्णका विषयमा सुनेको छ भने उसको अर्को भक्तियोगको कार्य भनेको कीर्तन (**गायन्ति**) गर्नु हो । कृष्णभावनामृत आन्दोलनका प्रचारकहरू गाउँ-गाउँ, सहरसहर किन जान्छन् ? उनीहरू उद्देश्य के हो त ? उनीहरूको कार्य भनेको सबैले दर्शनका बारेमा सुन्न र बुझ्न सकून् अनि यसलाई गम्भीरतापूर्वक सोचून् भन्ने हो (**गृणन्ति**) । **अभीक्ष्णशः** शब्दले यस्ता कार्यहरू निरन्तर चौबीस घण्टा विनाअवरोध सञ्चालनमा रहिरहनुपर्दछ भन्ने हो । त्यसैले, चैतन्य महाप्रभुले **कीर्तनीया सदा हरिः** – भन्ने कार्य सिफारिस गर्नुभएको छ, अर्थात् मानिसले चौबीस घण्टा नै कीर्तन गरिरहोस् भन्ने हो । कृष्णभावनामृतका भक्तहरूको कार्य पनि यो नै हो ।

कसैले भक्तिका सम्पूर्ण विधिको पालना गर्न सक्दछ भने कसैले एउटा केवल श्रवण मात्र गर्न सक्दछ र त्यो पर्याप्त पनि हुन्छ । महाराज परीक्षितले अन्य कुनै विधिको पालना नगरी केवल आफ्ना जीवनका अन्तिम सात दिन शुकदेव गोस्वामीका अघि बसेर केवल उहाँले भनेको मात्र सुनिरहे । यदि कसैले अन्य कुनै विधिको पालना नगरी केवल मन्दिरमा बसेर जहिले पनि भगवद्गीतासम्बन्धी प्रवचन सुनिरह्यो त्यो उसका लागि पर्याप्त हुन्छ । यदि

तिमीले प्रवचन केही पनि बुझ्दैनौ भने पनि त्यो सुनी राख किनभने त्यो श्लोकको ध्वनि वा मन्त्रको ध्वनिले तिमीलाई अवश्य सहयोग गर्नेछ । शब्द वा अर्थ बुझ्नु त्यति महत्त्वपूर्ण हुँदैन किनभने कति मानिसलाई संस्कृत व्याकरणको ज्ञान हुँदैन तर भक्ति भनेको अप्रतिहता हो अर्थात् रोकेर रोक्न नसकिने हुन्छ । त्यसैले, भक्तिको प्रगतिलाई कसैले पनि रोक्न सक्दैन । त्यसैले, चैतन्य महाप्रभुले सिफारिस गर्नुभएको यो श्रवण गर्ने विधिको पालना मानिसले गर्नुपर्दछ ।

जब चैतन्य महाप्रभुले संन्यास लिनुभयो । त्यो देखेर चैतन्य महाप्रभुका पिता जगन्नाथ मिश्रका ससुरा नीलाम्बर चक्रवर्तीका सहपाठी सार्वभौम भट्टाचार्यले चैतन्य महाप्रभुको निन्दा गर्नुभयो । उहाँको नाता सम्बन्धले गर्दा सार्वभौम भट्टाचार्य चैतन्य महाप्रभुको हजुरबुबाजस्तै थिए । त्यसकारण उनले चैतन्य महाप्रभुलाई भने – "तिमी केवल चौबीस वर्षका युवा छौ अनि तिमीले संन्यास लियौ । संन्यास धर्मको पालना गर्न ज्यादै कठिन हुन्छ किनभने यस्ता युवकलाई आकर्षण गर्न यस जगत्मा धेरै वस्तुहरू छन् । त्यसैले, तिमीले वेदान्त सूत्र पढ ।" सार्वभौम भट्टाचार्य मायावादी विचार धाराका थिए । उनको यो भनाइले मायावादीहरूले श्रवण गर्नलाई महत्त्व दिन्छन् भन्ने सङ्केत गर्दछ । वेदान्त सूत्रको श्रवण गर्न जोड दिइन्छ । भगवान् श्रीकृष्णका भक्त वैष्णवहरूले पनि वेदान्तसूत्रको अध्ययन गर्दछन् तर उनीहरूले वेदान्तसूत्रको अपव्याख्या गर्दै श्रवण विधिलाई दूषित गर्ने मायावादीहरूबाट भने श्रवण गर्दैनन् । वैष्णवहरूले वास्तवमा वेदान्तसूत्र सुन्दछन्, त्यसको अपव्याख्या गर्दैनन् । जब भगवान् श्रीकृष्णले "म परम वा भगवान् हुँ" भन्नुहुन्छ वैष्णवले त्यो स्वीकार गर्दछन् र त्यसो गर्नु नै श्रवण गर्ने उचित विधि हो । यदि कसैले वेदान्तसूत्र वा भगवद्गीताको आफ्नो इच्छा र सोचाइअनुसार व्याख्या गर्दै "कृष्णको अर्थ यस्तो हो, कुरुक्षेत्रको अर्थ यस्तो हो" भन्दछ भने उसले आफ्नो समय त्यसै नष्ट गरिरहेको हुन्छ । त्यसैले, मानिसले यी ग्रन्थहरूलाई यथारूप नै श्रवण गर्नुपर्दछ ।

यद्यपि चैतन्य महाप्रभुले वेदान्तसूत्र सार्वभौम भट्टाचार्यबाट श्रवण गर्न स्वीकार गर्नुभयो र लगातार धेरै दिनसम्म केवल श्रवण गरिरहनुभयो, कुनै प्रश्न सोध्नुभएन । अन्तिममा सार्वभौम भट्टाचार्यले उहाँलाई सोधे – "हे प्रिय वावु ! तिमीले केवल श्रवण मात्र गरिरहेका छौ, कुनै प्रश्न पनि सोध्दैनौ । किन यसो गरेको हो ? के तिमीले बुझ्न सकेनौ ? के कारणले हो, तिमी मौन भएर बसेका छौं ?" चैतन्य महाप्रभुले उत्तर दिनुभयो – "हो मैले सबै बुझेको छु । म किन

मौन भएर बसेको छु भने तपाईंले वेदान्त सूत्रको व्याख्या आफ्नो इच्छाअनुसार गर्नुभएको छ । त्यसकारण मैले केवल वेदान्तसूत्रका श्लोकहरू मात्र सुनिरहेको छु। तपाईंले भनेको सुनेको छैन।" यसरी उहाँले घुमाउरो वा परोक्षरूपले "तपाईंले श्लोकको व्याख्या मूर्खतापूर्ण तरिकाले गर्नुभएको छ" भनेर भन्नु भयो । पछि उहाँले भन्नु भयो "वेदान्तसूत्रका श्लोकहरू सूर्यको प्रकाश समान छन् तर तपाईंले गर्नुभएको व्याख्या भने बादल जस्तै छन्, जसले सूर्यलाई ढाक्दछ।"

सूर्यलाई हेर्न कसैलाई पनि बत्तीको आवश्यकता पर्दैन, सबैले सजिलै हेर्न सक्दछन् । तर, यदि सूर्यलाई बादलले ढाकेको वा छोपेको छ भने हेर्न कठिन हुन्छ । त्यसरी वेदान्तसूत्र सूर्यसमान हो तर मायावादीहरूको व्याख्याले भने सही अर्थलाई ढाकेको हुन्छ । किनभने मायावादीहरूले वेदान्तसूत्रको सही व्याख्यालाई स्वीकार नै गर्दैनन् । ठूलाठूला राजनैतिक नेताहरू पनि मायावादीहरूको दर्शनको प्रभावले गर्दा वैदिक साहित्यलाई आफ्नो इच्छाअनुसार गर्दै "कुरुक्षेत्रको अर्थ यो हो, धर्म क्षेत्रको अर्थ त्यो हो" भन्दछन् । त्यसैले, हाम्रो सिद्धान्त भनेको मूलबाट नै यथारूपको श्रवण गर्नु हो, त्यसपछि मात्र यो प्रभावकारी हुन्छ । **श्रवणं कीर्तनं विष्णोः** भगवान् श्रीविष्णुजस्तो हुनुहुन्छ, त्यस्तै गरेर श्रवण गर्नुपर्दछ अनि मात्र मानिसले भगवान् श्रीविष्णुको ध्यान गर्न सक्दछ, उहाँको स्मरण गर्न सक्दछ (**स्मरन्ति**) । यसो गरेपछि मानिस हर्षित (**नन्दन्ति**) हुन्छ। **नन्दन्ति** शब्दको अर्थ आनन्ददायक हो । त्यसैले, यसप्रकार मानिस हर्षको सागरको सम्पर्कमा आइपुग्दछ ।

त्यसैले, जुन व्यक्तिले कृष्णभावनामृतलाई आफूभित्र विकसित गराइरहेको हुन्छ, उसले केवल भगवान् श्रीकृष्णका विषयमा सुन्ने, भगवान् श्रीकृष्णका बारेमा भन्ने र केवल भगवान् श्रीकृष्णसँग सम्बन्धित मात्र व्यवहार गर्ने गर्नुपर्दछ । त्यसैले, कुन्तीदेवीले भगवान्सँग भन्दछिन् "यो पद्धति वा विधिको पालना गरे कुनै न कुनै दिन मानिसले हजुरको दर्शन गर्न सक्दछन् ।" यदि कसैले भगवान् श्रीकृष्णको दर्शन गरे भने त्यसको प्रभाव कस्तो हुन्छ ? **भवप्रवाहोपरमम्** । प्रवाहको अर्थ "धारा" हो । जब नदीमा अत्यन्त शक्तिशाली धारा बहन्छ, त्यससमय कुनै पशुलाई त्यसमा फ्याँकिदियो भने त्यो बगेर जान्छ । त्यसैगरेर, हामी पनि भौतिक प्रकृतिको धारामा बगिरहेका छौं र ती धाराहरू प्रशस्त महासागरमा छालजस्तै निरन्तर आइरहन्छन् किनभने हामीहरू प्रकृतिका तीन गुणहरूबाट बाधिएका छौं (**प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः**) । त्यसकारण

हामी ती धाराले बगाएर टाढा जाँदै छौं । त्यसकारण, भक्ति विनोद ठाकुर भन्नुहुन्छ – **मायार वशे यच्छ्र भेसे** – "तिमीहरू प्रकृतिका धाराहरूद्वारा बगाइएर गएका छौं ।" ती धारा भनेका भोक, तिर्खा, जन्म, मृत्यु र बुढ्चौली हुन् । ती धारा मोह वा भ्रमका धाराहरू हुन् । हुनत हामी आत्मा हौं तैपनि हामीलाई भवसागरमा फ्याँकिदिएका हुनाले त्यस सागरका धाराहरूले हामीलाई बगाएर लगेको छ । यदि हामी चौबीस घण्टा नै भगवान् श्रीकृष्णका विषयमा गम्भीर भएर सुन्ने, कीर्तन गर्ने र सेवा गर्ने गर्‍यौं भने त्यो धारा बन्द हुन सक्दछ ।

त्यो धारा कहाँ रोकिन्छ ? कुन्तीदेवीले भगवान्सँग भन्दछिन् – **पादाम्बुजम्** – "त्यो धारा हजुरको चरणकमलमा आएर समाप्त हुन्छ ।" मानिसले भगवान् श्रीकृष्णको चरणकमलमा तुलसी पत्र र चन्दनको लेप लगाउनुपर्दछ । भगवान् श्रीकृष्णको चरणकमलको दर्शन कसरी गर्ने भनेर सिक्नुपर्दछ अनि मात्र यो भौतिक जीवनको धारा बन्द हुन्छ ।

सागरमा ठूलाठूला धेरै धारा हुन्छन् तर जोसँग राम्रो बलियो नाउ छ, उसले ती धाराहरूलाई सजिलै पार गर्न सक्दछ । श्रीमद्‌भागवत् (१०.१४-५८) को अर्को श्लोकमा भनिएको छ – **समाश्रिता यो पदपल्लवप्लवम्** – कमलको दल करिब सानो नाउजस्तै हुन्छ । त्यसैले, यो श्लोकमा भनिएको छ, जसले भगवान् श्रीकृष्णको नाउरूपी चरणकमलको शरण लिन्छ उसको लागि जन्ममृत्युरूपी महासागर पनि गाईको खुरमा भरिएको पानीजस्तै नगण्य र सानो हुन्छ । भारतमा वर्षाका समयमा सडकहरू हिलोले भरिन्छन् र त्यसमा गाई वा बाच्छाहरू हिँड्दा तिनीहरूको खुरले खाल्डो बनाउँदछ र त्यस खाल्डोमा पानी भरिन्छ । यस्ता दर्जनौं खाल्डोहरूलाई मानिसले उफ्रेर सजिलै पार गर्न सक्दछ । त्यसरी नै, अन्य सामान्य व्यक्तिका लागि जन्ममृत्यको यो संसार महासागर समान हुन्छ भने भक्तका लागि भने गाईले बनाएको खाल्डो समान हुन्छ **(भवाम्बुधिर्वत्सपदम्)** र उसले त्यो खाल्डो सजिलै पार गर्न सक्दछ । यसप्रकारले भक्तले **'परं पदम्'** अर्थात् परमधाम प्राप्त गर्दछ । त्यसो हो भने यो भौतिक जगत् के हो त ? **पदं पदं यद् विपदाम्** – यो जगत् भक्तहरूका लागि होइन, बरु उनीहरूका लागि हो, जसले कष्ट पाइरहेका छन् । त्यसैले, कुन्तीदेवीले सुझाव दिन्छिन् – "यो कृष्णभावनामृत तिम्रो कष्टका लागि औषधी हो, यो ग्रहण गर र सुखी बन ।"

***

# २०. पूर्ण शरणागति

**अप्यद्य नस्त्वं स्वकृतेहित प्रभो**
**जिहाससि स्वित्सुहृदोद्रनुजीविनः ।**
**येषां न चान्यद्भवतः पदाम्बुजात्**
**पारयणं राजसु योजितांहसाम् ॥**

"हे प्रभु ! हजुरले आफ्ना सम्पूर्ण कर्तव्य पूरा गर्नुभयो । हामी पूर्णरूपले हजुरको कृपामा आश्रित छौं र हजुरबाहेक हाम्रो रक्षा गर्ने अन्य कोही पनि छैनन् जबकि अन्य सबै राज्यहरू हामीसँग शत्रुता गरिरहेका छन् । आज हजुर हामीलाई छोडेर जादै हुनुहुन्छ ?

**–(श्रीमद्भागवत् १.८.३७)**

पाण्डवहरू अति भाग्यशाली थिए किनभने उनीहरू भाग्यवश पूर्ण रूपले भगवान्को कृपामा आश्रित थिए तर भौतिक जगत्मा कसैमा निर्भर हुनु दुर्भाग्यको चिन्ह हो तर भगवान्सँग हाम्रो दिव्य सम्बन्धको कुरामा भने यदि हामी पूर्णतया भगवान्मा आश्रित भएर बाच्यौं भने त्यो सौभाग्यको कुरा हो । यो क्रूर प्रकृतिले हामीलाई स्वतन्त्र हुन दिन्न । प्रकृतिका कठोर नियमबाट स्वतन्त्र हुने झुटो प्रयासलाई व्यावहारिक ज्ञानको भौतिक विकास भनिन्छ । सम्पूर्ण भौतिक जगत् प्रकृतिका नियमहरूबाट स्वतन्त्र हुनका लागि झुटो प्रयास गर्दै अघि बढिरहेको छ । यस्तो कार्य रावणबाट शुरू भएको हो, जसले स्वर्ग जाने सिँढी तयार गर्न चाहेको थियो, ऊबाट अहिलेको वर्तमान् समयका सबैले प्रकृतिका नियमप्रति विजय प्राप्त गर्ने प्रयास गरिरहेका छन् । अहिले मानिसहरू इलेक्ट्रोनिक यान्त्रिक शक्तिका माध्यमले धेरै टाढा रहेका ग्रहमण्डलमा जाने प्रयत्न गरिरहेको छन् । तर मानव सभ्यताको सर्वोच्च लक्ष्य भनेको भगवान्को निर्देशनअनुसार कठिन परिश्रम गर्नु र पूर्णतया उहाँमा आश्रित हुनु हो । पूर्ण सभ्यताको सर्वोत्कृष्ट उपलब्धि भनेको बहादुरीपूर्वक कार्य गर्दै भगवान्मा पूर्ण

आश्रित हुनु हो । पाण्डवले यस्तै स्तरीय सभ्यताको आदर्श पालना गर्दथे । निःसन्देह उनीहरू भगवान् श्रीकृष्णका सदिच्छामा पूर्ण आश्रित थिए तर उनीहरू भगवान्का पराश्रयी भने थिएनन् । उनीहरू व्यक्तिगत चरित्र र भौतिक कार्य सम्पन्न गर्न उत्कृष्ट र योग्य थिए तैपनि उनीहरू भगवान्को कृपाको आकाङ्क्षा गरिरहन्थे किनभने उनीहरूलाई प्रत्येक जीवको स्वाभाविक स्थितिको कारण आश्रित हुनुपर्दछ भन्ने ज्ञान थियो । त्यसैले, भौतिक जगत्को झुटो स्वतन्त्रताको लागि प्रयास गर्नुभन्दा भगवान्को सदिच्छामा निर्भर हुनु नै जीवनको पूर्णता हो । जुन मानिस झुटो तरिकाले भगवान्बाट स्वतन्त्र हुन चाहन्छन्, तिनलाई अनाथ भनिन्छ अर्थात तिनका कोही पनि संरक्षक छैनन् । तर, जुन मानिस भगवान्को सदिच्छामा आश्रित हुन्छ उसलाई सनाथ भनिन्छ अर्थात् उसलाई कसैले संरक्षण गर्दछ । त्यसैले, हामी सनाथ बन्ने प्रयास गर्नुपर्दछ जसले गर्दा हामीलाई यस भौतिक अवस्थाको प्रतिकूल परिस्थितिमा कसैले सदैव रक्षा गरिरहोस् । भौतिक प्रकृतिको वाह्यशक्तिरूपी मोहिनीका कारणले गर्दा जीवनको भौतिक अवस्था दयनीय छ भन्ने पनि हामी भुल्दछौं । त्यसैले, भगवद्गीता (७.१९) मा निर्देश गरिएको छ– धेरै-धेरै जन्म पश्चात् कुनै एक जना भाग्यशालीले वासुदेव नै सर्वेसर्वा हुनुहुन्छ र जीवनयापन गर्ने सर्वश्रेष्ठ विधि भनेको पूर्णरूपले उहाँको शरणमा पर्नु हो भनेर जान्दछ । यो नै महात्मा को लक्षण हो । पाण्डव परिवार गृहस्थ जीवनमा रहेका महात्मा थिए । महाराज युधिष्ठिर यी महात्माहरूका प्रमुख थिए र महारानी कुन्ती उनीहरूकी आमा थिइन् । भगवद्गीता सबै पुराणहरू र त्यसमा पनि विशेष गरेर श्रीमद्भागवत्का सबै शिक्षा पाण्डव महात्माहरूको इतिहाससँग जोडिएको छ । माछालाई पानीबाट अलग गरेजस्तै उनीहरूका लागि भगवान्सँगको बिछोड त्यस्तै हुन्छ । श्रीमती कुन्तीदेवीका लागि यो बिछोड एउटा वज्रपात समान थियो । त्यसैले, उनले गरेका सबै प्रार्थनाहरू भगवान्लाई आफूसँग बस्नका लागि खुसी तुल्याउनका लागि गरिएका थिए । कुरूक्षेत्रको युद्धपश्चात शत्रु राजाहरू मारिइसकेका थिए तैपनि तिनीहरूका छोरा र नातिहरू पाण्डवसँग शत्रुता राख्नका लागि जीवित नै थिए । केवल पाण्डवका लागि मात्र यस्तो शत्रुतापूर्ण अवस्थामा रहन परेको होइन, हामीहरू पनि त्यस्तै अवस्थामा छौं । त्यसैले, राम्रोसँग जीवनयापन गर्नका लागि हामी पूर्णरूपले भगवान्को इच्छामा आश्रित हुनपर्दछ अनि मात्र यस भौतिक संसारका सम्पूर्ण समस्याहरूप्रति विजय प्राप्त गर्न सकिन्छ ।

कुरूक्षेत्रको युद्ध समाप्त भएपछि पाण्डवहरू आफ्नो राज्यमा स्थापित भएपछि भगवान् श्रीकृष्ण आफ्नो निवास द्वारका जानुअघि आफ्नी फुपुसँग विदा माग्न आउनुभएको थियो। त्यस अवसरमा कुन्तीले यो प्रार्थना गरेकी हुन्। अब कुन्तीले सिधै सोध्दछिन्– "आफ्ना सबै कार्य सम्पन्न गरेर हामीलाई एक्लै छोडेर जान लाग्नुभएको हो के यो सत्य हो ?" भक्तको स्थिति यस्तो हुन्छ। कुन्तीदेवीले भनिन्- **योषां न चान्यद् भवतः पदाम्बुजात् –** "हजुरका चरणकमलबाहेक हाम्रो रक्षा गर्ने अरू कोही छैन" यो नै पूर्ण शरणागति हो।

शरणागतिको प्रक्रियामा ६ वटा विधि छन्। पहिलो मानिस पूर्णरूपले भगवान् श्रीकृष्णमा आश्रित हुनुपर्दछ। दोस्रो भगवान् श्रीकृष्णको सेवाका लागि अनुकूल प्रत्येक कुरा स्वीकार गर्नुपर्दछ (**आ नुकूलयस्य संकल्पः**) **आनुकूल्येन कृष्णानुशीलनं भक्तिरुत्तमा–** यस सेवाका लागि प्रत्येक अनुकूल वस्तुलाई स्वीकार गर्नुपर्दछ, यो नै प्रथम श्रेणीको भक्तिमय सेवाको लक्षण हो। तेस्रो शरणागतिको विधि– **प्रातिकूल्यविवर्जनम्-** कृष्णभावनाको विधिका लागि प्रतिकुल वस्तुको तिरस्कार गर्नुपर्दछ। कहिलेकाहीँ आध्यात्मिक गुरुले भन्नुहुन्छ- "यो नगर" कुनै प्रतिकूल कार्यहरू निषेध गर्नुहुन्छ र अनुकूल कार्य गर्ने सिफारिस गर्नुहुन्छ "यो कार्य गर, हरे कृष्ण कीर्तन गर"। त्यसैले, पूर्ण शरणागतिमा प्रतिकूल वस्तुको तिरस्कार र अनुकूल वस्तुलाई स्वीकार गरिन्छ। (**आनुकूलस्य संकल्पः प्रातिकुलविवर्जनम्**) अझ अघि "मलाई भगवान् श्रीकृष्णले संरक्षण गर्नुहुन्छ" भन्ने कुरामा पूर्ण विश्वास गर्नुपर्दछ र आफूलाई भगवान् श्रीकृष्णको सेवक ठान्नुपर्दछ। शरणागतिसम्बन्धी यी केही सूची हुन्।

अब कुन्तीदेवी भन्दछिन्- "हे प्रिय कृष्ण ! यदि हजुरले हामी पूर्णरूपले स्थापित भइसकेका छौं, हाम्रो राज्य हामीले फिर्ता पाइसकेका छौं, त्यसैले हजुर हामीसँगबाट बिदा लिनलाग्नु भएको हो भने त्यो त्यति राम्रो प्रस्ताव होइन। हामी अझै स्वतन्त्र भएका छैनौं किनभने हामीले धेरै राजाहरूको वध गरेका छौं र तिनका नातेदार र साथीहरू हामीसँग पुनः युद्ध गर्ने योजना बनाइरहेका छन्। त्यसकारण, हामी सबै सङ्कटबाट मुक्त भइसकेका छौं भनेर नसोच्नुहोस्। हामी सङ्कट मुक्त भएका छैनौं। हजुरका चरणकमलबाहेक हाम्रो संरक्षण गर्ने अन्य कोही पनि छैन। हाम्रो अवस्था यस्तो छ।" उनले यसप्रकारले भगवान् श्रीकृष्णलाई भनिन्– "हामीसँग बिदा नलिनुहोस्। हामी सुरक्षित छौं भन्ने नसोच्नुहोस्। हजुरको संरक्षणविना हामी सधैं नै असुरक्षित हुन्छौं।"

भक्तको स्थिति यस्तो हुनपर्दछ । हामी यस भौतिक संसारमा वास्तवमा सङ्कटमा छौं भन्ने सोच्नुपर्दछ । हामी अलिकति पनि असावधान भएर यस्तो सोच्यौं भने– "मैले मेरो कर्तव्य पूरा गरे केही समय आराम गर्दछु" । मायाले कुनै पनि समय आएर हामीलाई समात्ने छिन् । त्यसैले, आराम गर्नुहुँदैन सदैव सावधान रहनुपर्दछ ?

एउटा श्लोक छ जसमा श्रीलरूप गोस्वामी भन्नुहुन्छ- **अव्यर्थ कालत्वम्-** भक्तले आफ्नो समय व्यर्थमा नष्ट भएको छ, छैन त्यो कुरा बडो सवधान भएर हेर्नपर्दछ । उसले आफूलाई प्रश्न गर्नुपर्दछ- " म अहिले मायाको सेवामा छु कि भगवान् श्रीकृष्णको सेवामा छु ?" भक्तिमा अघि बढेको भक्तको लक्षण यस्तो हुनुपर्दछ । **नाम-गाने-सदा-रुचिः** यस्ता भक्तहरू कीर्तन गर्ने, नाच्ने, गाउने गर्दा कहिले पनि थकित हुँदैनन् । सदा भनेको सधैं र रुचि भनेको स्वाद हो । भक्तलाई हरे कृष्णको कीर्तनमा स्वाद आउँदछ । "अहो ! कति सुन्दर **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे ।**" यो नै रुचि हो । यस्तो रुचि जागृत हुन केही समय लाग्दछ । तर, जबरूप गोस्वामीले कीर्तन गरिरहनुभएको थियो । उहाँले सोच्नुभयो– "मसँग केवल एउटा जिब्रो र दुईवटा कान छन्, मैले कसरी कीर्तनको प्रशंसा गर्न सक्दछु ? यदि मेरा करोडौं जिब्रा र अरबौं कान भए अनि मात्र मैले कीर्तनको र श्रवणको रसास्वादन गर्न सक्दथें ।" निश्चय नै हामीले उहाँको अनुकरण गर्नहुँदैन तर कृष्णभावनामृत आन्दोलनका भक्तहरूले आफूलाई तोकिएको सोह्र माला जप अनिवार्य गर्नुपर्दछ । **नाम-गाने-सदा रुचि**– हामीले हरे कृष्णको कीर्तन गर्न र गाउनमा आफ्नो रुचि वृद्धि गर्नुपर्दछ ।

अझै अघि हामीले भगवान् श्रीकृष्ण निवास गर्ने (**प्रीतिस्तद्वसतिस्थले**) स्थानतर्फ आफ्नो रुचि वृद्धि गर्नुपर्दछ । उच्चस्तरका भक्तका लागि वास्तवमा भगवान् सर्वत्र निवास गर्नुहुन्छ तर हामी निम्नस्तरको अवस्थामा रहेका हुनाले भगवान् मन्दिरमा निवास गर्नुहुन्छ भन्ने कुरा बुझ्नुपर्दछ । किनभने हामीले भगवान्को सर्वत्र दर्शन गर्न सक्दैनौं । त्यसैले, भगवान्को दर्शन गर्न मन्दिर जानपर्दछ, जहाँ भगवान् कृपापूर्वक प्रकट हुनुहुन्छ र हामीले उहाँको दर्शन गर्न सक्दछौं ।

भगवान् श्रीकृष्णको शरीर पूर्णरूपले आध्यात्मिक (**सच्चिदानन्दविग्रह**) हुन्छ तर भगवान्को आध्यात्मिक शरीरको दर्शन गर्ने आँखा हामीसँग छैनन् ।

हामीलाई भौतिक स्थूल वस्तु (जड) हेर्ने बानी परेको छ । हामीले ढुङ्गा, धातु, काठ र अन्य तत्त्व देख्न सक्दछौं । भगवान् सबै हुनुहुन्छ । त्यसैले, हाम्रा अपूर्ण आँखाले दर्शन गर्न सकून् भनेर तिनै वस्तुहरूमा प्रकट हुनुहुन्छ । भगवान् श्रीकृष्ण ढुङ्गा हुनुहुन्न वा हामीले ढुङ्गाको पूजा गरिरहेका छैनौं । हामीले भगवान् श्रीकृष्णको पूजासेवा गरिरहेका छौं किनभने हामीले भौतिक तत्त्वबाहेक अन्य कुनै वस्तु देख्न सक्दैनौं । त्यसैले, भगवान् श्रीकृष्ण कृपापूर्वक कुँदिएको ढुङ्गामा प्रकट हुनुहुन्छ । त्यसैले, मानिस मन्दिरको चारैतिर वा नजिक जहाँ भगवान्को पूजा गरिन्छ, त्यस्तो वातावरणमा निवास गर्नेतर्फ उन्मुख हुनपर्दछ ।

मानिसले म सधैं भगवान् श्रीकृष्णको आश्रयमा छु भन्ने सोचिरहनुपर्दछ । यो नै कृष्णभावना वा कृष्णचेतना हो । मानिसले सधैं सोच्नुपर्दछ- "भगवान् श्रीकृष्णरहित मेरो जीवन व्यर्थ छ र म सधैं खतरामा हुन्छु ।" त्यसकारण कुन्तीले भगवान् श्रीकृष्णको प्रार्थना गर्दै भनिन्– हे कृष्ण ! हजुरले अहिले हामी सुरक्षित भयौं भन्ने सोच्नुभयो होला । तर, हामी सुरक्षित छौं भन्ने नसोच्नुहोला । हामी सधैं खतरामा नै छौं यदि हजुरले हामी सुरक्षित छौं । भन्ने सोच्नुहुन्छ भने हाम्रो सुरक्षा कसले गर्ने छ ? हजुरको चरणकमलबाहेक हाम्रो सुरक्षा गर्ने अरू केही छैन । युद्धमा मारिएकाहरूका छोराहरू जसले युद्धको तयारी गरिरहेका छन्, तिनीहरूबाट हामी घेरिएका छौं ।" हुनत अहिले भगवान् श्रीकृष्ण आफ्नी अग्रज फुपूको चरणको धूलो लिन आउनु भएको हो, तैपनि कुन्तीदेवीले भगवान्लाई प्रभु भनेर सम्बोधन गरिरहेकी छिन् । उनलाई उहाँ भगवान् हुनुहुन्छ, आफ्ना प्रिय भदा हुनुहुन्छ भन्ने ज्ञान थियो । हुनत भगवान् श्रीकृष्णले उनको भदाको अभिनय गरिरहनुभएको थियो तैपनि उहाँ परम स्वामी हुनुहुन्छ भन्ने उनलाई जानकारी थियो ।

वास्तविक कृष्णभावनाभावित मानिसको लक्षण नै हो, उसलाई भगवान् श्रीकृष्ण परमस्वामी हुनुहुन्छ भन्ने जानकारी हुन्छ, भगवान् श्रीकृष्णरहित अवस्थामा आफू सङ्कटमा छु भन्ने सोच्दछ र भगवान् श्रीकृष्णको चरणकमलको शरणमा परेपछि आफू सुरक्षित छु भन्ने ठान्दछ । **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति–** "तिमीले संसारलाई घोषणा गर, मेरा भक्तको कहिल्यै पनि विनाश हुँदैन ।" (भगवद्गीता ९.३१) । यदि कुनै व्यक्ति भगवान् श्रीकृष्णको शुद्ध भक्त बन्दछ भने ऊ खतरामा पर्ने वा उसलाई कष्ट हुने प्रश्न नै आउँदैन । निश्चय नै भगवान् श्रीकृष्णले सबैको संरक्षण गर्नुहुन्छ । उहाँको संरक्षणविना कोही पनि

एक सेकेन्ड पनि जीवित रहन सक्दैन । तर, कसैले पनि "यदि भगवान् श्रीकृष्णले सबैको संरक्षण गर्नुभएको छ भने किन भक्त बन्नुपऱ्यो ?" भनेर सोच्नुहुँदैन । एउटा राजाले आफ्ना सबै नागरिकको संरक्षण गर्दछ तर उसले आफ्ना नजिकका व्यक्तिको विशेष संरक्षण गर्दछ । यो अस्वाभाविक पनि होइन । यदि कुनै व्यक्ति राष्ट्रपतिको सीधै सेवामा संलग्न छ भने र उसलाई कुनै समस्या पऱ्यो भने उसलाई विशेष संरक्षण गरिन्छ । हुनत राष्ट्रपतिले सबै नागरिकको संरक्षण गर्दछन् तर उनका व्यक्तिगत, नजिक भएर काम गर्ने उनको सेवा गर्नेलाई उनले विशेष संरक्षण गर्दछन् । यसो गर्नु पक्षपात गरेको पनि होइन र यो स्वाभाविक पनि हो । यदि कुनै पुरुषले सबै बच्चालाई प्रेम गर्दछ तर आफ्ना बच्चालाई विशेष प्रेम गर्दछ भने कसैले पनि– "अहो ! तिमीले अरूलाई भन्दा आफ्नो बच्चालाई किन बढी प्रेम गरेको ?" भन्दैन किनभने त्यसो गर्नु स्वाभाविक नै हो । त्यसैगरेर, भगवद्गीतामा भगवान् श्रीकृष्ण भन्नुहुन्छ– **समोद्रहं सर्वभूतेषु**- "म सबै प्रति समान छु ।" भगवान् श्रीकृष्ण ईश्वर हुनुभएका हुनाले र सबै नै उहाँका अंश भएका हुनाले सबैलाई प्रेम गर्नुहुन्छ तैपनि आफ्ना भक्तहरूलाई विशेष ध्यान दिनुहुन्छ । त्यसैले, भगवान् भन्नुहुन्छ– **कौन्तेय प्रतिजानीहि न मे भक्तः प्रणश्यति**- मेरा भक्तको कहिल्यै पनि विनाश हुँदैन ।"

भगवान् श्रीकृष्णले आफ्ना भक्तहरूलाई सुविधा भयो भएन, हेर्नुहुन्छ भने भक्त आफूलाई भगवान् श्रीकृष्णको सन्तुष्टिका लागि संलग्न गराइरहन्छन् । भक्तहरूले भगवान् श्रीकृष्णलाई वस्त्र लगाउँदछन्, भोजन अर्पण गर्दछन् र सधैं उहाँको सेवामा संलग्न भइरहन्छन् । त्यसरी नै, भगवान् श्रीकृष्ण पनि सधैं आफ्ना भक्त सुखी भएको हेर्न चाहनुहुन्छ । यो नै भगवान् श्रीकृष्ण र भक्तबीचको घनिष्ठ सम्बन्ध हो । प्रत्येक जीवको भगवान् श्रीकृष्णसँग सम्बन्ध छ तर जब ऊ भक्त बन्दछ अनि उसको भगवान्सँगको सम्बन्ध घनिष्ठ बन्दछ । त्यसकारण कुन्तीदेवीले भगवान् श्रीकृष्णसँग भन्दछिन्– "हजुरले हामीलाई कसरी छोडेर जान सक्नुहुन्छ ? हामी हजुरका घनिष्ठ मित्र हौं । हामी केवल हजुरको कृपा र संरक्षणमा बाँचिरहेका छौं । त्यसकारण, हामी सुरक्षित छौं भनेर हामीलाई छोडेर जान्छु भन्ने नसोच्नुहोस् । हाम्रो जीवन हजुरको कृपाको अधीनमा छ । हजुरको चरणकमलको आश्रय बाहेक हाम्रो अन्य कुनै आश्रय छैन । त्यसैले, कृपया हामीलाई छोडेर नजानुहोस् ।" कुन्तीको प्रार्थना यस्तो थियो । नरोत्तम दास ठाकुर गाउनु हुन्छ–

**हा हा प्रभु नन्द-सुत वृषभानु-सुता-युत**
**करुणा करह एइ-बार ।**

"हे नन्द पुत्र कृष्ण ! हजुर वृषभानुकी पुत्री राधारानीसँग उपस्थित हुनुहुन्छ । म पूर्णरूपले हजुरको शरणमा पर्दछु, मलाई आफ्नो कृपा प्रदान गर्नुहोस् ।"

कृष्णभावना विना मानिसले सोच्दछन्- "म स्वयम् आफ्नो रक्षा गर्दछु वा मेरो समाज, समुदाय वा राज्यले मलाई संरक्षण प्रदान गर्दछ । मेरा संरक्षक धेरै छन् । त्यसैले, ईश्वरको किन वास्ता गर्नुपर्‍यो ? म भगवान् श्रीकृष्णको शरणमा नगए पनि हुन्छ ।" तर तथ्य के हो भगवान् श्रीकृष्णले सुरक्षा प्रदान नगरेसम्म कोही पनि सुरक्षित हुन सक्दैन । यो कुरा श्रीमद्भागवत् (७.९.१९) मा उल्लेख गरिएको छ- **बालस्य नेह शरणं पितरौ नृसिंह** । महाराज प्रह्लादले भगवान् श्रीकृष्णको प्रार्थना नृसिंहदेवको रूपमा गर्दै उनले भनेका थिए– "हे प्रिय भगवान् ! कसैले पनि वच्चाका मातापिता छन्, त्यसैले, ऊ पूर्ण सुरक्षित छ भनेर सोच्नुहुँदैन । यदि भगवान् श्रीकृष्णले रक्षा गर्नुभएन भने त्यस बच्चाको हजारौं मातापिता भए पनि त्यसको रक्षा हुन सक्दैन ।" प्रह्लादले भने- **नार्तस्य चागदम् उदन्वति मज्जतो नौः** "कुनै पनि विशिष्ट चिकित्सक वा औषधि कुनैले पनि रोगबाट रक्षा गर्ने होइन ।" यदि कुनै धनी व्यक्ति कुनै रोगले पीडित छ र उसले विशेषज्ञ चिकित्सकबाट उपचार गराउँदछ, उच्चस्तरको औषधी सेवन गर्दछ । तैपनि, त्यसो गर्नाले उसको जीवन सुरक्षित छ ? छैन । यदि भगवान् श्रीकृष्णले संरक्षण गर्नुभएन भने राम्रो उपचार र उच्चस्तरको औषधी सेवन गरेपनि उसको मृत्यु हुन्छ । प्रह्लाद अघि भन्दछन्- यसरी नै राम्रो नाउ छ, तैपनि त्यो नाउ समुद्रमा डुब्दैन भन्ने कुनै निश्चितता हुँदैन । यदि हजुरले रक्षा गर्नुभएन भने त्यो नाउ कुनै पनि क्षण डुब्न सक्दछ ।" प्रकृतिले विभिन्न प्रकारका कठिनाइहरू दिन्छिन्, ती कठिनाइहरूबाट मुक्ति पाउनका लागि र आफ्नो अस्तित्व जोगाउनका लागि सङ्घर्ष गर्नका लागि वैज्ञानिकहरूले विभिन्न प्रकारका शोध कार्य गर्दछन् तर यदि भगवान् श्रीकृष्णले रक्षा गर्नुभएन भने ती सबै शोध व्यर्थ हुन्छन् ।

कुन्तीदेवीलाई यो सबै जानकारी थियो, हुनत उनी महान् योद्धा भीम र अर्जुनकी आमा थिइन् तैपनि उनले सोचिन्– "यद्यपि मेरा छोराहरू महान् योद्धा हुन् तैपनि हामीलाई सुरक्षा प्रदान गर्न पर्याप्त छैनन् । हजुरका चरणकमलवाहेक अन्य कसैले पनि हामीलाई संरक्षण प्रदान गर्न सक्दैनन् । "यो श्लोकले भगवान्

श्रीकृष्णको संरक्षण चाहने शरणागतिको स्थिति कस्तो हुन्छ भनेर व्याख्या गरेको छ। यदि हामीले हाम्रा रक्षक केवल भगवान् श्रीकृष्ण मात्र हुनुहुन्छ भन्ने जानेर यो स्थितिमा रह्यौं भने र हाम्रो एक मात्र कर्तव्य भगवान् श्रीकृष्णको सेवा गर्नु हो भन्ने जान्यौं भने मात्र हाम्रो जीवन सफल हुन्छ।

***

# २१. हाम्रो वास्तविक मूल्य के हो ?

**के वयं नामरूपाभ्यां यदुभिः सह पाण्डवाः ।**
**भवतोद्रदर्शनं यर्हि हृषीकाणाम् इवेशितः ॥**

जसरी आत्मा अदृश्य हुनासाथ शरीरको नाम र यश समाप्त हुन्छ, त्यसरी नै यदि हजुरले आफ्नो कृपादृष्टि हामीलाई दिनुभएन भने पाण्डव, यदुहरूसहित हाम्रो यश एक क्षणमा नै समाप्त हुन्छ ।

**–(श्रीमद्भागवत् १.८.३८)**

एकमात्र भगवान् श्रीकृष्णका कारणले नै पाण्डवहरूको अस्तित्व रहेको थियो भन्ने कुरा प्रति कुन्तीदेवीलाई पूर्णरूपले ज्ञान थियो । निस्सन्देह पाण्डव आफ्ना नाम र यशद्वारा पूर्ण रूपले स्थापित भएका थिए र धर्मात्मा राजा युधिष्ठिरले मार्ग दर्शन गरेका थिए । यदुका उनीहरू मित्र थिए तैपनि जसरी चेतनाविना शरीर निष्प्राण हुन्छ वा अर्थहीन हुन्छ । त्यसरी भगवान् श्रीकृष्णको मार्ग निर्देशनविना उनीहरूको कुनै अस्तित्व नै थिएन । कसैले पनि आफ्नो नाम, यश, प्रतिष्ठा शक्तिप्रति घमण्ड गर्नुहुँदैन जबसम्म भगवान्को कृपापूर्ण निर्देशन प्राप्त हुँदैन, जीवहरू सधैं नै आश्रित छन् । जीवका विश्वसनीय परम् आश्रय केवल भगवान् स्वयम् हुनुहुन्छ । त्यसैले, हामीले भौतिक ज्ञानको जति धेरै खोज गरे पनि त्यसबाट प्रशस्त भौतिक स्रोतहरू प्राप्त गरे पनि भगवान्को मार्ग निर्देशनविना त्यो सबै खोज जतिसुकै सशक्त र प्रतिक्रियाकारी भएपनि व्यर्थ नै हुन्छ ।

जब कुनै प्रसिद्ध व्यक्तिको मृत्यु हुन्छ, ऊ जति ठुलो महान् वैज्ञानिक राजनीतिज्ञ वा दार्शनिक भए पनि उसको नाम र रूप महत्त्वहीन हुन्छ । जबसम्म हामी जीवित हुन्छौं, तबसम्म हाम्रा नाम, रूप र क्रियाकलापहरू गौरवपूर्ण हुन्छन् तर जब मृत्यु हुन्छ अनि यो शरीर केवल एउटा पदार्थको थुप्रो मात्र हुन्छ । जब कुनै महत्त्वपूर्ण व्यक्ति जीवित हुन्छ, उसका धेरै अङ्गरक्षकहरू

हुन्छन् अनि कोही पनि उसको अघि जान सक्दैन, उसलाई स्पर्श गर्न सक्दैन तर जब उसको मृत्यु हुन्छ, ऊ भूइँमा सुतेको हुन्छ । जो कोहीले पनि उसको अनुहारमा लात हान्न सक्दछ कसैले ध्यान पनि दिँदैनन् । आत्मा शरीरबाट अदृश्य हुनासाथ महत्त्वपूर्ण व्यक्तिको शरीरको कुनै अर्थ नै हुँदैन । त्यो आत्मा के हो ? त्यो भगवान् श्रीकृष्णको शक्ति हो र भगवान् श्रीकृष्णको अंश हो । जब शक्ति हटाइन्छ अर्थात् जब भगवान् श्रीकृष्ण त्यस शरीरमा हुनुहुन्न अनि त्यो शरीर महत्त्वहीन बन्दछ ।

भगवान् श्रीकृष्णको शक्ति र भगवान् श्रीकृष्ण स्वयम्मा कुनै भिन्नता छैन (**शक्ति शक्तिमतोरभेदः**) । उदाहरणका लागि सूर्य शक्तिमान् हो र सूर्यको प्रकाश उसको शक्ति हो । जबसम्म सूर्य विद्यमान् रहन्छन् तबसम्म सूर्यको प्रकाश रहन्छ । सूर्यको अनुपस्थितिमा सूर्यको शक्ति पनि रहँदैन । शक्ति र शक्तिमान् दुवै विद्यमान् हुनपर्दछ । यद्यपि मायावादी दार्शनिकहरूले शक्तिमानलाई स्वीकार गर्दैनन्, तर निर्विशेष शक्तिलाई भने स्वीकार गर्दछन् । हामीले भने शक्ति र शक्तिमान दुवैलाई स्वीकार गर्नुपर्दछ ।

शक्तिले कार्य गरिरहँदा शक्तिमान अलग्गै रहन्छ, जसरी सूर्यको प्रकाश सर्वत्र फैलिरहँदा पनि सूर्य अलग्गै रहन्छन्, त्यसरी नै शक्तिले सम्पूर्ण ब्रह्माण्डमा कार्य गरिरहेको हुन्छ । यो ब्रह्माण्ड पृथ्वी, पानी, आगो, हावा, आकाश, मन, बुद्धि र अहङ्कारले युक्त हुन्छ । यी आठ भौतिक तत्त्व विभिन्न प्रकारका भौतिक शक्तिहरू हुन् (**मे भिन्ना प्रकृतिरष्टधा**) र यी शक्तिको पछाडि कुनै शक्तिमान्को स्रोत छ भन्ने कुरा हामी बुझ्न सक्दछौं । उदाहरणका लागि हामीले विद्युतीय शक्ति प्रयोग गरिरहेका छौं । त्यसको पछाडि विद्युतगृह र अभियन्ता हुन्छन् । तर, दुष्टहरूले यो बुझ्न सक्दैनन् । तिनीहरूले केवल ब्रह्माण्डको शक्ति मात्र देख्दछन् तर, त्यो शक्तिको पछाडि स्रोत रूपी शक्ति निर्माता हुन्छ भन्ने बुझ्न सक्दैनन् । त्यसैले, भगवान् श्रीकृष्ण आएर भन्नुहुन्छ– " म शक्ति निर्माता हुँ र म नै शक्तिको पछाडि रहने गर्दछु ।"

भगवान् श्रीकृष्णको दर्शन गर्ने हामीसँग आँखा नभएकाले हामीले उहाँलाई बुझ्न सक्दैनौं । त्यसैले, उहाँ स्वयम् आउनुहुन्छ । जब हामीले भगवान्को स्वरूपको चिन्तन गर्दछौं, अनि हामी सोच्दछौं भगवान्ले करोडौं वर्षअघि यो सृष्टि गर्नुभएको हो । त्यसैले, उहाँ निश्चय नै वृद्ध पुरुष हुनुहुन्छ होला । त्यसरकाण, भगवान् स्वयम् हाम्रो अघि आउनुहुन्छ अनि हामीले उहाँ को हुनुहुन्छ

भनेर दर्शन गर्न सक्दछौं । यो नै उहाँको दयालुपन हो । भगवद्गीता (४.७) मा भगवान् भन्नुहुन्छः–

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम् ॥**

"हे भरतवंशी ! जहिले पनि र जहाँ पनि धर्मको पतन हुन्छ र अधर्मको प्रधानता एवम् वृद्धि हुन्छ, त्यससमय मैले अवतार लिने गर्दछु ।"

भगवान् यस संसारमा सशरीर आउनुहुन्छ र भगवद्गीता जस्ता उपदेश छोडेर जानुहुन्छ । केही भक्तहरू पनि छोड्नुहुन्छ, जसले भगवान्का बारेमा वर्णन गर्न सक्दछन् तैपनि हामी हठी छौं भगवान्लाई स्वीकार गर्दैनौं । यो मूर्खता नै हो । जसले भगवान्लाई मान्दैनन् तिनलाई भगवद्गीतामा **मूढः** अर्थात् मूर्ख वा दुष्ट भनिएको छ ।

ईश्वर र ईश्वरको शक्ति दुवैको अस्तित्व छ । ईश्वरलाई देख्न नसके पनि उहाँको शक्तिलाई भने देख्न सक्दछौं । हामीले विद्युत गृह र अभियन्तालाई नदेख्न सक्दछौं तर त्यसबाट उत्पादित विद्युतीय शक्तिलाई विभिन्न प्रकारले उपभोग भने गरिरहेका छौं । त्यसकारण, हामीले यो विद्युतीय शक्ति कहाँबाट आयो भनेर जिज्ञासा राख्नुपर्दछ । यो नै बुद्धिमत्ता हो र यसरी प्रश्न गरेपछि अन्त्यमा परिणाममा उसले विद्युतीय गृह भेट्दछ । त्यसैगरेर अझै अघि जब उसले यो विद्युत गृह कसले सञ्चालन गरेको छ भनेर खोज्यो भने कुनै व्यक्तिलाई भेट्दछ । हुनतः विद्युत निर्विशेष हो र विद्युतगृह पनि निर्विशेष नै हो तर सञ्चालन गर्ने भने व्यक्ति हुन्छ । त्यसरी नै भगवान् पनि पुरुष वा व्यक्ति हुनुहुन्छ । यो नै तर्कपूर्ण निष्कर्ष हो । उहाँ कसरी निर्विशेष वा निराकार हुन सक्नुहुन्छ ? जो निर्विशेष हुन्छ, उसको बुद्धि हुँदैन । हामीले धेरै प्रकारका आश्चर्यजनक यन्त्रहरूको आविष्कार गरेका छौं तर ती यन्त्र बुद्धिमान् छैनन् । जसले सञ्चालन गर्दछ, ऊसँग मात्र बुद्धि हुन्छ । त्यसकारण, भगवान् श्रीकृष्ण भन्नुहुन्छ– **मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्**- "तिमीले यस भौतिक ब्रह्माण्डमा जुन अद्भुत क्रिया र प्रतिक्रियारूपी शक्ति प्रदर्शित भएको देखेका छौ, ती स्वतन्त्ररूपले आफैं सञ्चालित छन् भन्ने नसोच्नु, त्यस सञ्चालनको पछि म छु ।"

भगवान् श्रीकृष्ण भन्नुहुन्छः-

**मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना ।**
**मत्स्थानि सर्वभूतानि न चाहं तेष्ववस्थितः ॥**

"यो सम्पूर्ण ब्रमाण्ड मेरो अव्यक्त रूपद्वारा व्याप्त छ । सम्पूर्ण जीव ममा छन् । म तिनीहरूमा छैन ।" (भगवद्गीता ९.४) । जुन अव्यक्त छ, उसको पनि मूर्ति वा स्वरूप हुन्छ । उदाहरणका लागि आकाश जुन अव्यक्त हो, तैपनि उसको पनि रूप हुन्छ, ब्रह्माण्डको गोलाकार रूप । यदि हामी समुद्रको किनारमा गयौं भने त्यहाँ पनि एउटा गोलाकार रूप देख्न सक्दछौं । सबैको रूप हुन्छ, निर्विशेष भनेर कल्पना गरिएको पनि रूप हुन्छ ।

त्यसकारण, 'प्रत्येक वस्तु शून्य र तथाकथित शून्यताको पछि' भन्ने विचार मूखर्तापूर्ण हो । निराकार रूप र तथाकथित शून्यताको पछि परम रूप भगवान् श्रीकृष्ण हुनुहुन्छ– **ईश्वरः परमः कृष्णः सच्चिदानन्द विग्रहः** । 'ईश्वर' भनेको 'नियन्त्रक' हो । प्रकृति आफैं नियन्त्रित छैन उसलाई नियन्त्रण गर्न सही नियन्त्रक भगवान् श्रीकृष्ण हुनुहुन्छ । **इच्छानुरूपम् अपि यस्य च चेष्टते सा** । ब्रह्मसंहिता (५.४४) मा भनिएको छ- भौतिक प्रकृतिको मूर्ति प्रकृति वा दुर्गाले भगवान् श्रीगोविन्द वा कृष्णको निर्देशनमा कार्य गरिरहेकी छिन् । उनले कसरी कार्य गरेकी छिन् ? जसरी छायाले कार्य गर्दछ, त्यसरी नै । हाम्रो हात मुनि छाया हुन्छ, हात चल्यो भने छाया पनि चल्दछ । सम्पूर्ण व्यक्त वा प्रकट भएका जीव सबैको पछि गति हुन्छ । कहिलेकाहीँ मैले रेलका डिब्बाको दिशा परिवर्तन गर्ने कार्यको उदाहरण दिने गर्दछु । इन्जिन वा यन्त्रले एउटा डिब्बालाई धकेल्दछ त्यसले अर्को डिब्बालाई धकेल्दछ, त्यसले फेरी अर्कोलाई धकेल्दछ । त्यसरी नै, यो ब्रह्माण्डलाई गति दिने को हो ? आदि वा मूल गति दिने भगवान् श्रीकृष्ण नै हुनुहुन्छ ।

अब कुन्तीदेवी भन्दछिन्– " हामी पाण्डव प्रसिद्ध भयौं र हामी महत्त्वपूर्ण भयौं भनेर मानिसहरू भन्दछन् । किन ? किनभने हजुर हाम्रा मित्र हुनुहुन्छ ।" भगवान् श्रीकृष्ण पाण्डवका मित्र हुनुहुन्थ्यो र विशेष गरेर अर्जुनका मित्र हुनुहुन्थ्यो । त्यसैले, गर्दा अर्जुन महान् योद्धा थिए । तर कुन्तीदेवीलाई ज्ञान थियो– मानिसहरू भन्दछन् "पाण्डव महान् योद्धा र वीर छन् । तर, मेरा छोरा पाण्डवको के नै अर्थ छ ? त्यसैगरेर, यदुवंशी प्रसिद्ध भयो किनभने त्यस वंशमा भगवान् श्रीकृष्णले जन्म लिनुभयो ।" तर, कुन्तीदेवी भन्दछिन्- **के वयं**- हामी के हौं र ? हाम्रो के मूल्य नै छ ? **के वयं नामरूपाभ्याम्**– "हाम्रो नाम र रूप छ तर हजुरविना यो अर्थहीन् छ, यसको कुनै मूल्य छैन ।

मानिसले यो कुरा बुझ्न सक्दैन । तिनीहरू आफ्नो सुन्दर शरीर र नाम पाएर नै अति अभिमानी भएका छन् । उनीहरू सोच्दछन्– "म अमेरिकी हुँ", "म भारतीय हुँ", "म जर्मन हुँ" आदि तर, त्यो सबै के नै हो र ? ती सबै व्यर्थका नाम र रूप हुन्, तिनको कुनै अर्थ नै छैन ।

यदि हामीले भगवान् श्रीकृष्णलाई घटायौं वा छोड्यौं भने सबै शून्य हुन्छ । यो वास्तविकता हो । तर, मानिस यति दुष्ट छन् कि उनीहरूले यो तथ्यलाई बुझ्न नै सक्दैनन् । तर, कसले नै यसलाई अस्वीकार गर्न सक्दछ र ? अमेरिकी शरीर र भारतीय शरीरका लागि राम्रो नाम दिइएको हुन सक्दछ तर यदि चेतनाविहीन छ भने त्यसको के अर्थ ? कुनै अर्थ छैन । त्यसैले, भनिएको छ ।

**भगवद्भक्तिहीनस्य जातिः शास्त्रं जपस्तपः ।**
**अप्राणस्येव देहस्य मण्डनं लोकरञ्जनम् ॥**

"यदि कुनै व्यक्ति भगवान् श्रीकृष्णको भक्तिरहित छ भने वा राष्ट्रको उच्च परिवारमा जन्मिएको छ, शास्त्रको ज्ञान छ, उसले गरेको तपस्या, उच्चारण गरेको वैदिक मन्त्र सबै शवमा अलङ्कार जस्तै मात्र हुन्छ । यस्ता अलङ्कारहरूमा सामान्य व्यक्तिका लागि मनोरञ्जन प्रदान गर्ने मात्र हुन्छ ।" (हरिभक्तिसुधोदय ३.११)

हामी सबैसँग चेतना छ तर त्यो चेतना के हो ? त्यो कृष्णचेतना वा कृष्णभावनामृत हो । हामीले भगवान् श्रीकृष्णलाई भुल्यौं, त्यसकारण केवल 'चेतना' भन्दछौं तर सही चेतनाको अर्थ 'कृष्णचेतना' वा कृष्णभावनामृत नै हो, किनभने भगवान् श्रीकृष्णरहित हामीमा चेतना हुनै सक्दैन । सूर्यविना कसरी सूर्यको प्रकाश हुन सक्दछ ? त्यसकारण हामी 'सूर्यप्रकाश' भन्दछौं । केवल 'प्रकाश' भन्दैनौं । त्यसरी नै 'चेतना' को अर्थ 'कृष्णचेतना' हो । यो बुझ्नका लागि अलिकति बुद्धिको आवश्यकता पर्दछ । कुन्तीजस्ता भक्तसँग यो बुझ्नका लागि बुद्धि हुन्छ । त्यसैले, कुन्ती भन्दछिन्- "पाण्डव र यदु महत्त्वपूर्ण छन् तर तिनीहरूको वास्तविक मूल्य के छ ?"

किनभने भगवान् श्रीकृष्ण विदा लिएर जाँदै हुनुहुन्थ्यो । त्यसैले, कुन्ती शोक गर्दै थिइन्- "हजुर जाँदै हुनुहुन्छ, हामीले अब हजुरको दर्शन गर्न पाउनेछैनौं । त्यसैले, हाम्रो नाम र यशको के अर्थ भयो ?" **भवतोऽदर्शनं यर्हि हृषीकाणाम्**

**इवेशितुः** । जसरी प्राणविहीन इन्द्रियहरू अर्थहीन् हुन्छन्, त्यसरी नै भगवान् श्रीकृष्णविना उनीहरू पनि अर्थहीन् हुन्छन् भन्ने उदाहरण कुन्तीले दिएकी छिन् । यस भौतिक संसारमा हामीहरू इन्द्रियभोगको कामना गर्दछौं तर कृष्णचेतनाविना वा भगवान् श्रीकृष्णविना इन्द्रियभोग गर्ने सम्भावना नै हुँदैन । हामीसँग बलिष्ठ हात र गोडा हुन सक्दछन् तर तिनमा चेतना नभए वा कृष्ण्चेतना नभए हामीले तिनीहरूलाई प्रयोग गर्न सक्दैनौं । त्यसैले, बुद्धिमान् व्यक्तिले भगवान् श्रीकृष्णविना उसका इन्द्रियहरूको कुनै महत्त्व छैन भन्ने कुरा बुझ्दछ त्यसैले, ऊ भक्त बन्दछ । भगवान् श्रीकृष्ण र इन्द्रियहरूबीच घनिष्ठ सम्बन्ध छ भन्ने सही निष्कर्ष उसले निकाल्दछ । त्यसैले, जबसम्म इन्द्रियहरू सक्रिय रहन्छन्, तबसम्म तिनलाई भगवान् श्रीकृष्णको सेवामा लगाउनु नै उसको कर्तव्य हो । यो नै भक्ति हो ।

उदाहरणस्वरूप मैले धेरै पटक भन्ने गर्दछु, यदि कुनै सभा स्थलमा कसैको खल्तीबाट सय डलर भूईंमा खस्यो र कसैले त्यो डलर टिपेर आफ्नो खल्तीमा राख्यो भने त्यो चोर हो किनभने त्यो डलर उसको होइन । यसलाई भोग वा झुटो सुख भनिन्छ । अर्को व्यक्तिले सोच्न सक्दछ- "मैले यो किन छुने ? यो अन्य कसैको हो । यो यसै रहिरहोस् । मैले यस सम्बन्धमा केही गर्नुछैन ।" यसलाई त्याग भनिन्छ । हुनत त्यो सय डलर एउटै हो तर एउटाले त्यसको भोग गर्न चाहन्छ, अर्काले त्याग गर्न चाहन्छ । तर, ती दुवै भोगी र त्यागी मूर्ख हुन् ।

भोगीहरू कर्मी हुन्, उनीहरू वैज्ञानिकहरूले अनुसन्धान गरेर धेरै स्वार्थ साधन गरेजस्तै कठिन परिश्रम गर्दै भौतिक प्रकृतिका स्रोतको शोषण गर्दछन् । वास्तवमा उनीहरूको इच्छा चोर्नु नै हुन्छ । अर्को त्यागी चोर्न नसक्ने हुनाले "अङ्गुर अमिलो छ" भन्ने दर्शनमा रहन्छ । अहो ! यी वस्तु अर्थहीन् छन्, यिनको आवश्यकता नै छैन ।" धेरै जसो व्यक्ति भोगी छन् र तिनीहरू इन्द्रियतृप्तिका लागि सबै वस्तु प्रयोग गर्ने प्रयास गर्दछन् । त्यसैले, "होइन, होइन, हामीलाई यी वस्तुको आवश्यकता नै छैन" भन्दछन् ।

त्यही उदाहरणमा सय डलर पाउने असल व्यक्तिले भने त्यो लिएर भन्दछ- "कसैले यो डलर हराएको रहेछ, मैले यसको मालिक खोजिरहेको छु ।" त्यो डलर फिर्ता दिएर नै उसले सही सेवा गर्दछ । जसले यो डलर आफूसँग राख्दछ र जसले त्यो डलर छोड्दछ, दुवै नै व्यर्थ हुन् । त्यसैगरेर, भोगी र त्यागी दुवै

नै व्यर्थ हुन् तर, भक्तलाई भने सबै वस्तु भगवान् श्रीकृष्णका हुन् भन्ने ज्ञान हुन्छ । त्यसैले, यी सबै भगवान् श्रीकृष्णलाई अर्पण गर्नुपर्दछ भन्दछ । यो नै सही सेवा हो ।

हरेक वस्तु भगवान् श्रीकृष्ण हुनुहुन्छ । यो शरीर के हो ? यो केवल भौतिक तत्त्व पृथ्वी, पानी, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कारको सम्मिश्रण मात्र हो । भगवान् श्रीकृष्ण दाबी गर्नुहुन्छ- "यी सबै आठ तत्त्व मेरा भिन्दै शक्ति हुन् ।" त्यसो हो भने मन र शरीर कसरी हाम्रो भयो ? यद्यपि मैले यो शरीर मेरो हो भनेर दाबी गर्दछु तर यसले कार्य गर्दछ भन्ने कुरा मैले जान्दिन । कुनै अपार्टमेन्टमा बस्ने व्यक्तिले त्यसको भाडा दिन्छ र त्यहाँ बसेर सबै सुविधाको उपभोग गर्दछ तर उसलाई बिजुली र पानीले कसरी काम गरेको छ भन्ने जानकारी हुँदैन । त्यसरी नै हामीलाई यस शरीरले कसरी काम गर्दछ भन्ने बारेमा विस्तृत जानकारी छैन तैपनि यो शरीरको उपभोग गरिरहेका छौं तर वास्तवमा यो शरीर हाम्रो होइन, भगवान् श्रीकृष्णको हो । यो नै सही तथ्य हो ।

म आत्मा हुँ तर मलाई यो भौतिक शरीरको प्रयोग गर्ने अवसर प्रदान गरिएको छ । किनभने मैले नै यस्तो शरीरको चाहना गरेको थिएँ । भगवान् श्रीकृष्ण यति दयालु हुनुहुन्छ त्यसैले, मलाई यो शरीर प्रदान गर्नुभएको हो । **ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम्** । यदि कसैले राजाको शरीर चाहन्छ भने उसले सिफारिस गरिएको विधिको पालना गरेमा भगवान् श्रीकृष्णले उसलाई राजाको शरीर प्रदान गर्नुहुन्छ । यदि कसैले सुँगुरको शरीरको चाहना गरी दिसा खान चाहेमा भगवान् श्रीकृष्णले त्यस्तो शरीर पनि दिनुहुन्छ तर मानव शरीर प्राप्त गरेपछि हामीले के बुझ्नुपर्दछ भने– "सबै वस्तु भगवान् श्रीकृष्णका हुन् । किन म मेरो हो भनिने यो शरीररलाई सन्तुष्ट गर्न तीब्र इच्छुक हुने ?" बरु अहिले मसँग यो शरीर छ, त्यसैले भगवान् श्रीकृष्णको सेवा नै गर्दछु ।" यो नै बुद्धिमत्ता हो र भक्ति हो ।

**हृषीकेण हृषीकेशसेवनं भक्तिरुच्यते-** भक्तिको अर्थ **हृषीक** अर्थात् इन्द्रियहरूलाई भगवान् हृषिकेश कृष्णको सेवामा प्रयोग गर्नहुन्छ । (**त्वया हृषीकेशेन हृदि स्थितस्य यथा करोमि**) । किनभने वास्तवमा हरेक वस्तु भगवान् श्रीकृष्णका हुन् भन्ने कुरा भुलेर मैले इन्द्रियतृप्ति गर्ने चाहना गरे । त्यसैले, इन्द्रियतृप्तिको साधनरूपी यो शरीर मलाई प्रदान गरियो । तर, भगवान् श्रीकृष्णविना यी इन्द्रियहरू भगवान् श्रीकृष्णका नै हुन् । त्यसकारण जब मसँग

यी इन्द्रिहरू छन् मैले यिनलाई भगवान् श्रीकृष्णको सन्तुष्टिको लागि किन प्रयोग नगर्ने ? यो नै भक्ति हो ।

***

# २२. भगवान् श्रीकृष्णको उपस्थितिमा नै सुन्दरता हुन्छ

**नेयं शोभिष्यते तत्र यथेदानीं गदाधर ।**
**त्वत्पदैरङ्किता स्वलक्षणविलक्षितः ॥**

हे गदाधर (कृष्ण) ! अहिले हाम्रो राज्य हजुरका चरणचिन्हले अङ्कित छन्, त्यसैले, यो सुन्दर देखिएको छ । तर हजुर जानु भएपछि यो त्यस्तो देखिएको छैन ।

**–(श्रीमद्भागवत् १.८.३९)**

भगवान्का चरणकमलमा केही विशेष चिन्हहरू अङ्कित छन् जसको कारणले गर्दा उहाँ अरू भन्दा भिन्न हुनुहुन्छ । भगवान्को चरणको पाइतालामा ध्वज, बज्र, अङ्कुश, छाता, कमल, चक्र, अङ्कित हुन्छन् । भगवान् जहाँ भ्रमण गर्नुहुन्छ, त्यहाँको मुलायम जमिनमा यी चिन्ह अङ्कित हुन्छन् । भगवान् श्रीकृष्ण जब पाण्डवसँग हस्तिनापुरमा निवास गर्नुभएको थियो, त्यहाँको भूमि यी शुभ लक्षणरूपी चिन्हका कारणले पाण्डवको राज्य समृद्ध भएको थियो । कुन्तीदेवीले यिनै सुप्रसिद्ध लक्षणहरूतर्फ सङ्केत गरेकी थिइन् । साथै, भगवान्को अनुपस्थितिमा दुर्भाग्य नआओस भनेर भयभीत पनि भएकी थिइन् ।

चाणक्य श्लोकमा महान् नीतिज्ञ चाणक्य पण्डितले निम्न लिखित सुन्दर श्लोकद्वारा निर्देशन गरेका छन्-

**पृथिवीभूषणं राजा नारीणं भूषणं पतिः ।**
**शर्वरीभूषणं चन्द्रो विद्या सर्वस्य भूषणम् ॥**

"जब कुनै वस्तुसँग कसैको घनिष्ठ सम्बन्ध हुन्छ अनि प्रत्येक वस्तु सुन्दर लाग्दछ । उदाहरणका लागि आकाशको चन्द्रमासँग सम्बन्ध भए सुन्दर देखिन्छ । आकाश सदैव हुन्छ तर पूर्णिमाको रातमा जब चन्द्रमा र ताराहरू चम्कन्छन् अनि आकाश सुन्दर देखिन्छ । त्यसरी नै राज्य सुन्दर हुन्छ, जब राम्रो सरकारका राम्रा

राजा वा राष्ट्रपति हुन्छन्, अनि सबै खुसी हुन्छन् र सबै कार्य ठीकसँग सम्पन्न हुन्छन्। हुनत युवति स्वभावले नै सुन्दर हुन्छिन् तर आफ्ना पतिसँग विशेषरूपले सुन्दर देखिन्छिन्। **विद्या सर्वस्य भूषणम्**- तर कुनै व्यक्ति कुरूप भए पनि यदि ऊ विद्वान् छ भने त्यो नै उसको सुन्दरता हो। त्यसरी नै प्रत्येक वस्तु सुन्दर देखिन्छ जब त्यहाँ भगवान् श्रीकृष्ण उपस्थित हुनुहुन्छ।

त्यसकारण, कुन्तीदेवीले सोच्दछिन्– "जबसम्म भगवान् श्रीकृष्ण हामीसँग बस्नुहुन्छ, तबसम्म हाम्रो राज्य र हस्तिनापुरका सबै वस्तु सुन्दर देखिन्छन् तर जब भगवान् श्रीकृष्ण अनुपस्थित हुनुहुन्छ, तब हाम्रो राज्य सुन्दर देखिनेछैन।"

उनले भनिन्- "के कृष्ण ! अहिले हजुर हाम्रो राजधानीमा भ्रमण गरिरहनुभएको छ र हजुरका चरण चिन्हले सबै वस्तुलाई सुन्दर बनाइरहेका छन्। सर्वत्र पर्याप्त पानी छ, फलफूल छ र सबै वस्तु सुन्दर देखिएका छन् तर जब हजुर यहाँबाट जानुहुनेछ, तब ती सबै वस्तु सुन्दर देखिनेछैनन्।"

यसको अर्थ भगवान् श्रीकृष्ण जब उपस्थित हुनुहुन्थ्यो, त्यससमयका लागि मात्र यो कुरा लागु हुने हो भनेर कुन्तीले भनेकी होइनन्। यो सत्यता सधैँ समान नै हुन्छ। हाम्रो सभ्यताको विकास भए पनि यदि हामीले भगवान् श्रीकृष्ण र कृष्णभावनामृतलाई केन्द्रविन्दु बनाएनौं भने हाम्रो सभ्यता कहिल्यै पनि सुन्दर बन्न सक्दैन। जो कृष्णभावनामृत आन्दोलनमा संलग्न भएका छन् तिनीहरू यस भन्दाअघि पनि सुन्दर थिए तर जब उनीहरू कृष्णभावनाभावित भए उनीहरू विशेषरूपले सुन्दर देखिएका छन्। त्यसकारण, समाचारपत्रहरूले धेरै जसो "तेजले युक्त अनुहार" भनेर भक्तहरूको वर्णन गर्ने गर्दछन्। यिनका देशवासहीरू "यी बालक बालिकाहरू कति प्रसन्न र सुन्दर भएका हुन्" भन्दछन्। वर्तमान अवस्थामा अमेरिकाका युवा पुस्ताहरू असमञ्जस र निराश छन्। त्यसैले, तिनीहरू दुःखित र कालो अनुहारका देखिन्छन्। किन देखिन्छन् ? किनभने तिनीहरूको जीवनमा कुनै उद्देश्य छैन तर, कृष्णअनुयायी भक्तहरू भने भगवान् श्रीकृष्णको उपस्थितिले गर्दा धेरै सुन्दर देखिन्छन्।

त्यसकारण पाँच हजार वर्षअघि पाण्डवको समयमा जुन यथार्थ थियो, त्यो यथार्थ अहिले पनि छ। भगवान् श्रीकृष्णलाई केन्द्रमा स्थापित गर्ने हो भने सबै वस्तु सुन्दर देखिन्छन् र भगवान् श्रीकृष्ण कुनै पनि समय केन्द्र बन्न सक्नुहुन्छ। भगवान् श्रीकृष्ण सदैव उपस्थित हुनुहुन्छ। केवल हामीले "मेरा भगवान्! कृपया आउनुहोस् र मेरो केन्द्र बनिदिनुहोस् भनेर आमन्त्रण गर्नुपर्दछ, यति मात्र हो।

उदाहरणका लागि मैले पहिला पनि भनेको थिएँ, शून्यको कुनै मूल्य हुँदैन तर त्यसको अघि एक थपेमा दश हुन्छ । त्यसैले, मानिसले जे कार्य गरिरहेको छ त्यो रोक्न वा बन्द गर्न आवश्यक छैन । हामी "सबै भौतिक कार्य बन्द गर" भन्दैनौं, केवल भगवान् श्रीकृष्णलाई आफ्नो कार्यमा सम्मिलित गर भन्दछौं ।

निश्चय नै कृष्णभावनामृतविरुद्ध हुने कार्य भने हामीले छोड्नुपर्दछ । हामीले भौतिक कार्य बन्द नगर्ने भन्नुको तात्पर्य मांसाहार बन्द नगर्नु भन्ने होइन । हामीले मांसाहार बन्द गर्नैपर्दछ, किनभने यो कार्य कृष्णभावनामृतमा प्रगति गर्नका लागि विरुद्ध कार्य हो । कसैले पनि पापकर्म गर्दै कृष्णभावनामृतमा प्रगति गर्न सक्दैन । तर भगवान् श्रीकृष्ण भन्नुहुन्छ- **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि–** "मेरो शरणमा आऊ, म तिमीलाई तिम्रा पाप कर्मको प्रतिफलबाट मोक्ष प्रदान गरेर तिम्रो रक्षा पनि गर्दछु ।"

हामी सबैले जानेर होस् वा नजानेर होस्, जन्म जन्मान्तरमा पापमय कर्महरू गरिरहेका छौं । यदि मैले जानेर नै पशु वध गर्न सक्दछु भने निश्चय नै त्यो पापकर्म हो तर यदि नजानेर भएपनि पशुवध गरेँ भने त्यो पनि पापकर्म नै हो । सडकमा हिँड्दा हामीले धेरै कमिलालाई मार्दछौं । हाम्रो अन्य सामान्य व्यवहारमा पनि, जस्तै भोजन पकाउँदा, पानी पिउँदा, मसला पिस्दा- हामीले धेरै जीवहरूको वध गर्दछौं । जबसम्म हामी कृष्णभावनामृतमा रहदैनौं, तबसम्म यस्ता नजानेर गरिएका पापकर्मका लागि दण्डित हुन्छौं ।

यदि कुनै बालकले नजानेर भए पनि आगोलाई छोयो भने के त्यो आगोले यो बच्चा हो भनेर क्षमा गर्दै जलाउँदैन र ? प्रकृतिको नियम कठोर छ र त्यहाँ क्षमा दिने प्रश्न नै हुँदैन । सामान्य कानुनमा पनि अज्ञानताका लागि क्षमा दिँइदैन । यदि हामी अदालतमा गएर "मलाई यो कार्य अपराधपूर्ण हो भन्ने थाहा थिएन" भन्यौँ भने त्यो तर्क वा अभिवचनबाट हामीले क्षमा पाउँदैनौं । त्यसै गरेर, प्रकृतिको नियम उल्लङ्घन गर्ने अज्ञानताले क्षमा पाउँदैन । त्यसकारण, यदि हामी वास्तवमा नै पापकर्मका प्रतिफलबाट मुक्त हुन चाहने हो भने हामी कृष्णभावनाभावित हुनपर्दछ । अनि मात्र भगवान् श्रीकृष्णले हामीलाई सबै पापबाट मुक्त गरिदिनुहुन्छ । त्यसकारण, यो सिफारिस गरिएको छ- **कीर्तनीयः सदा हरिः-** सबैले सदैव **'हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे, हरे राम हरे राम राम राम हरे हरे'** मन्त्रको कीर्तन गर्नुपर्दछ अनि भगवान् श्रीकृष्णले हामीलाई बचाउनुहुन्छ ।

हामीले सधैँ आफ्नो मनमा भगवान् श्रीकृष्णलाई राख्नुपर्दछ किनभने भगवान् श्रीकृष्ण सूर्य समान हुनुहुन्छ । हाम्रो "ब्याक टु गडहेड" पत्रिकाको आदर्श वाक्य नै यो हो ।

**कृष्ण- सूर्य सम, माया हय अन्धकार ।**
**याहाँ कृष्ण, ताहाँ नाहि मायार अधिकार ॥**
**(चैतन्य चरितामृत, मध्य २२.३१)**

"भगवान् श्रीकृष्ण तेजावी सूर्यसमान हुनुहुन्छ, माया अज्ञान र अन्धकारसमान छिन् । जहाँ सूर्यको उपस्थिति हुन्छ, त्यहाँ अन्धकार हुँदैन । यदि आफूलाई कृष्णभावनामा सधैँ राख्यौं भने हामी अज्ञानताको अन्धकारबाट प्रभावित हुन सक्दैनौं र हामी भगवान् श्रीकृष्णको उज्ज्वल सूर्य प्रकाशमा स्वतन्त्र भएर भ्रमण गर्न सक्दछौं । त्यसैले, कुन्तीदेवीले प्रार्थना गर्दै भगवान् श्रीकृष्ण निरन्तर उनी र पाण्डवसँगै रहिरहनुहोस् भन्दछिन् ।

वास्तवमा जसरी भगवान् श्रीकृष्णले वृन्दावनलाई कहिल्यै पनि छोड्नुहुन्न, त्यसरी नै पाण्डवलाई पनि छोड्नु हुन्न । वैदिक शास्त्रमा भनिएको छ– **वृन्दावन परित्यज्य नो पदमेकं गच्छति–** भगवान् श्रीकृष्ण वृन्दावनबाट बाहिर एक पाइला पनि जानुहुन्न, वृन्दावन प्रति उहाँ अनुरक्त हुनुहुन्छ । त्यसो हो भने भगवान् श्रीकृष्ण वृन्दावन छोडेर मथुरा जानुभयो अनि धेरै टाढा हस्तिनापुर पनि जानुभयो र धेरै वर्ष फर्केर आउनुभएन यो कसरी हुन सक्दछ ? वास्तवमा भगवान् श्रीकृष्ण जानुभएको नै थिएन किनभने वृन्दावन निवासहीरूले सदैव भगवान् श्रीकृष्णको स्मरण गर्दै रूने गर्दथे । यशोदा, नन्द महाराज, राधारानी, सबै गोपीहरू, गोपहरू, गाईहरू र बाच्छाबाच्छीहरू सबैको एकमात्र व्यस्तता भनेको भगवान् श्रीकृष्णको उपस्थितिको अनुभव गर्नु हुन्थ्यो । किनभने बिछोडमा नै भगवान् श्रीकृष्णको उपस्थिति अरू दृढतापूर्वक अनुभव गर्न सकिन्छ । कृष्णको विछोडमा प्रेम गर्नु-यो नै चैतन्य महाप्रभुको शिक्षा हो । **शून्ययितां जगत्सर्वं गोविन्दविरहेण मे ।** चैतन्य महाप्रभुले सोच्नुहुन्थ्यो- "भ गवान् श्रीकृष्ण गोविन्दबिना सबै शून्य हुन्छन् ।" तर त्यहाँ कृष्णभावना भने रहिरहन्छ ।

जब हामीले प्रत्येक वस्तु शून्य देख्दछौं तब केवल कृष्णभावना मात्र देख्दछौं । अनि, हामीले सर्वोच्च सिद्धि प्राप्त गर्न सक्दछौं । त्यसैले, गोपीहरू विशिष्ट थिए । यस्तो सिद्धि प्राप्त गरेका हुनाले उनीहरूले एकक्षण पनि भगवान्

श्रीकृष्णलाई बिर्सन सक्दैनथे । जब भगवान् श्रीकृष्ण आफ्ना गाई र बाच्छा लिएर वन जानुहुन्थ्यो, यता घरमा गोपीहरू अशान्त हुन्थे । उनीहरूले सोच्दथे- "अहो ! भगवान् श्रीकृष्ण खाली खुट्टा हिँड्नुभएको छ । बाटोमा धेरै ढुङ्गा र काडाँहरू छन्, जसले भगवान् श्रीकृष्णका नरम चरणकमललाई घोचिरहेका होलान् । उहाँको चरणकमल यति मुलायम छ कि उहाँले त्यो चरणकमल हाम्रो वक्षस्थलमा राख्दा पनि हाम्रो वक्षस्थल कठोर भयो कि भनेर हामी सोच्दछौं ।" उनीहरू यस्ता कुरा सोचेर रुन्थे । गोपीहरू साँझ भगवान् आफ्ना गाई र बाच्छाहरूसहित फर्केर आउनुभएको दर्शन गर्नका लागि व्याकुल हुन्थे । त्यसैले, बाटोमा प्रतीक्षा गरेर बस्दथे । यो नै कृष्णभावना हो ।

जब कुनै भक्त भगवान् श्रीकृष्णको विचारमा प्रगाढतापूर्वक मग्न हुन्छ, त्यस्ता भक्तबाट भगवान् श्रीकृष्ण टाढा जान सक्नुहुन्न । यहाँ कुन्तीदेवी भगवान् श्रीकृष्ण अब उनीहरूका अघि अनुपस्थित हुनुहोला भन्ने सोचेर अत्यधिक चिन्तित भएकी छिन् तर भगवान् श्रीकृष्णको शारीरिक अनुपस्थितिको वास्तविक प्रभावमा उहाँ भक्तका मनभित्र प्रगाढतापूर्वक उपस्थित रहनुहुन्छ । त्यसकारण चैतन्य महाप्रभुले आफ्नो वास्तविक जीवनको उदाहरणद्वारा- **विप्रलम्भ सेवा**- भगवान् श्रीकृष्णको बिछोडमा सेवा- को शिक्षा दिनुभएको छ । उहाँका आँखाबाट अविरल आँसु बग्दथे किनभने, उहाँलाई भगवान् श्रीकृष्णको चाहनामा सबै शून्य वा खालीजस्तो लग्दथ्यो ।

भगवान् श्रीकृष्णसँगको मिलनका दुई अवस्था हुन्छन् । भगवान् श्रीकृष्णसँग साक्षात् उपस्थित हुने, उहाँलाई भेट्ने, व्यक्तिगत रूपले बोल्ने र आलिङ्गन गर्ने- यो अवस्थालाई "सम्भोग" भनिन्छ । तर भगवान् श्रीकृष्णसँगको बिछोडमा रहने अवस्थालाई **"विप्रलम्भ"** भनिन्छ । भक्तहरू भगवान् श्रीकृष्णसँगको सङ्गति रूपी दुवै विधिबाट लाभान्वित हुन्छन् ।

अहिले हामी भौतिक संसारमा छौं, त्यसकारण भगवान् श्रीकृष्णको साक्षात् दर्शन गर्न सक्दैनौं तैपनि अप्रत्यक्ष दर्शन गर्न सक्दछौं । उदाहरणका लागि यदि कुनै व्यक्तिले आध्यात्मिक जीवनमा प्रगति गरेको छ भने उसले प्रशान्त महासागरलाई देख्ने बित्तिकै भगवान् श्रीकृष्णको स्मरण गर्दछ, यसलाई ध्यान भनिन्छ । कसैले सोच्न सक्दछ- "प्रशान्त महासागर विशाल जलको भण्डार हो । यसमा धेरै ठूला छालहरू पनि उठदछन् । म त्यसबाट केही गज टाढा उभिएको छु तैपनि म सुरक्षित छु भनेर म विश्वस्त छु । हुनत यो महासागर

शक्तिशाली छ र त्यसका छालहरू भयानक होलान् तर, यसले आफ्नो सीमाको उल्लंघन गर्दैन भन्ने मलाई विश्वास छ। यो सबै कसरी भइरहेको छ ? भगवान् श्रीकृष्णको आदेशले, भगवान् श्रीकृष्णले आदेश दिनुहुन्छ– "प्रिय प्रशान्त महासागर ! तिमी जति विशाल र शक्तिशाली भए पनि आफ्नो सीमाभन्दा बाहिर नजाऊ।" यसप्रकार मानिसले तुरुन्त भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दछ किनभने प्रशान्त महासागर जति शक्तिशाली भए पनि उसले ऊ भन्दा शक्तिशाली भगवान् श्रीकृष्णको आदेशको पालना गर्दछ। यसरी, कसैले पनि भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दछ र यो नै कृष्णभावनामृत हो।

त्यसरी नै यदि कसैले सूर्योदय भएको देख्यो भने उसले तुरुन्त भगवान् श्रीकृष्णको स्मरण गर्न सक्दछ। भगवद्गीता (७.८) मा भगवान् श्रीकृष्णले भन्नुभएको छ- **प्रभास्मि शशिसूर्ययोः**– "म सूर्य र चन्द्रमाको प्रभा हुँ।" यदि कसैले भगवान् श्रीकृष्णको दर्शन कसरी गर्ने भनेर सिक्न चाहने हो भने उसले सूर्यको किरणमा दर्शन गर्न सक्दछ। हाम्रा वैज्ञानिकहरूले सूर्यको सृष्टि गरेका होइनन्। हुनत उनीहरू ठुलाठुला कुरा गर्दछन् तर सूर्य वास्तवमा के हो भन्ने कुरा बुझ्नु उनीहरूको क्षमताभन्दा बाहिरको कुरा हो। तर वेदान्तसूत्र (१.१.३) मा भनिएको छ- **शास्त्रयोनित्वात्**– शास्त्रको माध्यमबाट मानिसले सबै कुरा जान्न सक्दछ। उदाहरणका लागि- यदि कसैले शास्त्रको अध्ययन गर्‍यो भने उसले सूर्य के हो भनेर जान्न सक्दछ किनभने ब्रह्मसंहितामा (५.५.२) मा सूर्यको बारेमा वर्णन गरिएको छ –

**यच्चक्षुरेष सविता सकलग्रहणां**
**राजा समस्तसुरमूर्तिरशेषतेजाः।**
**यस्याज्ञया भ्रमति सम्भृतकालचक्रो**
**गोविन्दमादि पुरुषं तमहं भजामि॥**

यस श्लोकमा सूर्यलाई सबै ग्रहहरूको आँखा हो भनिएको छ, यस श्लोकलाई ध्यान दिने हो भने उसले त्यसको यथार्थ बुझ्न सक्दछ किनभने रात्रिमा र सूर्य नउदाएसम्म हामीले केही देख्न सक्दैनौं। सूर्य, भगवान्‌को आँखा हो भन्ने पनि वर्णन गरिएको छ। भगवान्‌को सूर्य एउटा आँखा र चन्द्र अर्को आँखा हुन्। त्यसैले, उपनिषदमा भनिएको छ जब भगवान् श्रीकृष्णले हेर्नुहुन्छ अनि मात्र हामीले हेर्न सक्दछौं। सूर्यलाई- **अशेषतेजाः** अत्याधिक तातो पनि भनिएको

छ । उसको कार्य के हो ? **यस्याज्ञया भ्रमति सम्भृतकालचक्रः ।** सूर्यको आफ्नो कक्ष छ । ईश्वरले सूर्यलाई आदेश दिनुभएको छ- "तिमी आफ्नो कक्षमा मात्र भ्रमण गर, अन्यत्र होइन ।" वैज्ञानिकहरू भने यदि सूर्य अलिकति पनि यताउता सऱ्यो भने सम्पूर्ण ब्रह्माण्ड हिँउले ढाकिनेछ भन्दछन् । तर, परमेश्वरको आदेशअनुसार सूर्य इन्चको दशहजार भाग मात्र पनि यताउता सर्दैनन् । सूर्य सदैव निर्धारित समयमा नै उदाउँदछन् । यस्तो किन ? केही अनुशासन, केही आज्ञापालन र केही आदेश अवश्य हुनुपर्दछ । त्यसैले, ब्रह्मसंहितामा भनिएको छ- **यस्याज्ञया भ्रमति सम्भृतकालचक्रो गोविन्दमादि पुरुषं तमहं भजामि ।"** जसको आदेशद्वारा सूर्य आफ्नो कक्षमा भ्रमण गर्दछन्, त्यस्ता आदि पुरुषको म पूजा गर्दछु । उहाँले सूर्य, चन्द्र र समुद्रलाई पनि निर्देशन दिनुहुन्छ । सबै कार्य उहाँको आदेशअनुसार नै सम्पन्न हुन्छन् ।"

अब ईश्वरलाई बुझ्नका लागि कहाँ कठिनाइ हुन्छ ? कुनै कठिनाइ नै छैन । यदि कुनै व्यक्ति विज्ञ छ, उसको मस्तिष्क फोहोरले बनेको छैन भने उसले प्रत्येक पाइलामा ईश्वरलाई बुझ्न सक्दछ । भगवान् भन्नुहुन्छ–

**रसोद्रहमासु कौन्तेय प्रभास्मि शशिसूर्ययोः ।**
**प्रणवः सर्ववेदेषु शब्दः खे पौरुषं नृषु ॥**

"हे कुन्तीपुत्र ! म पानीको स्वाद हुँ, सूर्य र चन्द्रमाको प्रकाश हुँ, वैदिक मन्त्रको ॐकार हुँ, आकाशमा ध्वनि हुँ र मानिसमा पौरुषत्व वा सामर्थ हुँ ।" (भगवद्गीता ७.८) । त्यसो हो भने मानिसहरू किन यसो भन्दछन्– "मैले ईश्वर देखिन ?" ईश्वरले जुनरूपमा दर्शन गर्ने निर्देशन दिनुभएको छ, सोहीरूपमा ईश्वरको दर्शन किन गर्दैनन् ? उनीहरूले आफ्नै मार्गमा निर्माण किन गर्दछन् ? कसैले पनि आफ्नो तरिकाले ईश्वरको दर्शन गर्न सक्दैनन् र त्यो सम्भव पनि छैन । यदि कसैले त्यसो गर्न खोज्यो भने ऊ सदैव अन्धो नै रहन्छ । वर्तमान अवस्थामा तथाकथित दर्शनशास्त्री र वैज्ञानिकहरूले ईश्वरलाई आफ्नै विधिअनुसार दर्शन गर्ने प्रयास गरिरहेका छन् तर त्यो सम्भव छैन । कसैले पनि ईश्वरको दर्शन ईश्वरको निर्देशनअनुसार मात्र गर्न सक्दछ । यदि कसैले अमेरिकाका राष्ट्रपतिलाई भेट्ने इच्छा गऱ्यो भने के आफ्नै तरिकाले भेट्न सक्दछ ? सक्दैन त्यसो हो भने कसरी तिमी ईश्वरलाई आफ्नै तरिकाले दर्शन गर्न चाहन्छौं ? यो मूर्खतापूर्ण सोचाइ हो । साधारण मानिस पनि महत्त्वपूर्ण पदमा पुग्यो भने मैले उसलाई

आफ्नै विधिले भेट्न सक्दिनँ । मैले उसको सचिवसँग समय लिनपर्दछ अनि मात्र त्यस सचिवले भेट्ने व्यवस्था मिलाउँदछ । भगवान् सामान्य व्यक्तिभन्दा धेरै महान् हुनुहुन्छ तर दुष्टहरू भने ईश्वरको दर्शन गर्ने आफ्नै विधिको नै समर्थन गर्दछन् । "तिमीले जति धेरै विधिको निर्माण गर्दछौं, ती सबै प्रामाणिक नै हुन्" भन्दछन् । यो दुष्टता र मूर्खतापूर्ण कुरा हो । यो संसार दुष्ट र मूर्खले भरिएको छ । त्यसैले, कृष्णभावनामृत वा ईश्वरभावनामृत एउटा अस्पष्ट विचार बन्दै गएको छ । अन्यथा, यदि कसैले ईश्वरको दर्शन गर्न चाहन्छ, ईश्वरको उपस्थिति चाहन्छ भने जसरी कुन्तीदेवीले भनेकी छिन्, त्यसरी नै मानिसले ईश्वरलाई आफ्नो हृदयमा राख्नपर्दछ ।

महाराज अम्बरीषले गरेजस्तै हामीले पनि हाम्रो मन इन्द्रियलाई कृष्णभावनामृतमा संलग्न गराउनुपर्दछ । **स वै मनः कृष्ण पदारविन्दयोर्वचांसि वैकुण्ठगुणानुवर्णने** (भागवत् ९.४.१८) सर्वप्रथम हामीले हाम्रो मनलाई भगवान् श्रीकृष्णको चरणकमलमा स्थिर गर्नुपर्दछ किनभने मन समस्त इन्द्रियहरूको क्रियाकलापहरूको केन्द्र हो । यदि मन नै छैन भने हामीले आँखा भए पनि देख्न सक्दैनौं र कान भए पनि सुन्न सक्दैनौं । त्यसकारण, मनलाई एघारौं इन्द्रिय हो भनेर भनिएको छ । दश इन्द्रिय हुन्छन्: पाँच कर्मेन्द्रिय र पाँच ज्ञानेन्द्रिय । यी इन्द्रियहरूको केन्द्र मन हो । भगवद्गीता (३.४२) मा भनिएको छ-

**इन्द्रियाणि पराण्याहुरिन्द्रयेभ्यः परं मनः ।**
**मनसस्तु परा बुद्धिर्यो बुद्धेः परतस्तु सः ॥**

यस श्लोकमा भगवान् श्रीकृष्णले वर्णन गर्नुभएको छ- हुनत हामीले इन्द्रियलाई प्रमुख भनेर मान्दछौं, तर मनभन्दा पर अर्को उच्चस्तरको मन छ, मनभन्दा पर बुद्धि र बुद्धिभन्दा पर आत्मा हुन्छ ।

यदि हामीले मानसिक गतिका बारेमा बुझ्न सक्दैनौं भने आत्माको अस्तित्वलाई कसरी महत्त्व दिन सक्दछौं ? मनभन्दा पर बुद्धि हुन्छ र चिन्तनद्वारा मानिस वैदिक स्तरमा पुग्न सक्दछ । तर आत्मा र ईश्वरका बारेमा बुझ्नका लागि मानिस वैदिक स्तर भन्दा माथि जानुपर्दछ । हामीले प्रत्येक कुरा बुझ्न सम्भव छ तर हामीले त्यो ज्ञान सही स्रोत र माध्यमबाट प्राप्त गर्नुपर्दछ । त्यसैले, वैदिक आदेश यस्तो छ-

**तद्विज्ञानार्थं स गुरुमेवाभिगच्छेत**
**समित्पाणिः श्रोत्रियं ब्रह्मनिष्ठम् ।**

"यदि कसैलाई अलौकिक र दिव्य विषयका बारेमा जान्न इच्छा छ भने ऊ प्रमाणिक (श्रोत्रिय ब्रह्मनिष्ठ) गुरुकहाँ जानुपर्दछ । (मुण्डक उपनिषद १.२.१२)

***

# २३. प्राकृतिक सम्पदा

**इमे जनपदाः स्वृद्धाः सुपक्वौषधिरुधः ।**
**वनाद्रिनद्युदन्वन्तो ह्येधन्ते तव वीक्षितैः ॥**

सम्पूर्ण नगर र गाउँहरू सबै प्रकारका समृद्धिले युक्त छन् किनभने जडीबुटी र अन्नको प्रचुरता छ, बृक्षहरू फलले लटरम्म छन् । नदी बहिरहेकी छिन् । पहाडहरू खनिजले पूर्ण छन् र समुद्र सम्पदाले पूर्ण छन् । यो सबै हजुरको कृपापूर्ण दृष्टिको फल हो ।

**–(श्रीमद्भागवत् १.८.४०)**

मानवको सम्पन्नता प्राकृतिक उपहारद्वारा हुन्छ, विशाल औद्योगिक संस्थानद्वारा हुँदैन । यी विशाल औद्योगिक प्रतिष्ठानहरू ईश्वरविहीन सभ्यताका उत्पादन हुन् र तिनले मानवजीवनको सही उद्देश्यको विनाश गर्दछन् । मानव जातिको प्राणशक्तिलाई निचर्ने यस्ता दुःखदायी उद्योग जति बढाउँदै गए पनि साधारण मानिसमा असन्तोष नै रहन्छ तर केही व्यक्ति भने त्यसको शोषण गर्दै विलासीताको जीवन यापन गर्दछन् । अन्न, फलफूल, तरकारी, नदी, खनिज र रत्नले युक्त पहाड र मोतीले पूर्ण समुद्र– यी सबै प्रकृतिका उपाहार हुन् । यिनको परिपूर्ति परमेश्वरको आदेशअनुसार हुने गर्दछ । उहाँको इच्छाअनुसार भौतिक प्रकृतिले कहिले प्रशस्त उत्पादन गर्दछिन् कहिले अभाव गर्दछिन् । यो प्रकृतिको नियम हो । मानवले यी दैवी उपहारहरूको प्रयोग गर्दै तिनबाट लाभ लिनुपर्दछ तर प्रकृतिमाथि आफ्नो प्रभुत्व कायम गर्ने उद्देश्यले शोषण गर्न हुँदैन र प्राप्त लाभप्रति सन्तोष मान्दै समृद्ध हुनुपर्दछ । जति हामी भोग गर्ने आकाङ्क्षाले प्रकृतिप्रति शोषण गर्ने प्रयास गर्दछौं, त्यति नै यस्तो शोषण गर्ने कार्यको प्रतिफलले हामी त्यसैमा फँस्दै जान्छौं । यदि हामीसँग प्रशस्त मात्रामा अन्न, फलफूल, तरकारी र जडीबुटी उपलब्ध छन् भने निरीह पशु मार्न वधशाला सञ्चालन गर्ने किन आवश्यकता पऱ्यो ? यदि मानिसलाई खानका लागि प्रशस्त मात्रामा अन्न,

फलफूल र तरकारी उपलब्ध छ भने पशुको वध गर्ने आवश्यकता नै छैन। नदीमा बहेको पानीले जमिनलाई उर्वरा बनाउँदछ र पानीको मात्रा हामीलाई आवश्यक भन्दा बढी नै छ। पहाडबाट खनिज र समुद्रबाट रत्न प्राप्त हुन्छ। यदि मानव सभ्यतासँग प्रशस्त मात्रामा अन्न, खनिज, रत्न, पानी र दूध आदि उपलब्ध छन् भने अभागी श्रमिकहरूको आडमा भयङ्कर उद्योगहरू स्थापना गर्न किन आसक्त हुने ? तर यी सबै प्राकृतिक उपहारहरू भगवान्को कृपामा निर्भर हुन्छन्। त्यसकारण हामीले के गर्नुपर्दछ - भगवान्का नियम आज्ञाकारी भएर पालन गर्ने र भक्तिसेवा गर्दै मानवजीवनको पूर्णता प्राप्त गर्नुपर्दछ। कुन्तीदेवीका सङ्केत सटीक छन्। उनीहरूप्रति भगवान्को कृपादृष्टि रहिरहोस् र त्यहाँ प्राकृतिक सम्पन्नता स्थापित होस् भन्ने चाहना उनको थियो।

कुन्तीदेवीले उल्लेख गर्दछिन्- प्रशस्त अन्न छ, वृक्ष फलले लटरम्म छन्। नदी बहिरहेकी छिन्, पहाड खनिजले पूर्ण छन् र समुद्र सम्पदाले युक्त छन् तर उनले उद्योग र वधशालाको विकास भइरहेको छ भनेर उल्लेख गरेकी छैनन् किनभने यस्ता कुरा मूर्खतापूर्ण छन्। यो मानिसले विकसित गरेको हो र यसले समस्या मात्र उत्पन्न गर्दछ।

यदि हामी ईश्वरको सृष्टिमा निर्भर भयौं भने त्यहाँ अभाव हुँदैन, केवल आनन्द मात्र हुन्छ। ईश्वरकी सृष्टिले प्रशस्त अन्न र घाँस प्रदान गर्दछिन्। अन्न हामीले खान्छौं, घाँस गाईले खान्छिन्। गोरुले अन्न उत्पादन गर्न सहयोग गर्दछ, अनि हामीले जति खान दिन्छौं त्यही खाएर सन्तुष्ट हुन्छ। यदि हामीले फलफूल खाएर त्यसको बोक्रा दियौं भने त्यही बोक्रा खाएर पशु सन्तुष्ट हुन्छ। यसप्रकारले भगवान् श्रीकृष्ण केन्द्र विन्दुमा रहेर सबै मानिस, पशु, रुखबिच परस्पर सहयोग हुन सक्दछ। यो नै वैदिक सभ्यता वा कृष्णभावनामृत सभ्यता हो।

भगवान्को प्रार्थना गर्दै कुन्तीदेवी भन्दछिन्- "यो सम्पन्नता हजुरको कृपादृष्टिको कारणले नै हो"। जब हामी कृष्ण मन्दिरमा बस्दछौं, भगवान् श्रीकृष्णको दृष्टि हामीमा पर्दछ अनि सबै कुरा राम्रो हुन्छ। जब निष्ठावान् व्यक्ति भगवान् श्रीकृष्णको भक्त बन्न चाहन्छ, भगवान् श्रीकृष्ण आफ्ना ऐश्वर्यसहित उसको सामु उपस्थित हुनुहुन्छ र ऊतिर कृपादृष्टि दिनुहुन्छ अनि ऊ सुखी र सुन्दर बन्दछ।

त्यसरी नै यो सम्पूर्ण सृष्टि भगवान् श्रीकृष्णको हेराइ (**स ऐक्षत**) को परिणाम

हो । वेदमा भनिएको छ, उहाँले पदार्थमा दृष्टि दिनुभयो अनि पदार्थ उत्तेजित भयो । एउटी महिला पुरुषको स्पर्शद्वारा उत्तेजित हुन्छिन् अनि उनी गर्भवती हुन्छिन् र शिशु जन्माउँछिन् । यो सम्पूर्ण सृष्टिले यहि प्रक्रियाको अनुसरण गर्दछ । भगवान् श्रीकृष्णको दृष्टिले पदार्थ उत्तेजित हुन्छ, अनि गर्भधारण गरेर जीवलाई जन्माउँदछ । उहाँको दृष्टिपातद्वारा नै सम्पूर्ण रुख, बिरुवा, पशु र अन्य जीव उत्पन्न भएका हुन् । यो कसरी सम्भव छ ? हामी मध्ये कसैले पनि भन्न सक्दैनौं– "केवल मैले दृष्टिपात गरेर पत्नीलाई गर्भिणी बनाउन सक्दछु ।" हुनत यो कार्य हाम्रा लागि असम्भव छ- **अंगानि यस्य सकलेन्द्रियवृत्तिमन्ति**– भगवान् श्रीकृष्णका हरेक अङ्गमा अन्य अङ्गको कार्यक्षमता विद्यमान् हुन्छ । हाम्रा आँखाले हामी केवल हेर्न सक्दछौं तर भगवान् श्रीकृष्ण केवल हेरेर नै गर्भाधान गर्न सक्नुहुन्छ । त्यहाँ सम्भोग गर्ने आवश्यकता पर्दैन । केवल दृष्टिपातले नै भगवान् श्रीकृष्णले गर्भिणी बनाउन सक्नुहुन्छ ।

भगवद्गीता (९.१०) मा भगवान् श्रीकृष्ण भन्नुहुन्छ- **मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्-** "मेरो निरीक्षणमा भौतिक प्रकृतिले सबै चर र अचर प्राणी जन्माउँछिन् ।" 'अक्ष' भनेको आँखा हो । अक्षेणले भगवान्को दृष्टिपातबाट नै सबै जीवको जन्म हुन्छ भनेर सङ्केत गर्दछ । दुई प्रकारका जीव हुन्छन्– हिँडडुल गर्न सक्ने, जस्तै- किरा, पशु मानिस आदि र हिँडडुल गर्न नसक्ने जस्तैः रूख, बिरुवा, आदि । संस्कृतमा यी दुवैलाई स्थावर- जङ्गम भनिन्छ र यी दुवै प्रकृतिबाट उत्पन्न हुन्छन् ।

निश्चय नै भौतिक प्रकृतिबाट उत्पन्न हुने वस्तु जीवन होइनन्, केवल शरीर हुन् । जसरी शिशुले आफ्नो आमाबाट शरीर प्राप्त गर्दछ, त्यसरी नै जीवले पनि भौतिक प्रकृतिबाट कुनै निश्चित प्रकारको शरीर प्राप्त गर्दछ । दश महिनासम्म शिशु आफ्नो आमाको रगत र पोषक तत्त्वद्वारा बढ्दछ तर शिशु जीव हो, पदार्थ होइन । त्यो जीव, जसले आमाको गर्भमा आश्रय लिएको हुन्छ, आमाले उसका लागि आवश्यक सबै तत्त्व र अवयव प्रदान गर्दछिन् । यो प्रकृतिको तरिका हो आफ्नो शरीरबाट अर्को शरीर कसरी उत्पन्न भयो भन्ने कुरा आमालाई थाहा नहुन सक्दछ । तर, जब शिशुको शरीर पूर्ण हुन्छ शिशुले जन्म लिन्छ ।

जीवको जन्म हुँदैन । भगवद्गीता (२.२०) मा भनिएको छ- **न जायते म्रियते वा-** जीव न जन्मन्छ, न मर्दछ । जसले जन्म लिदैन, उसको मृत्यु

हुँदैन । जसको जन्म हुन्छ, उसको मात्र मृत्यु हुन्छ, । जसको जन्म भएको हुँदैन, उसको मृत्यु हुँदैन । गीतामा भनिएको छ- **न जायते म्रियते वा कदाचित**- **"कदाचित्"** शब्दको अर्थ "कुनै पनि समयमा" हुन्छ । वास्तवमा जीवले कुनै पनि समयमा जन्म लिदैन । हुनत हामीले शिशुले जन्म लिएको देख्दछौं, वास्तवमा त्यो जन्म होइन । **नित्यो शाश्वतोद्रयं पुराणः** । जीव शाश्वत र नित्य हुन्छ र यो धेरैधेरै प्राचीन (पुराण) हो । **न हन्यते हन्यमाने शरीरे**– शरीर नष्ट भएपछि जीव पनि नष्ट हुन्छ भन्ने नसोच्नू, जीव रहिरहन्छ ।

एक जना वैज्ञानिक साथीले मलाई सोधे– "शाश्वताको प्रमाण के हो ? भगवान् श्रीकृष्ण भन्नुहुन्छ– **न हन्यते हन्यमाने शरीरे** "शरीर मरे पनि आत्मा मर्दैन ।" यो भनाइ नै आफैंमा प्रमाण हो । यसप्रकारको प्रमाणलाई श्रुति भनिन्छ र यो भगवान्‌बाट परम्परामार्फत श्रवण गर्ने गरिन्छ । प्रमाणको अर्को प्रकार न्याय प्रस्थान हो । कसैले तर्क र दार्शनिक अनुसन्धानबाट ज्ञान प्राप्त गर्न सक्दछ तर, अर्को प्रमाणको प्रकार श्रुति हो जुन आधिकारिक व्यक्तिद्वारा श्रवण गरेर स्थापित गरिन्छ । प्रमाणको तेस्रो प्रकार स्मृति हो । यो भनेको सुनेर स्थापित गरिएको प्रमाणको प्रकार हो । भगवद्‌गीता र पुराण स्मृति हुन्, उपनिषद श्रुति हुन् र वेदान्त न्याय हो । यी तीनमा श्रुति प्रतिष्ठान अर्थात् श्रुतिमार्फत प्राप्त प्रमाण विशेष महत्त्वपूर्ण हुन्छ ।

प्रत्यक्ष अनुभवद्वारा प्राप्त हुने ज्ञानको कुनै मूल्य हुँदैन किनभने हाम्रा इन्द्रियहरू अपूर्ण छन् । उदाहरणका लागि दिनहुँ हामीले सूर्यलाई बाह्र इन्च व्यास भएको सानो गोलाकार वस्तुजस्तो देख्दछौं तर वास्तवमा सूर्य पृथ्वीभन्दा सयौं गुणा ठुलो छ । त्यसैले, हाम्रो आँखाको माध्यमद्वारा प्रत्यक्ष अनुभूति गरेको ज्ञानको के अर्थ भयो ? हामीसँग धेरै इन्द्रियहरू छन् र तिनको माध्यमद्वारा ज्ञानको अनुभव गर्न सकिन्छ, जस्तैः- आँखा, कान, नाक आदि । तर हाम्रा इन्द्रियहरू अपूर्ण छन् । त्यसैले, तिनीहरूबाट प्राप्त हुने ज्ञान पनि अपूर्ण नै हुन्छन्, किनभने वैज्ञानिकहरू आफ्ना अपूर्ण इन्द्रियहरूद्वारा वस्तुका बारेमा जान्ने प्रयास गर्दछन् । त्यसैले, उनीहरूको निष्कर्ष अपूर्ण हुन्छ । मेरा शिष्यमध्ये एकजना स्वरूप दामोदर वैज्ञानिक हुन् । उनले आफ्ना वैज्ञानिक साथी, जसले जीवन पदार्थ बाट उत्पन्न हुन्छ भन्दछन्, तिनलाई सोधे- यदि मैले तिमीलाई जीवन उत्पन्न गर्न आवश्यक सम्पूर्ण रासायनिक पदार्थ दिएँ भने के तिमीले यो जीवन बनाउन सक्दछौ ? वैज्ञानिकले उत्तर दियो- "त्यो मलाई थाहा छैन ।" यो नै

अपूर्ण ज्ञान हो । यदि तिमीलाई ज्ञान छैन भने र त्यो अपूर्ण हुन्छ भने तिमी किन शिक्षक बनेको ? यो ठग्ने काम भयो । त्यसैले, पूर्ण बन्नका लागि पूर्णबाट नै शिक्षा ग्रहण गर्नुपर्दछ भन्ने हाम्रो भनाइ हो ।

भगवान् श्रीकृष्ण पूर्ण हुनुहुन्छ । त्यसैले, हामीले उहाँबाट ज्ञान प्राप्त गर्दछौं । भगवान् श्रीकृष्ण भन्नुहुन्छ– **न हन्यते हन्यमाने शरीरे** "शरीर मरे पनि आत्मा मर्दैन ।" त्यसकारण, आत्मा शाश्वत हुन्छ भन्ने ज्ञान पूर्ण हो ।

कुन्तीदेवी भन्दछिन्- **इमे जनपदाः स्वृद्धाः सुपक्कोषधि वीरूधः** "अन्न प्रशस्त छ, वृक्ष फलले लटरम्म छन्, नदी बहिरहेकी छिन् । पहाड खनिजले पूर्ण छन् । समुद्र सम्पदाले पूर्ण छ ।" हामीलाई अरू बढी के चाहियो ? सिपीबाट मोती उत्पन्न हुन्छ । पहिलेका मानिसहरू आफ्नो शरीर मोती, रत्न, रेशम र सुन आदिद्वारा श्रृङ्गार गर्दथे । अहिले ती सबै कता गए ? अहिलेको विकसित सभ्यतामा सुन्दर युवतीहरूका सुन, मोती वा रत्नका गहना छैनन् । उनीहरू प्लास्टिकका चुरा लगाउँछन् । त्यसैले, उद्योग र वधशालाबाट के लाभ भयो ?

ईश्वरको व्यवस्थामा मानिसलाई पर्याप्त खाद्यान्न, पर्याप्त दूध, पर्याप्त फल र तरकारी अनि नदीको स्वच्छ जल उपलब्ध हुन्छ । तर, अहिले मैले जब युरोपको यात्रा गरें, त्यहाँ सबै नदीहरू फोहोर भएका छन् । जर्मनी, फ्रान्स, रसिया र अमेरिकामा पनि नदी फोहोर भएको मैले देखेको छु । प्रकृतिको व्यवस्थाअनुसार समुद्रको पानी स्वच्छ हुन्छ । त्यही पानी नदीमा स्थानान्तरित हुन्छ तर त्यसमा नून हुँदैन । अनि, नदीबाट मानिसले सफा पानी प्राप्त गर्न सक्दछ । यो नै प्रकृतिको व्यवस्था हो । प्रकृतिको व्यवस्था भनेको भगवान् श्रीकृष्णको व्यवस्था हो । त्यसैले, पानी वितरण गर्नका लागि विशाल जलभण्डार निर्माण गरेर के लाभ हुन्छ ?

प्रकृतिले हामीलाई सबै वस्तु दिएकी छिन् । यदि हामी सम्पत्ति चाहन्छौं भने मोती जम्मा गरौं, धनी भइहाल्दछौं । त्यसका लागि विशाल उद्योग सञ्चालन गरेर मोटरकार उत्पादन गर्न के आवश्यकता छ ? त्यस्ता उद्योगबाट हामीले केवल समस्या मात्र सृजना गरेका छौं । हामी केवल भगवान् श्रीकृष्ण र उहाँको कृपामा निर्भर गर्नुपर्दछ किनभने भगवान् श्रीकृष्णको दृष्टिपात (**तव वीक्षितैः**) द्वारा नै सबै कार्य आफैं ठीक हुन्छन् । त्यसैले, यदि हामीले भगवान् श्रीकृष्णको कृपादृष्टिका लागि याचना गर्‍यौं भने कुनै कुराको अभाव हुँदैन । आवश्यकता पनि पर्दैन, सबै कुरा पूरा हुन्छन् । त्यसकारण, कृष्णभावनामृत आन्दोलनको

विचार नै प्रकृतिको उपहारमा निर्भर हुने र भगवान् श्रीकृष्णको कृपा प्राप्त गर्नु नै हो ।

मानिसहरू भन्दछन् जनसङ्ख्या बढिरहेको छ, त्यसैले कृत्रिम साधनले रोकिरहेका छन् । किन ? पक्षी र मौरीले आफ्नो सङ्ख्या बढाइरहेका छन् गर्भ निरोधक साधन पनि छैन । के तिनीहरूलाई भोजनको कमी छ ? के हामीले कुनै पनि पक्षी वा पशु खानाको अभावमा मरेको देखेका छौं ? सहरमा हुन सक्दछ तर धेरै जसो हुँदैन । तर, यदि हामी जङ्गलमा गएर हेऱ्यौं भने त्यहाँका सबै हात्ती, सिंह, बाघ र अन्य जनावरहरू हृष्टपुष्ट र बलिया नै देख्दछौं । तिनीहरूलाई भोजन कसले दिन्छ ? तीमध्ये केही शाकाहारी छन्, केही मांसाहारी छन् तर ती कसैलाई पनि भोजनको कमी छैन ।

निश्चय नै बाघ प्रकृतिले नै शाकाहारी होइन । त्यसैले, उसले प्रत्येक दिन भोजन प्राप्त गर्न सक्दैन । को उसको अघि गएर उसको भोजन बन्न चाहला ? कसले गएर बाघसँग "महाशय ! म परोपकारी छु । म तिम्रो भोजन बन्न आएको छु । मेरो शरीर खाऊ" कसैले पनि भन्दैन । त्यसकारण बाघलाई आफ्नो आहारा खोज्न कठिन हुन्छ । जब बाघ आहार खोज्नका लागि बाहिर निस्कन्छ उसको पछिको पशुले "फयो फयो" भन्ने शब्द निकाल्दछ, जसले गर्दा अन्य पशुले "अब बाघ बाहिर आएको छ भनेर जान्दछन् । प्रकृतिको व्यवस्थाले नै बाघलाई कष्ट छ तैपनि भगवान् श्रीकृष्णले उसलई आहार प्रदान गर्नुहुन्छ । एक हप्तापछि बाघलाई पशु समात्ने अवसर प्राप्त हुन्छ । उसले दिनहुँ ताजा आहार पाउन सक्दैन । त्यसैले, उसले त्यो लासलाई एउटा झाडीमा लगेर राख्दछ । एक पटक थोरै मात्रामा खान्छ । हुनतः बाघ धेरै शक्तिशाली हुन्छ र मानिस बाघ वा सिंह बन्न चाहन्छन्, तर बाघ बने पनि वास्तवमा उसले दिनहुँ आहार पाउन सक्दैन । आहारका लागि उसले धेरै परिश्रम गर्नपर्दछ । तर शाकाहारी भइयो भने दिनहुँ भोजन प्राप्त गर्न सकिन्छ र शाकाहारी भोजन सर्वत्र उपलब्ध हुन्छ ।

अहिले प्रत्येक सहरमा वधशाला छन्, तर के त्यस्ता वधशालाले पर्याप्त मात्रामा मासु आपूर्ति गर्न सक्दछन् ? मानिस केवल मासु मात्र खाएर बाँच्न सक्दछ ? सक्दैन र त्यसबाट पर्याप्त आपूर्ति पनि हुन सक्दैन । मांसाहारीले पनि मासुको टुक्रासँगै अन्न, फल र तरकारी खानुपर्दछ । तैपनि, दिनहुँ खाने केही टुक्रा मासुका लागि धेरै पशुको वध गर्दछन्, यो कति पापमय कर्म हो ? यदि मानिसले यस्ता पापकर्म गर्दछन् भने उनीहरू कसरी सुखी हुन सक्दछन् ? यस्ता

मार्ने कार्य गर्नुहुँदैन । त्यसैले, मानिसहरू दु:खी छन्, तर कुनै व्यक्ति कृष्णभावनाभावित हुन्छ भने ऊ केवल भगवान् श्रीकृष्णको कृपादृष्टि (**तव वीक्षितैः**) मा निर्भर गर्दछ । भगवान् श्रीकृष्णले सबै वस्तु प्रदान गर्नुहुन्छ, त्यहाँ अभावको कुनै प्रश्न नै हुँदैन ।

कहिलेकाहीँ अभाव भएको देखिन्छ भने कहिले अन्न र फल यति धेरै मात्रामा उत्पादन हुन्छ मानिसले त्यो खाएर पनि सक्दैन । यो सबै भगवान् श्रीकृष्णको दृष्टिपातको कुरा हो । यदि भगवान् श्रीकृष्णले इच्छा गर्नुभयो भने उहाँले प्रशस्त मात्रामा अन्न, फल र तरकारी उत्पादन गर्न सक्नुहुन्छ तर पछि भगवान् श्रीकृष्णले यी सबैको आपूर्ति रोक्न चाहनु भयो भने मासुले मात्र के गर्न सक्दछ ? तिमीले मलाई खान सक्दछौं, म तिमीलाई खान सक्दछु तर त्यसले समस्या समाधान हुँदैन ।

सही शान्ति, प्रशस्त मात्रामा दूध, पानी र अन्य हामीलाई आवश्यक वस्तुको आपूर्तिका लागि हामी भगवान् श्रीकृष्णमा निर्भर हुनुपर्दछ । यो कुरा हामीलाई भक्तिविनोद ठाकुरले सिकाउनुभएको छ । उहाँ भन्नुहुन्छ– **मारबि राखबि जो इच्छा तोहारा**- "हे प्रिय भगवान् ! हजुरको शरणमा पर्दछु र हजुरमा निर्भर छु । अब हजुर चाहनुहुन्छ भने मार्नुहोस् वा मलाई संरक्षण गर्नुहोस् ।" भगवान् श्रीकृष्ण उत्तर दिनुहुन्छ– "हो ! **सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज**- एक मात्र मेरो शरणमा आऊ ।" उहाँले- "ममा निर्भर गर । **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि** -तिम्रा पापकर्मका फलबाट म तिमीलाई बचाउँदछु ।" भनेर भन्नु भएको छ

किनभने हामीले कृष्णभावनारहित भएर धेरै वर्ष बिताइसकेका छौं । त्यसैले, हामीले पापमय जीवन यापन गरिरहेका छौं तर भगवान् श्रीकृष्णले आश्वासन दिनुहुन्छ, यदि कुनै पनि व्यक्ति उहाँको शरणमा पर्‍यो भने उहाँले उसका सबै नराम्रा हिसाब बन्द गरिदिएर उसका पापकर्मको अन्त्य गरिदिनुहुन्छ अनि उसले नयाँ जीवन सुरु गर्न सक्दछ । त्यसैले, जब हामीले शिष्यलाई दीक्षा दिन्छौं, त्यससमय उनीहरूलाई भन्दछौं- "तिम्रा पुराना हिसाब बन्द भए, अब अन्य पापमय कर्म नगर ।"

भगवान् श्रीकृष्णको नामले पापकर्म नष्ट गर्दछ । त्यसैले, अलिकति पापकर्म गरिहालौं र हरे कृष्ण मन्त्र जप गरेर त्यो पाप नष्ट गरौं भनेर मानिसले कहिले पनि सोच्नुहुँदैन । त्यो सबैभन्दा ठुलो अपराध हो (**नाम्नो बलाद् यस्य**

**हि पापबुद्धिः**) । केही धार्मिक सम्प्रदायका मानिसहरू चर्च गएर आफ्नो पापलाई स्वीकार गर्दछन् तर पुनः पापकर्म गरिरहन्छन् । त्यस्तो स्वीकारोक्तिको के अर्थ भयो ? कसैले स्वीकार गर्नसक्दछ "हे ईश्वर ! मैले अज्ञानतावश पापकर्म गरें ।" तर कसैले पनि यस्तो योजना बनाउन हुँदैन- "म पापकर्म गर्दछु अनि चर्चमा गएर त्यो स्वीकार गर्दछु ।" त्यसरी नै कसैले पनि पापकर्म नष्ट गर्नका लागि जानीजानी हरे कृष्ण मन्त्रको जप गर्दै त्यसबाट लाभ लिने प्रयास गर्नुहुँदैन र पुनः पापकर्म गर्न सुरु गर्न पनि हुँदैन । हामी यस कुरामा ज्यादै नै सावधान हुनुपर्दछ । दीक्षा ग्रहण गर्न अघि सबैले प्रतिज्ञा गर्नपर्दछ- अवैध यौन सम्बन्ध नगर्ने, नशा सेवन नगर्ने, जुवा तास नखेल्ने र मांसाहार नगर्ने यो प्रतीज्ञाको दृढतापूर्वक पालन गर्नुपर्दछ अनि मात्र मानिस शुद्ध पवित्र हुन सक्दछ । यदि मानिसले आफूलाई यसरी शुद्ध पवित्र राख्दै भक्तिमय सेवामा संलग्न गराइरहन्छ भने उसको जीवन सफल हुन्छ र उसलाई आवश्यक वस्तुको अभाव पनि हुँदैन ।

***

# २४. स्नेह बन्धनलाई काट्नु

**अथ विश्वेश विश्वात्मन् विश्वमूर्ते स्वकेषु मे ।**
**स्नेहपाशमिमं छिन्धि दृढं पाण्डुषु वृष्णिषु ॥**

हे ब्रह्माण्डका स्वामी ! हे ब्रह्माण्डका आत्मा ! हे विश्वरूप ! कृपया मेरो आफ्ना पाण्डव र वृष्णिवंशी नातेदार तर्फको स्नेहको बन्धन काटिदिनुहोस् ।

**–(श्रीमद्भागवत् १.८.४१)**

भगवान्का शुद्ध भक्तले भगवान्सँग आफ्नो स्वार्थका लागि केही माग्न पनि लाज मान्दछ । तर गृहस्थहरूले भने कहिलेकाहीँ बाध्य भएर भगवान्सँग केही माग्नुपर्दछ किनभने उनीहरू पारिवारिक स्नेहबन्धनमा बाधिएका हुन्छन् । श्रीमती कुन्तीदेवी यो तथ्यबाट अवगत थिइन् । त्यसैले, उनले भगवान्सँग आफ्नो पाण्डव र वृष्णिवंशी नातेदारसँगको स्नेह बन्धन काटिदिनुहोस् भनेर प्रार्थना गरिन् । पाण्डव आफ्ना छोरा थिए र वृष्णिवंशी उनका पितृकुलका थिए । भगवान् श्रीकृष्ण दुवै परिवारसँग समानरूपले सम्बन्धित हुनुहुन्थ्यो । दुवै परिवारलाई भगवान्को सहयोगको आवश्यकता थियो किनभने दुवै परिवार भगवान्मा आश्रित भक्त थिए । श्रीमती कुन्तीदेवीको इच्छा भगवान् श्रीकृष्ण आफ्ना छोरा पाण्डवसँग बसे हुन्थ्यो भन्ने थियो तर यसोभएमा उनको पितृकुल भने भगवान्बाट प्राप्त हुने लाभबाट वञ्चित हुन्थे । तर, यी सबै पक्षपातपूर्ण सोचाईले कुन्तीको मन दुःखित भएको थियो । त्यसकारण, उनले त्यो स्नेह बन्धन काट्ने इच्छा व्यक्त गरेकी थिइन् ।

शुद्ध भक्तले आफ्नो परिवारप्रतिको सीमित स्नेहबन्धनलाई काटेर सम्पूर्ण विस्मृत आत्माहरूको भक्तिमय सेवामा आफ्नो कार्य विस्तार गर्दछ । यसका प्रतीकात्मक उदाहरण षड्गोस्वामीहरू हुनुहुन्छ जसले भगवान् चैतन्यको मार्गको अनुसरण गर्नुभयो । उहाँहरू सबै अत्यन्त प्रबुद्ध र सुसंस्कृत धनी उच्च परिवारका हुनुहुन्थ्यो तर धेरै जनाको हितका लागि आफ्नो सुखदायी घरलाई त्यागेर भिक्षुक

संन्यासी बन्नुभयो । परिवारको स्नेहबन्धन काट्नुभनेको कार्यको क्षेत्र वितरण गर्नु हो । यसो नगरेसम्म कोही पनि ब्राह्मण बन्न, न राजा बन्न, न जनताको नेता बन्न र न भगवान्को भक्त बन्न योग्य हुन्छ । भगवान्ले आदर्श राजाका रूपमा यस्तो उदाहरण प्रस्तुत गर्नुभएको छ । श्रीरामचन्द्रले आदर्श राजाको गुण प्रकट गर्दै आफ्नी प्रिय पत्नीसँगको स्नेहबन्धन काट्नुभएको थियो ।

यस्ता ब्राह्मण, भक्त, राजा, जनताका नेताहरू सबै नै आफ्नाआफ्ना कर्तव्यको पालना गर्नका लागि उदारमनको हुनुपर्दछ । श्रीमती कुन्तीदेवी यो तथ्यसँग अवगत थिइन् तर अबला भएकी हुनाले यस्तो पारिवारिक स्नेहबन्धन काट्नका लागि प्रार्थना गरेकी थिइन् । भगवान्लाई यहाँ विश्वका ईश्वर वा विश्वका आत्मा भनेर सम्बोधन गरिएको छ किनभने उहाँसँग पारिवारिक स्नेहको बन्धन काट्ने सामर्थ्य छ भन्ने सङ्केत गर्नका लागि भनिएको हो । त्यसकारण, कहिलेकाहीँ कमजोर भक्तप्रतिको विशेष आकर्षणको कारणले गर्दा भगवान्ले आफ्नो सम्पूर्ण शक्तिद्वारा व्यवस्थित परिस्थिति उत्पन्न गरेर भक्तको पारिवारिक स्नेहको बन्धन काटिदिनुभएको हामीले अनुभव गरेका छौं । यसो गरेर भक्तलाई पूर्णरूपले आफूमा आश्रित बनाएर उसलाई भगवद्धाम फर्कने बाटो खुला गरिदिनुहुन्छ ।

कुन्ती वृष्णिकुलकी छोरी, पाण्डव परिवारकी पत्नी र आमा थिइन् । साधारणतया स्त्रीको आफ्नो पितृ परिवार र पतिको परिवारतर्फ स्नेह हुन्छ । त्यसैले, कुन्तीले भगवान् श्रीकृष्णसँग प्रार्थना गर्दै भन्दछिन्- "म स्त्री हुँ र स्त्रीको आफ्ना परिवारप्रति स्नेह हुन्छ । त्यसैले, कृपया त्यो स्नेहको बन्धन काटिदिनुहोस् जसले गर्दा म पूर्णरूपले हजुरप्रति अनुरक्त हुन सकूँ । हजुरविना दुवै परिवार शून्य छन् । म दुवै परिवारको कृत्रिम स्नेहमा परेकी छु तर मेरो वास्तविक उद्देश्य भनेको हजुरसँग अनुरक्त हुनु हो ।" यो नै भक्ति हो ।

यस भौतिक संसारबाट मुक्त हुनु र भगवान् श्रीकृष्णप्रति आसक्त हुनु नै भक्ति हो । कोही पनि विरक्त रहन सक्दैन । त्यसैले, ऊ कसैसँग आसक्त हुनु नै पर्दछ, तर मानिस भगवान् श्रीकृष्णतर्फ वा भगवान्को भक्तिमा आसक्त हुनका लागि ऊ भौतिक स्नेहबाट विरक्त हुनुपर्दछ ।

साधारणतया मानिसहरू आफ्नो आसक्ति यस भौतिक संसारसँग रहिरहोस् भन्नका लागि भगवान् श्रीकृष्ण कहाँ जान्छन् । "हे ईश्वर ! हामीलाई दैनिक भोजन प्रदान गर्नुहोस्" भनेर प्रार्थना गर्दछन् । तिनीहरूको भौतिक जगत्सँग

आसक्ति हुन्छ । त्यसैले, यस भौतिक जगत्मा आफ्नो यथास्थिति स्थिर राख्नका लागि, भौतिक वस्तुको आपूर्तिका लागि भगवान् श्रीकृष्णको प्रार्थना गर्दछन् । एकप्रकारले मानिस आफ्नो भौतिक अवस्था सुरक्षित राख्नका लागि ईश्वरकहाँ जान्छन् तर त्यसोगर्नु वान्छनीय होइन । भौतिक ऐश्वर्य वृद्धिका लागि ईश्वरको पूजा गर्नुको सट्टा भौतिक आसक्तिबाट मुक्त हुनका लागि पूजा गर्नुपर्दछ । त्यसकारण, भक्ति योगका लागि हामी विरक्त हुनपर्दछ ।

आसक्तिका कारणले नै हामीले दुःख पाईरहेका छौं किनभने हामी भौतिकतामा नै आसक्त छौं र हामी भौतिक वस्तुको चाहना गर्दछौं । त्यसकारण, भगवान् श्रीकृष्णले हामीले जुन भौतिक सुविधाको सुख चाहेको हुन्छौं त्यसको उपभोग गर्ने अवसर प्रदान गर्नुहुन्छ । निश्चय नै हामी त्यस सुविधाका लागि योग्य हुनुपर्दछ । पहिला योग्य बन अनि कामना गर । यदि म राजा बन्न चाहन्छु भने मैले धेरै पुण्य गरेको हुनुपर्दछ अनि मात्र म राजा बन्न सक्दछु ।

भगवान् श्रीकृष्णले हामीलाई चाहेको सबै कुरा दिन सक्नुहुन्छ । मुक्ति पनि दिनुहुन्छ । तर, भक्तिको विषयमा भने विशेष विचार गर्नुहुन्छ किनभने यदि उहाँले भक्ति प्रदान गर्नुभयो भने उहाँ भक्तले खरिद गरेजस्तै नियन्त्रणमा रहनुहुन्छ र भक्तको हातको खेलौनाजस्तो बन्नुहुन्छ, हुनत उहाँ परम शक्तिशालि हुनुहुन्छ । भक्तिको सर्वोच्च प्रतीक राधारानी हुनुहुन्छ र उहाँ यति शक्तिशाली हुनुहुन्छ उहाँले भगवान् श्रीकृष्णलाई खरिद गरेजस्तै आफ्नो वशमा राख्नुहुन्छ । त्यसकारण वैष्णवहरू राधारानीका चरणकमलको आश्रय लिन्छन किनभने यदि राधारानीले "यो उत्तम भक्त हो" भन्नुभयो भने भगवान् श्रीकृष्णले उसलाई स्वीकार गर्नुपर्दछ ।

यदि भगवान्को भक्त बन्नुछ भने मानिस सबै भौतिक आसक्तिबाट पूर्णरूपले मुक्त हुनुपर्दछ । यो योग्यतालाई नै वैराग्य भनिन्छ । श्री चैतन्य महाप्रभुका विद्यार्थी भएपछि सार्वभौम भट्टाचार्यले उहाँको प्रशंसामा एक सय श्लोकको लेख लेख्नु भयो । तीमध्ये दुई श्लोक चैतन्य चरितामृतमा उल्लेख गरिएको छ, जसमध्ये एउटामा यस्तो वर्णन गरिएको छ ।

**वैराग्यविद्यानिजभक्तियोगशिक्षार्थमेकः पुरुषः पुराणः ।**
**श्रीकृष्णचैतन्यशरीरधारी कृपाम्बुधिर्यस्तमहं प्रपद्ये ॥**

"म भगवान् श्रीकृष्णको शरण ग्रहण गर्दछु । उहाँ हामीलाई सही ज्ञान आफ्नो

भक्तिमय सेवा र कृष्णभावनारहित कार्यबाट मुक्त हुने शिक्षा प्रदान गर्न भगवान् चैतन्य महाप्रभुको रूपमा अवतरित हुनुभएको छ। दिव्य कृपाका सागर हुनुभएको हुनाले नै तपाईं यस धरातलमा अवतरित हुनुभएको छ । म तपाईंको चरणकमलको शरणमा पर्दछु । (चैतन्य चरितामृत, मध्य, ६.२५४) यसरी सार्वभौम भट्टाचार्यले भगवान्को प्रार्थना गर्नुभयो । भगवान् श्रीकृष्णको भक्त कसरी बन्ने भन्ने शिक्षा दिन भगवान् स्वयम्ले चैतन्य महाप्रभुको रूप धारण गर्नुभएको छ।

चैतन्य महाप्रभु जब चौबीस पच्चीस वर्षका हुनुहुन्थ्यो, उहाँकी प्रिय सुन्दर पत्नी र अनुरक्त एवम् स्नेहमयी आमा थिए तर उहाँले सबै त्याग गरेर संन्यास लिनुभयो । जब चैतन्य महाप्रभु गृहस्थ आश्रममा हुनुहुन्थ्यो, उहाँलाई सबैले सम्मान गर्दथे। उहाँको एक औंलाको इशारामा हजारौं व्यक्ति अवज्ञा आन्दोलनमा सहभागी हुन तयार भएका थिए । नदिया, जहाँ उहाँ निवास गर्नुहुन्थ्यो त्यहाँ उहाँ धेरै सम्मानित हुनुहुन्थ्यो। उहाँ शरीरिकरूपले पनि अति सुन्दर हुनुहुन्थ्यो । तैपनि उहाँले आफ्नी युवती, विश्वसनीय र सुन्दर पत्नी, स्नेहमयी आमा, प्रतिष्ठित पद र अन्य सबै त्याग गर्नुभयो। यसलाई नै वैराग्य भनिन्छ।

यदि कसैसँग केही पनि छैन, तैपनि उसले "मैले सबैकुरा त्याग गरे" भन्दछ भने उसको त्यागको के नै अर्थ हुन्छ ? तर यदि कसैसँग केही छ र उसले ती वस्तुको त्याग गऱ्यो भने अनि मात्र उसको वैराग्यको सार्थकता हुन्छ। चैतन्य महाप्रभुको त्याग अद्वितीय छ। कसैले पनि त्यस्तो सुखी घर, प्रतिष्ठा, स्नेही आमा, पत्नी, मित्र र विद्यार्थीको त्याग गर्न सक्दैन । अद्वैत प्रभुको उमेर चैतन्य महाप्रभुको पितासमान थियो । उहाँले पनि चैतन्य महाप्रभुको सम्मान गर्नुहुन्थ्यो । तैपनि चैतन्य महाप्रभुले त्यो सम्मान पनि त्याग गर्नुभयो। किन गर्नुभयो ? केवल हामीलाई शिक्षा दिन (**आपनि आचरि, प्रभु जीवेर शिखाय**)। मानिस कसरी विरक्त हुनपर्दछ र भगवान् श्रीकृष्णको भक्त बन्नपर्दछ भनेर उहाँले व्यक्तिगत रूपले नै सम्पूर्ण संसारलाई शिक्षा दिनुभयो। त्यसकारण, रूप गोस्वामीले जब सरकारको मन्त्रीपदबाट राजीनामा दिएर प्रयागमा चैतन्य महाप्रभुसँग भेट गर्नुभयो, उहाँ श्री चैतन्य महाप्रभुका अघि साष्टाङ्ग प्राणाम गर्दै यसप्रकारले स्तुति गर्नुभयो–

**नमो महावदान्याय कृष्णप्रेमप्रदाया ते ।**
**कृष्णाय कृष्णचैतन्यनाम्ने गौरत्विषे नमः ॥**

"तपाईं अत्यन्त विशाल हृदयका हुनुहुन्छ, किनभने तपाईंले कृष्णप्रेम वितरण गरिरहनुभएको छ" भनेर स्तुति गर्नुभयो ।

कृष्णप्रेम प्राप्त गर्न सजिलो छैन किनभने यो प्रेमद्वारा भगवान् श्रीकृष्णलाई खरिद गर्न सकिन्छ । तैपनि, चैतन्य महाप्रभुले यो कृष्णप्रेम सबैलाई वितरण गर्नुभयो । उहाँले दुईजना जगाइ र मघाइ नाम गरेका रक्सी पिउनेलाई पनि यो प्रेम दिनुभयो । त्यसैले, नरोत्तम दास ठाकुरले यसरी गाउनु भयो ।

**दीन-हीन यत छिल, हरि-नामे उद्धरिल ।**
**ता'र साक्षी जगाइ-मघाइ ॥**

"चैतन्य महाप्रभु अति उदार हुनुहुन्छ । उहाँले सबै प्रकारका पापीहरूलाई 'हरे कृष्ण' महामन्त्रको जपकीर्तन गर्ने अनुमति दिएर तिनीहरूको उद्धार गर्नु भयो त्यसको प्रमाण जघाइ र मघाइ हुन् ।" निश्चय नै त्यससमयमा केवल दुई जना जगाइ र मघाइ थिए भने वर्तमान अवस्थामा चैतन्य महाप्रभुका कृपाले उहाँको शिक्षाको प्रक्रियाले धेरै नै जगाइ मघाइको उद्धार भएको छ । यदि चैतन्य महाप्रभु प्रसन्न हुनुभयो भने उहाँले कृष्णप्रेम जसलाई पनि प्रदान गर्नुहुन्छ । उसको योग्यता जेजस्तो भए पनि कुनै फरक पर्दैन किनभने कसैले दान दिन लागेको छ भने उसले कसैलाई दान दिन सक्दछ ।

चैतन्य महाप्रभुको कृपाविना भगवान् श्रीकृष्णलाई बुझ्न धेरै कठिन हुन्छ । **मनुष्याणां सहस्रेषु कश्चित् यतति सिद्धये** (भगवद्गीता ७.३) । लाखौंलाखमध्ये केहीले मात्र आफ्नो जीवनलाई आध्यात्मिकतामा लगाएर सफल बनाउने प्रयास गर्दछन् । मानिसहरू पशुसरह कार्य गर्दछन् तर आफ्नो मानव जीवन कसरी सफल बनाउने हो भन्ने कुराका बारेमा केही पनि जान्दैनन् । भगवान् श्रीकृष्णका बारेमा जान्नसके मात्र मानव जीवन सफल हुन्छ, अन्यथा मानिस पशुसरह नै हुन्छ । कुनै मनिस कृष्णभावनाभावित छैन, भगवान् श्रीकृष्णका बारेमा केही जान्दैन भने ऊ पशुभन्दा राम्रो हुन सक्दैन । तर, चैतन्य महाप्रभुले यस युगमा पतित आत्मालाई केही सुविधा दिनुभएको छ- "केवल हरे कृष्ण महामन्त्रको जप र कीर्तन गर तिमी मुक्त हुनेछौ ।"

यो नै चैतन्य महाप्रभुले दिनुभएको विशेष सुविधा र छुट हो । (**कीर्तनादेव कृष्णस्य मुक्तसँगः परं व्रजेत-** श्रीमद्भागवत् १२.३.५१)

कुन्ती समान्य भक्त थिइनन् । उनी भगवान् श्रीकृष्णकी नातेदार बनेकी थिइन्, त्यसकारण भगवान् श्रीकृष्ण उनलाई सम्मान दिन आउनुभएको थियो ।

तैपनि उनले भनिन्– "हे कृष्ण ! म दुई परिवारमा आसक्त भएकी छु- एउटा मेरो पितृ परिवार र अर्को मेरो पतिको परिवार । त्यसैले, कृपया मलाई यी दुवै परिवारिक आसक्तिबाट मुक्त गरिदिन सहयोग गर्नुहोस् ।" यसरी मानिसलाई उसको समाज, मित्रता र प्रेमबाट कसरी वैराग्य हुने भन्ने सन्दर्भमा उनले दृष्टान्त दिइन्, अन्यथा यी सबैले हामीलाई बन्धनमा बाँध्दछन् ।

जहिलेसम्म हामीले "म यो परिवारको हुँ, यो देशको हुँ, यो धर्मको हुँ वा यो वर्णको हुँ आदि" सोच्दछौं, तबसम्म कृष्णभावनाभावित हुन सम्भव हुँदैन । जबसम्म मानिसले म अमेरिकी, भारतीय, अफ्रिकी, वा यो परिवारको त्यो परिवारको वा फलानोको पिता, माता, पति वा पत्नी भन्ने सोच्दछ, तबसम्म ऊ भौतिक उपाधिहरूसँग आसक्त भइरहन्छ । "म आत्मा हुँ यी सबै आसक्ति शरीरसँग सम्बद्ध हुन् र म यो शरीर होइन ।" यो नै जान्नपर्ने सारतत्त्व हो । यदि म यो शरीर होइन भने म कसको पिता वा माता हुँ ? परमपिता वा माता भगवान् श्रीकृष्ण हुनुहुन्छ । हामी केवल मञ्चमा बसेर पिता, माता, भाइ बहिनी आदिको भूमिकामा नाटक मञ्चन गरिरहेका छौं । मायाले हामीलाई नचाइरहेकी छिन् र हामीलाई "तिमी यो परिवारका सदस्य हौ, यो देशको सदस्य हौ" भन्दछिन् । अनि हामी बाँदर नाचेजस्तै गरेर नाचिरहेका छौं ।

भगवद्गीता (३.२७) मा भनिएको छ–

**प्रकृतेः क्रियमाणनि गुणैः कर्मणि सर्वशः ।**
**अहंकार विमूढात्मा कर्ताहमिति मन्यते ॥**

जीव प्रकृतिको कुनै एउटा गुणसँग सम्बद्ध हुन्छ र प्रकृतिले उसलाई सोही गुणअनुसार नचाउँदछिन् । त्यसैले, उसले "म यो हुँ वा त्यो हुँ" भनेर सोच्दछ भन्ने कुराको सङ्केत यो श्लोकले गरेको छ । भगवद्गीतामा उपलब्ध यो जानकारी नै ज्ञानको मूलभूत सिद्धान्त हो र यसले नै मानिसलाई स्वतन्त्रता प्रदान गर्दछ ।

मानिसलाई देहात्मबुद्धिबाट मुक्त गराउने शिक्षा नै सर्वाधिक अनिवार्य शिक्षा हुनुपर्ने हो तर दुर्भाग्यवश वैज्ञानिक, दार्शनिक, राजनीतिज्ञ र अन्य तथाकथित नेताहरूले मानिसलाई भ्रमित गर्दछन्, जसले गर्दा उनीहरू शरीरप्रति अरू अधिक आसक्त हुन्छन् । यो मानव जीवन कृष्णचेतनाले युक्त हुनका लागि अवसरस्वरूप प्रदान गरिएको हो तर यी दुष्टहरूले मानिसलाई शारीरिक उपाधिहरूप्रति

आकृष्ट गरेर त्यो अवसर सदुपयोग गर्नबाट रोकेका छन् । त्यसैले, तिनीहरू मानव सभ्यताका सबैभन्दा ठूला शत्रु हुन् ।

जीवले विभिन्न प्रकारका जलचर, बिरूवा, रूख, किरा, चरा, जङ्गली जनावर अनि चौरासी लाख योनिमा विकसित हुँदै यो मानव शरीर प्राप्त गरेको छ । मानिसलाई उसको अर्को योनि के हुने हो थाहा छैन । तर त्यस सम्बन्धमा भगवद्गीता (९.२५) मा वर्णन गरिएको छ । **यान्ति देवव्रता देवान्–** विकासको अब आउने चरणमा यदि मानिस उच्चस्तरको लोकमा जान चाहेमा ऊ जान सक्दछ । हुनत मानिसले प्रत्येक रात्रिमा धेरै ग्रह र ताराहरू देख्दछ तर ती उच्चस्तरका लोकका बारेमा उसले केही पनि जानेको हुँदैन । तर शास्त्रबाट हामीलाई जानकारी हुन्छ । ती उच्चलोकमा भौतिक सुविधाहरू यस पृथ्वीको तुलनामा धेरैधेरै अत्यधिक मात्रामा बढी हुन्छ । यस लोकमा हामी धेरैभन्दा धेरै सय वर्ष बाँच्न सक्दछौं तर ती उच्चलोकमा मानिस कति वर्ष बाँच्न सक्दछन् भन्ने गणना हामी गर्न सक्दैनौं उदाहरणका लागि उच्चस्तरमा निवास गर्ने ब्रह्माजीको आयुका बारेमा भगवद्गीता (८.१७) मा वर्णन गरिएको छ– **सहस्रयुगपर्यन्तमहर्यद् ब्रह्मणो विदुः** । हाम्रो गणितको गणना अनुसार ब्रह्माजीको पनि मृत्यु हुन्छ । कसैको आयु लामो हुन सक्दछ तर कोही पनि यस भौतिक जगत्मा स्थायीरूपले जीवित रहन सक्दैन । यदि कसैले आफूलाई उच्चलोकतर्फ जानका लागि तयारी गऱ्यो भने उच्चलोक वा पितृलोक जान सक्दछ । मानिस त्यहाँ गएर आफ्ना पितृहरूसँग भेट गर्न सक्दछ । त्यसरी नै यदि कसैले चाहेमा ऊ यही पृथ्वीमा पनि बस्न सक्दछ । वा **यान्ति मद्याजिनोद्रपि माम्–** यदि कोही भगवान् श्रीकृष्णको भक्त बन्यो भने ऊ भगवान् कहाँ जान पाउँदछ ।

कोही नर्क जान सक्दछ कोही स्वर्ग जान्छ भने कोही इच्छाअनुसार भगवान्को धाम जान सक्दछ । त्यसकारण बुद्धिमान् मानिसले सोच्न पर्दछ– "यदि मैले अर्को जन्मका लागि तयारी गर्नु छ भने मैले भगवद्धाम जाने तयारी किन नगर्ने ?" मानिसले यो शरीर नष्ट भएपछि उसले अर्को शरीर धारण गर्नुपर्दछ । उसले कस्तो शरीर प्राप्त गर्दछ त्यसको वर्णन भगवद्गीता (१४.१८) मा गरिएको छ । **उर्ध्वं गच्छन्ति सत्त्वस्थाः** । जुन व्यक्ति सत्त्व गुणमा अवस्थित छ, पापमय जीवनका चार सिद्धान्तलाई त्याग गरेको छ, उसले अर्को जीवनमा उच्चलोक प्राप्त गर्दछ । यदि कुनै व्यक्ति भगवान्को शुद्ध भक्त बन्न सकेको छैन तैपनि सिद्धान्तको पालना गर्दै पापमय जीवनबाट मुक्त भएको छ र

सत्वगुणमा अवस्थित छ भने उसले उच्चलोक जाने अवसर प्राप्त गर्दछ। मानव जीवन यही उद्देश्यका लागि नै हो। तर यदि हाम्रो जीवन कुकुर, बिरालो जस्तै केवल खाने, सुत्न, सम्भोग गर्न र आफ्नो रक्षा गर्न नै नष्ट गऱ्यौं भने हामीले यो अवसर व्यर्थमा नै नष्ट गर्नेछौं।

दुष्टहरूलाई यो कुरा थाहा हुँदैन। उनीहरू अर्को जीवन हुन्छ भन्ने विश्वास नै गर्दैनन्। रुसका प्राध्यापक कोतोवस्कीले मलाई भने "स्वामीजी ! यो शरीर समाप्त भएपछि सबै कुरा समाप्त हुन्छ।" उनी ठुला प्राध्यापक थिए तैपनि यस्तो कुरा गर्दथे। त्यस्ता व्यक्तिले आफूलाई वैज्ञानिक वा दार्शनिक हुँ भन्दछन् तर वास्तवमा तिनीहरूलाई कुनै ज्ञान नै छैन अनि तिनीहरूले अरूलाई भ्रमित गराउँदछन्। यो नै हाम्रो लागि शोकको ठुलो स्रोत हो। त्यसकारण, मैले हाम्रा कृष्णभावनामृत आन्दोलनका सदस्यहरूलाई अनुरोध गरेको छु, तिमीहरू गएर यस्ता दुष्टहरू, जसले समाजलाई भ्रमित गरेका छन् तिनीहरूलाई चुनौती दिँदै वादविवादमा परास्त गर। कृष्णभक्तहरू भावनावादी हुन्छन् भनेर मानिसले सोच्नुहुँदैन। यसका विपरीत भक्तहरू महानतम दार्शनिक र वैज्ञानिक हुन्छन्।

भगवान् श्रीकृष्णका दुई वटा कार्य छन्– **परित्राणाय साधूनां विनाशाय च दुष्कृताम्**- साधु भक्तहरूको रक्षा गर्नु र असुरको वध गर्नु। भगवान् श्रीकृष्णले पाण्डव र वृष्णिवंशीलाई संरक्षण गर्नुभयो किनभने तिनीहरू भक्त थिए। साथै, कंश, अघासुर, वकासुरजस्ता असुरहरूको वध गर्नुभयो। यी दुई कार्यमध्ये असुरको वध गर्नु मुख्य कार्य थियो। भगवान्‌ले वध गर्न कति समय लगाउनुभयो र संरक्षण गर्न कति समय लगाउनुभयो, त्यसको परीक्षण गरियो भने थाहा हुन्छ,। उहाँले वध गर्न नै धेरै समय व्यतीत गर्नुभयो। त्यसैगरेर, कृष्णभावना भावित भक्तले पनि वध गर्नुपर्दछ तर हतियारले होइन, तर्क र शिक्षाद्वारा वध गर्नुपर्दछ। यदि कोही असुर छ भने हामीले तर्कद्वारा त्यसको आसुरी प्रवृत्तिको वध गरेर उसलाई शान्त प्रकृतिको भक्त बनाउनुपर्दछ। विशेष गरेर वर्तमान कलियुगमा मानिसहरू पहिलेदेखि नै गरिबीले सताइएका हुनाले तिनीहरूको शरीरिक वध गर्नु भनेको अरू ठुलो दण्डजस्तो हुनेछ। त्यसकारण, तिनीहरूलाई तर्कद्वारा कारण देखाएर र वैज्ञानिक आध्यात्मिक ज्ञानद्वारा तिनको वध गर्नुपर्दछ।

कुन्तीले भगवान् श्रीकृष्णलाई विश्वेश्वर वा विश्वका ईश्वर भनेर सम्बोधन गरेकी छिन्। ब्रह्माण्डका सबै कार्य सुचारूरूपले चलिरहेका छन्। सूर्य समयमा

उदाएका छन्, ऋतु परिवर्तन भइरहेको छ । ऋतुअनुसारका फलफूल फल्नेफूल्ने गरिरहेका छन् । त्यसैले, कुनै अव्यवस्था भएको छैन तर यो सबै कुरा यति सरल तरिकाले विनानियन्त्रक कसरी सम्पन्न भइरहेको छ ? यदि हामीले कुनै प्रतिष्ठान् सुचारूरूपले सञ्चालित भएको देख्यौं भने त्यहाँ कुनै व्यवस्थापक, निर्देशक वा दक्ष नियन्त्रक छ भनेर बुझ्न सक्दछौं । त्यसरी नै, यो ब्रह्माण्डको कार्य सुव्यवस्थित तरिकाले सञ्चालन भइरहेको देखेपछि यसको पछि पनि कुनै असल नियन्त्रक छ भन्ने कुरा हामीले बुझ्नुपर्दछ । त्यो नियन्त्रक को हो ? भगवद्गीता (**मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम्**) मा उल्लेख भएअनुसार भगवान् श्रीकृष्ण नै नियन्त्रक हुनुहुन्छ । त्यसकारण, कुन्तीले उहाँलाई विश्वेश वा ब्रह्माण्डका नियन्त्रक भनेर सम्बोधन गरेकी हुन् । धेरैजसो मानिसहरू भगवान् श्रीकृष्णले राधारानीलाई आलिङ्गन गर्नुभएको तस्बिर हेर्ने इच्छा गर्दछन् र भगवान् श्रीकृष्ण र राधारानीलाई एउटा सामान्य बालक र बालिका जस्तो व्यवहार गर्दछन् । तिनीहरूले भगवान् श्रीकृष्णलाई बुझ्न सक्दैनन् । त्यस्ता हानिकारक तस्बिरहरू त्याग्नुपर्दछ । भगवान् श्रीकृष्ण परम नियन्त्रक हुनुहुन्छ, त्यसकारण भगवान् श्रीकृष्णले यो ब्रह्माण्डलाई कसरी नियन्त्रण गर्नुभएको छ । त्यस्तो तस्विर हुनुपर्दछ र हेर्नुपर्दछ । त्यस्ता तस्बिरको आवश्यकता छ । अन्य सस्ता तस्विरहरूको आवश्यकता छैन ।

शरीरमा जीवन शक्ति विद्यमान् भएन भने शरीरले हिँड्डुल गर्न र ठीकसँग काम गर्न पनि सक्दैन । त्यसरी नै, यो ब्रह्माण्डमा भगवान् श्रीकृष्ण जीवन शक्तिरूपी क्षीरोदकशायी विष्णु वा परमात्मारूपमा उपस्थित हुनुहुन्छ । त्यसकारण, कुन्तीले भगवान् श्रीकृष्णलाई विश्वात्मा वा ब्रह्माण्डका आत्मा भनेर सम्बोधन गरेकी छिन् । जब अर्जुनले भगवान्को विश्वरूपको दर्शन गर्ने इच्छा गरे, भगवान् श्रीकृष्णले तुरून्त विश्वरूपको दर्शन दिनुभयो । यो भगवान् श्रीकृष्णको अर्को ऐश्वर्य (विभूति) हो ।

हुनत भगवान् श्रीकृष्णको मूल आदि रूप दुई हातमा बाँसुरी बजाइएको नै हो । अर्जुन भक्त थिए, उनी विश्वरूपको दर्शन गर्न चाहन्थे । त्यसैले, भगवान् श्रीकृष्णले विश्वरूपको दर्शन दिभुएको हो तर यो उहाँको वास्तविक रूप भने होइन । कुनै व्यक्तिले राजाको लुगा लगाउन सक्दछ तर उसको वास्तविक रूप घर गएर देख्न सकिन्छ । त्यसैगरेर, भगवान् श्रीकृष्णको वास्तविक रूप उहाँको धाम वृन्दावनमा देख्न सकिन्छ भने अन्य सबै रूपहरू उहाँका अधिकारयुक्त

विस्तारित अंश हुन् । ब्रह्मसंहितामा भनिएको छ- **अद्वैतमच्युतदिमनन्तरूपम्**- भगवान् आफूलाई करोडौंरूपमा विस्तारित गर्न सक्नुहुन्छ (**अनन्तरूपम्**) तर उहाँ एक (**अद्वैत**) हुनुहुन्छ, उहाँ अच्युत हुनुहुन्छ । उहाँको वास्तविकरूप नै **द्विभुज मुरलीधर** दुई हातमा मुरली धारण गर्ने नै हो । त्यसकारण, कुन्तीदेवी भन्दछिन्- "हजुरको विश्वरूप पनि छ तर अहिले हजुर जुनरूपमा हाम्रा अघि हुनुहुन्छ, यो नै हजुरको वास्तविकरूप हो ।"

कुन्तीदेवी प्रार्थना गर्दै भन्दछिन्– "कृपया, मेरो नातेदारप्रतिको स्नेहको गाँठो काटिदिनुहोस् ।" हामीहरू भने, "यो मेरो हो, त्यो मेरो हो" भन्ने सोच्दछौं । यस्तो सोच्नु नै मोह हो । (**जनस्य मोहोद्रयमहं ममेति**) यो मोह अस्तित्वमा कसरी आयो ? स्त्री र पुरुषको स्वाभाविक आकर्षणबाट यसको प्रारम्भ हुन्छ । पुरुष स्त्रीलाई चाहन्छ, स्त्री पुरुषलाई चाहन्छिन् । यो केवल मानव समाजमा मात्र सत्य होइन, यो कुरा चराको समाज, जनावरको समाज र अन्य समाजमा पनि लागु हुन्छ । जब पुरुषले स्त्रीलाई भेट्दछ उनीहरू एक भएर सम्भोग गर्दछन् । अनि, उनीहरूको आसक्ति अरू सुदृढ हुन्छ (**तयोर्मिथो हृदयग्रन्थिमाहुः**) । जब उनीहरूको आकर्षण र आसक्ति बढ्दछ, उनीहरू सँगसँगै एउटा अपार्टमेन्टमा बस्न सुरु गर्दछन् । त्यसपछि उनीहरूलाई धन कमाउनपर्ने आवश्यकता पर्दछ । जब वासस्थान व्यवस्थित हुन्छ अनि उनीहरूलाई सन्तानको आवश्यकता पर्दछ । साथै, आएर आफ्नो प्रशंसा गर्ने मित्रहरू पनि चाहिन्छ, जसले– "अहो ! तिमीहरूसँग कति राम्रो अपार्टमेन्ट छ र असल सन्तान पनि छन् भन्दछन् ।" यसप्रकारले दुईबीच आसक्ति अरू वृद्धि हुन्छ ।

त्यसकारण, विद्यार्थीको शिक्षा यौन आसक्तिरहित ब्रह्मचर्यबाट प्रारम्भ हुनुपर्दछ । यदि उसले सक्दछ भने यस्ता मूर्खतापूर्ण कार्यलाई छोड्नपर्दछ । यदि त्यसो गर्न सक्दैन भने वैवाहिक जीवनमा प्रवेश गरेर केही समय पश्चात वानप्रस्थ आश्रममा प्रवेश गर्नुपर्दछ । त्यससमय उसले सोच्नुपर्दछ– "मैले यो आसक्तिसहितको जीवनको धेरै भोग गरें । अब मैले घरलाई त्याग्नुपर्दछ ।" त्यसपछि मानिस विरक्त बन्नका लागि धार्मिक स्थलको भ्रमण गर्नुपर्दछ । श्रीमती पनि साथै जान्छिन् तर केवल सहयोगीका रूपमा मात्र । दुई तीन महिनापछि घर फर्केर आउँदछ अनि आफ्नो परिवार, छोराछोरी ठीकै छन्, छैनन् हेरेर पुनः घर छोडेर जानुपर्दछ । यो नै विरक्तिको प्रारम्भ हो । जब अनासक्ति पूर्ण हुन्छ अनि उसले आफ्नी पत्नीलाई भन्दछ- "अब तिमी घर गएर छोराछोरीसँग बस

म संन्यास लिन्छु ।" यो नै अन्तिम अनासक्ति हो । सम्पूर्ण वैदिक जीवनशैली विरक्तिका लागि हो त्यसैले, कुन्तीले प्रार्थना गर्दै भन्दछिन्- "कृपया मलाई यो पारिवारिक आसक्तिबाट मुक्त गरिदिनुहोस् ।" यो नै कुन्दीदेवीको शिक्षा हो ।

***

# २५. अहैतुकी भक्ति

**त्वयि मेद्रनन्यविषया मतिर्मधुपतेद्रसकृत् ।**
**रतिमुद्वहतादद्धा गङ्गेवौघमुदन्वति ॥**

"हे मधुपति ! जसरी गङ्गा विना अवरोध समुद्र तर्फ बग्दछिन्, त्यसरी मेरो आकर्षण अन्यतर्फ नगएर हजुरतर्फ मात्र निरन्तर रहिरहोस् ।"

**–(श्रीमद्भागवत् १.८.४२)**

शुद्ध भक्तिको पूर्णता तब प्राप्त हुन्छ, जब सम्पूर्ण ध्यान केवल भगवान्‌को दिव्य भक्तिमा लगाइन्छ । अन्य सबै प्रकारका स्नेहका बन्धनको विच्छेद गर्नु भनेको पूर्णरूपले अन्य कसैसँगको स्नेह बन्धन पनि छिन्न भएको हो भन्ने हुँदैन । त्यो सम्भव छैन । जुनसुकै जीव होस्, उसको अन्यप्रतिको स्नेहभाव रहन्छ नै किनभने यो जीवनको लक्षण हो । जीवनका लक्षण, जस्तैः- इच्छा, क्रोध, आकर्षण र भावनाहरू नष्ट गर्न सकिँदैन । तिनको उद्देश्य भने परिवर्तन गर्न सकिन्छ । इच्छालाई रोक्न सकिँदैन तर त्यही इच्छा इन्द्रियतृप्तिमा नलगाएर भगवान्‌को भक्तिमय सेवामा लगाउनुपर्दछ । परिवार, समाज, देश, आदिप्रतिको तथाकथित स्नेह इन्द्रियतृप्तिको विभिन्न अवस्थामा स्थित हुन्छ । यदि त्यही इच्छालाई परिवर्तन गरेर भगवान्‌को तृप्तिको लागि प्रयोग गरिन्छ भने त्यसलाई नै भक्तिमय सेवा भनिन्छ ।

अर्जुन आफ्नो इच्छाको तृप्तिका लागि आफ्ना भाइ र नातेदारसँग नलड्ने इच्छा गर्दै गरेका, भगवद्‌गीतामा हामी देख्न सक्दछौं तर, जब उनले भगवान्‌को उपदेशरूपी श्रीमद्‌भगवद्‌गीता सुने, उनले आफ्नो निर्णय परिवर्तन गरे र भगवान्‌को सेवा गरे । यसो गरेर उनी भगवान्‌का प्रख्यात भक्त बने । अनि भगवान्‌सँग अर्जुनले मित्रता गरेर भक्तिद्वारा आध्यात्मिक सिद्धि प्राप्त गरे भनेर सम्पूर्ण शास्त्रमा घोषणा गरिएको छ । हुनत युद्ध, मित्रता र अर्जुन त्यहाँ विद्यमान थिए र भगवान् श्रीकृष्ण पनि विद्यमान हुनुहुन्थ्यो तर अर्जुन भक्तिमय सेवाद्वारा

सर्वथा भिन्न व्यक्ति बने । त्यसकारण, कुन्तीको प्रार्थनाले पनि क्रियाकलापको भिन्नतातर्फ नै सङ्केत गरिरहेको थियो । श्रीमती कुन्तीदेवीले अनन्यभावले भगवान्‌को सेवा गर्न चाहन्थिन् र उनको प्रार्थना पनि त्यहीअनुरूप थियो । यस्तै अहैतुकी भक्ति नै जीवनको लक्ष्य हुनपर्दछ । सामान्यतया हाम्रो ध्यान यस्तो वस्तुको सेवातर्फ आकृष्ट हुन्छ, जुन अनिश्वरीय हुन्छ वा भगवान्‌को योजनामा हुँदैन । जब यस्ता कार्यक्रमहरू भगवान्‌तर्फ उन्मुख गरिन्छ, जब भगवान्‌को सेवाद्वारा इन्द्रियहरू शुद्ध हुन्छन्, त्यसलाई शुद्ध अहैतुकी भक्तिमय सेवा भनिन्छ । श्रीमती कुन्तीदेवी पूर्णता चाहन्थिन् । त्यसैले, भगवान्‌सँग सोहीअनुसारको प्रार्थना गरिरहेकी थिइन् ।

पाण्डव र वृष्णिहरूप्रतिको तिनको स्नेह भक्तिमय सेवाको सीमाभन्दा बाहिर थिएन किनभने भगवान्‌को सेवा र भक्तको सेवा समान नै हुन् । कहिलेकाहीँ भक्तको सेवा भगवान्‌को सेवाभन्दा महत्त्वपूर्ण हुन्छ तर यहाँ पाण्डव र वृष्णिहरूप्रतिको कुन्तीको स्नेह पारिवारिक सम्बन्धका कारणले गर्दा भएको थियो । भौतिक सम्बन्धको सन्दर्भमा यो स्नेहको गाँठो मायासँग सम्बन्धित हुन्छ, किनभने मन र शरीरसँगको सम्बन्ध बाह्य शक्तिको प्रभावका कारणले गर्दा हुन्छ । जब आत्माले आफ्नो सम्बन्ध परमात्मासँग स्थापित गर्दछ, त्यो सम्बन्ध नै वास्तविक सम्बन्ध हुन्छ । जब कुन्तीदेवीले पारिवारिक सम्बन्ध विच्छेद गर्ने इच्छा गरेकी थिइन भनेको आफ्नो छालासँगको सम्बन्ध विच्छेद गर्ने इच्छा गर्ने भन्ने हो । छालाको सम्बन्धका कारणले भौतिक बन्धनमा परिन्छ भने आत्मासँगको सम्बन्धको कारणले मुक्त भइन्छ । यो आत्माको आत्मासँग हुने सम्बन्ध परमात्मासँगको सम्बन्धको माध्यमले स्थापित गर्न सकिन्छ । अध्याँरोमा हेर्नु भनेको केही पनि नदेख्नु हो तर सूर्यको प्रकाशमा हेर्नु भनेको सूर्यका साथै सम्पूर्ण वस्तुलाई देख्नु हो, जुन अध्यारोमा देख्न सकिएको हुँदैन । यो नै भक्तिमय सेवाको मार्ग हो ।

श्रीमद्भागवत्‌को अघिल्लो श्लोकमा कुन्तीदेवीले प्रार्थना गर्दै, "हे भगवान् ! कृपया पाण्डव र वृष्णि परिवारप्रतिको आकर्षण काटिदिनुहोस्" भनेकी थिइन् । भौतिक वस्तुहरूप्रतिको आफ्नो आकर्षण त्याग्नु नै पर्याप्त हुँदैन । मायावादी दार्शनिक भन्दछन्– **ब्रह्म सत्यं जगत् मिथ्या-** "यो संसार झुटो हो र ब्रह्म (आत्मा) सत्य हो ।" हामी यो कुरा स्वीकार गर्दछौं र भोगको अर्थ विविधता हो । विविधताविना कुनै कुरा पनि भोग गर्न सम्भव हुँदैन । ईश्वरले यति धेरै रङ्ग, रूप

किन बनाउनुभयो ? विविधताद्वारा नै भोग उत्पन्न गर्नका लागि हो किनभने विविधता नै भोगकी आमा वा स्रोत हुन् ।

मायावादी दार्शनिक वा निर्विशेषवादीहरू यो विविधतालाई अस्वीकार गर्दछन् तर त्यसको परिणाम के हो ? किनभने तिनीहरू भक्तिमय सेवामा संलग्न हुँदैनन् केवल कठोर परिश्रम गर्दै तपस्या गर्दछन्, जसबाट कुनै स्थायी परिणाम प्राप्त गर्न सकिंदैन । श्रीमद्भागवत् (१०.२.३२) मा प्रार्थना गर्दै यसको वर्णन गरिएको छः

**येद्गन्योद्गरविन्दाक्ष विमुक्तमानिनस्त्वय्यस्तभावादविशुद्धबुद्धयः ।**
**आरुह्य कृच्छ्रेण परं पदं ततः पतन्त्यधोद्गनादृत युष्यदङ्घ्रय ॥**

"हे कमलका जस्ता आँखा भएका ईश्वर ! जसले हजुरको भक्तिमय सेवा नगरी यस जीवनबाट मुक्त भएँ भन्दछन्, ती सबै अशुद्ध बुद्धि भएका व्यक्ति हुन् । हुनत उनीहरू कठोर तपस्यालाई स्वीकार गर्दछन् र निर्विशेष ब्रह्मको अनुभूति गर्नेसम्म हुन्छन् तर हजुरका चरणकमलको उपेक्षा गरेका हुनाले पुनः तल झर्दछन् ।"

यो मानव जीवन ईश्वरसँगको आफ्नो सम्बन्ध पुनः स्थापित गर्न र त्यही सम्बन्धअनुसार कर्म गर्नका लागि हो । सामान्य व्यवहारमा पनि यदि कुनै पनि व्यापारीले अन्य व्यापारीसँग व्यापार गर्न चाह्यो भने पहिला उसले ऊसँग सम्बन्ध स्थापित गर्नुपर्दछ । त्यसरी नै, एक पतिपत्नीको विवाहपश्चात सम्बन्ध स्थापित हुन्छ अनि उनीहरू साथसाथै बस्न सुरु गर्दछन् । त्यसैगरेर, मानव जीवन भगवान्सँगको सम्बन्ध पुनः स्थापित गर्नका लागि हो र यो भौतिक जगत् भनेको त्यो सम्बन्ध बिर्सनु नै हो । यस भौतिक जगत्मा कृष्णभावना नै छैन । यदि जब कृष्णभावना उत्पन्न हुन्छ तब प्रत्येक कार्य भगवान् श्रीकृष्णको आधारमा हुने गर्दछन् अनि त्यो भौतिक जगत् नभएर आध्यात्मिक जगत् बन्दछ ।

स्त्री भएकी हुनाले कुन्तीदेवीको दुई कुलसँग सम्बन्ध थियो र त्यो नै उनको आसक्ति थियो । त्यसकारण उनले त्यो सम्बन्ध विच्छेद गरेर आफूलाई स्वतन्त्र बनाइदिन प्रार्थना गरिन् तर, स्वतन्त्र भएपछि उनले के गर्ने ? यो महत्त्वपूर्ण प्रश्न हो । कुनै व्यक्ति कुनै कार्यमा नियुक्त भएको छ, तर केही असुविधा अनुभव भएपछि उसले राजीनामा दिन्छ, यस्तो राजीनामा उचित हुन सक्दछ तर त्यो राजीनामा पश्चात ऊ कार्यविहीन हुन्छ, उसको कुनै कार्य नै हुँदैन । अनि त्यो राजीनामाको के अर्थ भयो ?

जुन व्यक्ति निराश र भ्रमित छ, उसले यो भौतिक जगत्लाई अस्वीकार गर्दछ। उनीहरूलाई आफूले के नचाहेको हो, त्यो थाहा हुन्छ तर के चाहेका हो, त्यो जानकारी नै हुँदैन। मानिस सदैव भन्ने गर्दछ- "म यो कुरा चाहन्न" तर उसले के चाहेको हो ? त्यो नै उसलाई थाहा छैन।

वास्तवमा मानिसको चाहना के हो भन्ने विषयको व्याख्या कुन्तीदेवीले गरेकी छिन्। उनी भन्दछिन्- " परिवारसँगको सम्बन्ध समाप्त होस् र हजुरसँगको सम्बन्ध स्पष्ट होस्, स्थापित होस्।" अर्को शब्दमा भन्नुपर्दा उनी अन्य कुनै वस्तुतर्फ आकर्षित नभएर भगवान् श्रीकृष्णतर्फ मात्र आकर्षित हुन चाहन्छिन्। यो नै पूर्णता हो र यो नै वास्तविक चाहना हुनुपर्दछ।

**अनन्यविषया** शब्दको अर्थ अनन्य भक्तिमय सेवा हो। त्यसकारण, हामी विचलित नभई चौबीस घण्टा भगवान् श्रीकृष्णप्रति आसक्त हुनुपर्दछ। यसो गरे मात्र हाम्रो वैराग्य पूर्ण हुन्छ। यदि हामीले भगवान् श्रीकृष्ण सँगसँगै भौतिक वस्तुतर्फ एक साथ आसक्त भयौं भने त्यो हाम्रो ठुलो भूल हुनेछ। हामी आगो बाल्ने र त्यसमा पानी हाल्ने कार्य एक साथ गर्न सक्दैनौं। यदि, त्यसो गऱ्यौं भने आगो बल्न सक्दैन।

मायावादी संन्यासीले यस जगत्लाई त्याग गर्दछन् (**ब्रह्म सत्यं जगन्मिथ्या**) भौतिक जगत्बाट वैराग्य हुने उपदेश दिनु राम्रो हो, तर साथसाथै हाम्रो कुनै वस्तु प्रति आकर्षण हुनपर्दछ नत्र भने हाम्रो वैराग्य अर्थहीन हुन्छ। मायावादी संन्यासहीरू भन्दछन् **ब्रह्म सत्यं जगन्मिथ्या** तर संन्यास ग्रहण गरेपछि पुनः भौतिक संसारमा फर्केर अस्पताल सञ्चालन गर्ने वा परोपकारका कार्य गर्ने गर्दछन्। यसो किन गर्ने ? यदि यो जगत् झुटो हो भनेर त्याग गरेपछि फेरि किन राजनीति, परोपकार र समाजसेवा गर्न फर्केर आउने ? वास्तवमा यस्तो हुन्छ नै किनभने हामी जीव हौं र हामी सक्रिय पनि छौं। निराश भएर निस्क्रिय हुने प्रक्रिया गरे पनि हामी त्यसमा सफल हुन सक्दैनौं। हामी कुनै न कुनै क्रियाकलापमा संलग्न हुनैपर्दछ।

सर्वोच्च सक्रियता वा ब्रह्म सक्रियता भनेको भक्तिमय सेवा हो। दुर्भाग्यवश मायावादीहरूलाई यससम्बन्धी ज्ञान नै छैन। आध्यात्मिक जगत् शून्य छ भन्ने सोच्दछन्। तर आध्यात्मिक जगत् यस भौतिक जगत्जस्तै विविधताले युक्त छ। आध्यात्मिक जगत्मा घर, रुख, मार्ग, रथ सबै हुन्छन् तर भौतिक उन्माद भने हुँदैन। ब्रह्मसंहिता (५.२९) मा भनिएको छ।

**चिन्तामणिप्रकरसद्मसु कल्पवृक्षलक्षावृतेषु सुरभीरभिपालयन्तम् ।**
**लक्ष्मीसहस्रशतसम्भ्रमसेव्यमानं गोविन्दमादि पुरुषं तमहं भजामि ॥**

"जो आध्यात्मिक मणिहरूले बनेको एवम् करोडौं कल्पवृक्षहरूले घेरिएको भवनमा निवास गर्दै गाईहरूको पालन गर्दै सबैको इच्छा पूरा गरिदिनुहुन्छ, जसको सधैं लाखौं लक्ष्मीहरू वा गोपीहरूले बडो आदर र स्नेहपूर्वक सेवा गर्नुहुन्छ, त्यस्ता आदि भगवान् श्री गोविन्दको म पूजा गर्दछु ।"

आध्यात्मिक जगत्मा कल्पवृक्ष हुन्छन् । तिनले हामीले जे फलको इच्छा गर्‍यौं, त्यही फल दिन्छन् । भौतिक जगत्मा आँपको बोटले अङ्गुर दिन सक्दैन र अङ्गुरको बोटले आँप दिन सक्दैन । तर आध्यात्मिक जगत्मा यदि हामीले रूखबाट आँप टिप्यौं र पुनः अङ्गुर टिप्ने इच्छा भयो भने त्यही वृक्षबाट अङ्गुर टिप्न सकिन्छ ।

यस भौतिक जगत्मा हामीलाई सूर्यप्रकाश र चन्द्रमाको प्रकाशको आवश्यकता पर्दछ तर आध्यात्मिक जगत्मा सूर्यप्रकाश र चन्द्रप्रकाशको आवश्यकता पर्दैन किनभने त्यहाँ सबै वस्तु प्रकाशवान् हुन्छन् । कृष्णलीलामा भगवान् श्रीकृष्णले जब मख्खन चोर्नुहुन्थ्यो, छिमेकी साथीका आमाले यशोदासँग आएर गुनासो गर्थे वा उजुरी गर्दथे । वास्तवमा तिनीहरूले गुनासो गर्दैनथे बरू भगवान् श्रीकृष्णको शारीरिक स्वरूप र रमाइलो कार्यको आनन्द लिन्थे । माता यशोदालाई भन्दथे– "तिम्रो छोरो हाम्रो घरमा आएर मख्खन चोर्दछ । उसले नदेखोस् भनेर मख्खन अँध्यारोमा लुकाएका हुन्छौं तर उसले देखि हाल्दछ । तिमीले उसका सबै गहना झिकिदेऊ किनभने त्यो गहनाको प्रकाशले गर्दा उसले मख्खन लुकाएको स्थान देखेको हो भन्ने हाम्रो विचार छ ।" माता यशोदाले उत्तर दिइन्- "हुन्छ म सबै गहना झिकिदिन्छु ।" तर छिमेकी महिलाले भने- "भैहाल्यो भैहाल्यो त्यसो गर्नु अर्थहीन हुन्छ । यो बालकको शरीरबाट नै प्रकाश उत्पन्न हुन्छ त्यसैले, गहना नभए पनि उसले मख्खन भेटिहाल्दछ ।" यसप्रकार दिव्य शरीर प्रकाशमय हुन्छ ।

त्यसैले, भगवान् श्रीकृष्णको दिव्य शरीरको प्रभाबाट नै यहाँ प्रकाश हुनेगर्दछ । हामीले जुन प्रकाश यहाँ देखेका छौं, त्यो भगवान् श्रीकृष्णको प्रभाबाट नै लिएका हौं । ब्रह्मसंहिता (५.४०) मा भनिएको छ ।

**यस्यप्रभा प्रभवतो जगदण्डकोटि-**
**कोटिष्वशेषवसुधादिविभूतिभिन्नम् ।**

**तद्ब्रह्म निष्कलमनन्तमशेषभूतं**
**गोविन्दमादि पुरुषं तमहं भजामि ॥**

"करोडौं ब्रह्माण्डमा अनगिन्ती लोकहरू छन् । यी प्रत्येक लोक विश्वरचनाअनुसार एक अर्कोभन्दा भिन्न छन् । यी सबै लोक ब्रह्मज्योति भित्र अवस्थित छन् । त्यो ब्रह्मज्योति भगवान्को तेज हो, जसको म पूजा गर्दछु ।"

भगवान् श्रीकृष्णको शारीरिक प्रभाबाट लाखौं ब्रह्माण्ड उत्पन्न हुन्छन् । यस सूर्यमण्डलमा सूर्यबाट धेरै ग्रह उत्पन्न हुन्छन् र सूर्यको उपस्थितिका कारणले नै रुख, हरियाली, फल र फूलहरू भएका हुन् । त्यसरी नै, यो सृष्टिमा जेजति देखिएका छन्, ती सबै भगवान् श्रीकृष्णको शारीरिक प्रभाको कारणले नै भएका हुन् ।

मायावादीहरूले केवल प्रभा मात्र देख्दछन्, जुन निर्विशेष निराकार हुन्छ । उनीहरूले अरू केही देख्न सक्दैनन् । हामीले आकाशमा हवाईजहाज उडेको देख्दछौं तर केही समयपछि प्रज्वलित सूर्यको प्रकाशका कारणले देख्न सक्दैनौं तर हवाईजहाज भने त्यहाँ हुन्छ । त्यसरी नै यदि हामीले केवल ब्रह्मज्योति मात्र हेर्न चाह्यौं भने हामीले त्यसभित्रको केही पनि देख्न सक्दैनौं । त्यसकारण, इशोपनिषद्मा एउटा मन्त्र छ, त्यहाँ ईश्वरसँग याचना गर्दै- "कृपया, आफ्नो तेज हटाउनुहोस्, जसले गर्दा हजुरको दर्शन ठीकसँग गर्न सकूँ भनिएको छ ।"

मायावादीहरू भगवान् श्रीकृष्णका व्यक्तिगत क्रियाकलाप पनि देख्न सक्दैनन् र उहाँ स्वयम् सक्रिय हुने लोक पनि देख्न सक्दैनन् । भागवत्मा भनिएको छ- **आरुह्य कृच्छ्रेण परं पदं ततः पतन्त्यधोऽनादृतयुष्मदङ्घ्रयः** – तिनीहरूले भगवान् श्रीकृष्णको चरणकमलको दर्शन गर्न नै सक्दैनन् । त्यसैले, अति धेरै कठोर तपस्याहरू गरेर पनि उनीहरू भौतिक जगत्मा फर्केर आउँदछन् । त्यसैले, वैराग्यले मात्र पनि सहायता गर्न सक्दैन । कृत्रिम तरिकाले संन्यास लिए पनि हामी तथाकथित भोक्ता बन्दछौं । यसप्रकारको संन्यास र भोग घडीको पेण्डुलमजस्तै यता र उता हल्लिरहन्छ । एकातिर हामी झुटो संन्यासी बन्दछौं र अर्कोतर्फ झुटो भोक्ता बन्दछौं । यस्तो समस्याको समाधान यहाँ छ । यदि हामी वास्तवमा भौतिक जगत्बाट विरक्त हुन चाहन्छौं भने हाम्रो आसक्ति कृष्णभावनातर्फ वृद्धि गर्नुपर्दछ । केवल वैराग्यले मात्र सहयोग गर्न सक्दैन । त्यसैले, कुन्तीदेवीले प्रार्थना गर्दै भन्दछिन्– **त्वयि मेऽनन्यविषया**– उनको आकर्षण केवल अविचलित रूपले भगवान् श्रीकृष्णतर्फ मात्र होस्, अन्यत्र कतै नजाओस्

भन्दै प्रार्थना गर्दछिन् । यो नै भक्ति हो र भक्ति अहैतुकी हुनुपर्दछ भनेर रूप गोस्वामीले पनि उल्लेख गर्नुभएको छ ( **अन्याभिलषिताशून्यं ज्ञानकर्माद्यनावृतम्**)

यस भौतिक जगत्मा ज्ञानी र कर्मीहरू छन् । कर्मीहरू मूर्ख हुन्छन् जो अनावश्यकरूपले कठोर परिश्रम गर्दछन् । ज्ञानीहरू केही माथि चढे पछि सोच्दछन्- "किन कठोर परिश्रम गर्ने हो ? यति धेरै वस्तुहरूको आवश्यकता छैन । धेरै धन, भोजन किन सङ्ग्रह गर्ने र यो झुटो प्रतिष्ठा पनि किन चाहियो ? ज्ञानीले यस्तो सोच्दछन् । भक्त भने ज्ञानी र कर्मी भन्दा पर हुन्छन् । कर्मीका धेरै इच्छा कामनाहरू हुन्छन् । ज्ञानी यस्ता सबै चाहनाभन्दा माथि उठ्न चाहन्छ तर चाहनाविहीन तब सम्भव हुन्छ, जब हामीमा भगवान् श्रीकृष्णको सेवा गर्ने चाहना हुन्छ । अन्यथा, चाहनाहरूभन्दा माथि उठ्न सम्भव हुँदैन । **ज्ञानकर्माद्यनामवृतम्** । भक्तका रूपमा हामीमा ज्ञान र कर्मप्रति कुनै चाहना हुँदैन । हाम्रो भौतिक वस्तु प्रति आसक्ति हुँदैन वा विरक्ति स्थिर हुन्छ ।

हामीले अनुकूलता अनुसार कृष्णभावनामृतको विकास गर्नुपर्दछ । (**अनुकूल्येन कृष्णानुशीलनम्**) । यसको अर्थ भगवान् श्रीकृष्ण कसरी सन्तुष्ट हुनुहुन्छ भन्ने सोच्नु हो । जसरी गोपीले भगवान् श्रीकृष्णका बारेमा मात्र सोचिरहन्थे, हामीले पनि सधैँ भगवान् श्रीकृष्णका बारेमा मात्र सोचिरहनुपर्दछ । गोपीको कृष्णभावना पूर्ण थियो, त्यसैले उनीहरूको अन्य कुनै कामना नै थिएन । उनीहरू केवल भगवान् श्रीकृष्णलाई प्रसन्न पार्न चाहन्थे र यो नै पूर्णता हो । त्यसैले, चैतन्य महाप्रभुले सिफारिस गर्नुभएको छ– **रम्या काचिदुपासना व्रजवधूवर्गेण या कल्पिता**– गोपीहरूद्वारा अपनाइएको भगवान्को पूजाविधि भन्दा उत्तम विधि अन्य छैन ।

भगवान् श्रीकृष्णलाई सन्तुष्ट पार्नुबाहेक गोपीको अन्य कुनै इच्छा कामना थिएन । सबै गोपी, वृद्धा गोपी, यशोदा उनकी साथी भगवान्लाई सन्तुष्ट पार्न चाहन्थे । त्यसैगरेर, सबै गोप, महाराज नन्द र उहाँका मित्रहरू पनि त्यसै गर्न चाहन्थे । वृन्दावनका बालबालिका, जसको उमेर भगवान् श्रीकृष्णको समान थियो, उनीहरू पनि भगवान्लाई सन्तुष्ट पार्न चाहन्थे । गाई, फूल, फल वृन्दावनको पानी सबै नै भगवान्लाई सन्तुष्ट पार्न चाहन्थे । किनभने वृन्दावनका प्रत्येक वस्तु अँध्यात्मिक थिए, भौतिक थिएनन् ।

आध्यात्मिक र भौतिकबीचको भिन्नताका बारे हामीले जान्नुपर्दछ । भौतिक वस्तुमा जीवनको लक्षण हुँदैन र आध्यात्मिक वस्तुमा जीवनको लक्षण हुन्छ । आध्यात्मिक जगत् र भौतिक जगत्मा पाइने रुख जीव हो । तर यहाँ पाइने

रुखमा जीवनको लक्षणको उपस्थिति हुँदैन। मानव जीव हो आध्यात्मिक जगत्का भक्त पनि जीव हुन् तर कृष्णभावनारहित भावनामा वास्तविक जीवनको लक्षण हुँदैन।

वास्तविक कृष्णचेतनाबाहेक अन्य कुनै चेतना नै चेतना होइन। त्यो कृष्णचेतना आध्यात्मिक हो। यस भौतिक जगत्मा रहेर पनि यदि हामीले कृष्णभावनाको विकास गर्न सक्यौं भने हामी आध्यात्मिक जगत्मा नै निवास गरेका हुन्छौं। यदि हामी मन्दिरमा निवास गर्दछौं भने हामी आध्यात्मिक जगत्मा नै निवास गरेका हुन्छौं किनभने मन्दिरमा कृष्णचेतनाबाहेक अन्य कुनै कार्य नै हुँदैन। त्यहाँ भगवान् श्रीकृष्णका लागि गरिने धेरै कार्यहरू हुन्छन्। जुन व्यक्तिले कृष्णभावनाका नियमहरू कठोरतापूर्वक पालना गर्दछ, ऊ भौतिक जगत्मा होइन आध्यात्मिक जगत्मा निवास गरेको हुन्छ। हामीले न्युयोर्क, लसएन्जल्स वा अन्य कतै निवास गरेको सोच्न सक्दछौं तर वास्तवमा हामी वैकुण्ठमा निवास गरेका हुन्छौं।

यो चेतना सम्बन्धित विषय हो। एउटा उडुस र गुरु सँगै एउटा स्थानमा बसेका हुन्छन् तर गुरुमा चेतनाको विकास भएको हुन्छ उडुसमा हुँदैन। दुईमा यही भिन्नता हुन्छ। ती दुवै एउटै स्थानमा बसेर पनि उडुस उडुस नै रहन्छ, गुरु गुरु नै रहनुहुन्छ। स्थान समान भए पनि अवस्था भने भिन्न हुन्छ। जसरी हामी भौतिक जगत्मा बसे पनि आध्यात्मिक जगत्मा बसे पनि यदि हाम्रो कृष्णचेतना सुदृढ र सबल छ भने हामी भौतिक जगत्मा बसेका हुन्नौं।

केवल सांसारिक वस्तुको त्याग गरेर गरिने वैराग्य पर्याप्त हुँदैन। वैराग्य सहयोगी प्रक्रिया हो तर त्यसले पूर्ण सहयोग भने गर्दैन। हामीले हाम्रो आसक्ति भगवान् श्रीकृष्णतर्फ वृद्धि गर्‍यौं भने मात्र हाम्रो वैराग्य पूर्ण हुन्छ। हामीले जति भगवान् श्रीकृष्णतर्फको हाम्रो आसक्ति वृद्धि गर्दछौं, त्यति नै भौतिक जगत्को आसक्ति सँगसँगै अघि बढ्न सक्दैन। यदि कुनै स्त्रीका दुई पुरुष, पति र जार पति सँग आसक्ति भयो भने उनले ती दुवैसँगको आसक्ति कायम राख्न सक्दिनन्। हुनत उनले आफ्नो पतिको घरमा सेवा राम्रोसँग गरिरहेकी हुन्छिन् तर उनको मन भने जार पतिसँग आसक्त भइरहेको हुन्छ। उनले सोच्दछिन्- "यो रातमा मैले कुन समयमा उनलाई भेट्ने होला ?" यसरी नै यदि हामीले भगवान् श्रीकृष्णसँगको आसक्ति वृद्धि गर्ने र भौतिक संसारतर्फ वैराग्य हुने वा आसक्तिरहित हुने हो भने स्वतः (**भक्तिः परेशानुभवो विरक्तिरन्यत्र च**- भगवत ११.२.४२) भक्ति प्राप्त हुन्छ।

कुन्तीदेवीले भगवान् श्रीकृष्णको प्रार्थना गर्दै भन्दछिन्- उनीप्रति भगवान् श्रीकृष्णको कृपा होस् जसले गर्दा उनको भगवान्प्रति आसक्ति बढोस्। भगवान् श्रीकृष्णको कृपाविना हामी भक्त पनि बन्न सक्दैनौं। त्यसकारण, हामीले भगवान् श्रीकृष्णको सेवा गर्नपर्दछ, जसबाट उहाँ सन्तुष्ट हुनुपर्दछ।

हुनत भगवान् श्रीकृष्ण पूर्ण हुनुभएका हुनाले कसैको पनि सेवा आवश्यक छैन, तैपनि यदि हामीले ह्रदयबाट नै विनम्रतापूर्वक उहाँको कृपाबाट अघि बढ्न सक्दछौं। **सेवोन्मुखे हि जिह्वादौ स्वयमेव स्फूरत्यदः** ईश्वर स्वयम् हाम्रोअघि प्रकट हुनुहुन्छ। हाम्रा यी बोधा आँखाले हामीले ईश्वरको दर्शन गर्न सक्दैनौं। हामीले कसरी दर्शन गर्न सक्दछौं ? **प्रेमञ्जनच्छुरित भक्तिविलोचनेन सन्तः सदैव ह्दयेषु विलोकयन्ति** (ब्रह्मसंहिता ५.३८)। हामीले हाम्रो आँखामा प्रेमको गाजल लगाउनुपर्दछ अनि मात्र भगवान् श्रीकृष्ण हाम्राअघि प्रकट हुनुहुन्छ। वास्तवमा नै भगवान् श्रीकृष्ण हाम्राअघि आउनुहुन्छ।

जब ध्रुव महाराजले तपस्या सहित भगवान् विष्णुको रूपको ध्यान आफ्नो ह्दयमा गर्दै थिए अकस्मात भगवान् श्रीविष्णुस्वरूप अदृश्य भयो र उनको ध्यान भङ्ग भयो। ध्रुव महाराजले आफ्ना आँखा खोल्दा भगवान् श्रीविष्णुलाई आफ्नाअघि देखे। ध्रुव महाराजले जस्तै हामीले पनि सदैव भगवान् श्रीकृष्णलाई चिन्तन गरिरह्यौं भने र हामीले पूर्णता प्राप्त गर्‍यौं भने हामीले भगवान् श्रीकृष्णको हाम्रा अघि दर्शन गर्न सक्दछौं। यो प्रक्रिया हो। त्यसकालागि हतार गर्नुहुँदैन, परिपक्व समयको प्रतीक्षा गर्नुपर्दछ। निश्चय नै भगवान् श्रीकृष्णको दर्शन गर्न उत्सुक हुनुपर्दछ र यदि तुरुन्त दर्शन पाइएन भने निरुत्साहित पनि हुन हुँदैन। यदि कुनै स्त्रीले विवाह गरिन् र तुरुन्त सन्तान प्राप्त गर्न चाहिन भने उनी निराश हुन्छिन् किनभने बच्चा तुरून्त जन्माउन सम्भव हुँदैन उनले समयको प्रतीक्षा गर्नुपर्दछ। त्यसैगरेर, हामी कृष्णभावनामा संलग्न भएका छौं, त्यसैले, भगवान् श्रीकृष्णको दर्शन तुरून्त गर्न पाउन पर्दछ भनेर हामीले आशा गर्नुहुँदैन। तर हामीले उहाँको दर्शन गर्न पाउनेछौं भनेर विश्वास गर्नुपर्दछ। हामीहरू कृष्णभावनामा संलग्न छौं। त्यसैले, कुनै पनि समय भगवान् श्रीकृष्णसँग हाम्रो साक्षात्कार हुन्छ भन्ने कुरामा हामीले दृढ विश्वास गर्नुपर्दछ निरुत्साहित हुनहुन्न। हामीहरू केवल कृष्णभावनाका क्रियाकलापमा संलग्न भइरहनुपर्दछ, अनि एक दिन यस्तो आउनेछ, जसरी कुन्तीदेवीले भगवान्को साक्षात्कार गर्न सकिन्, त्यसरी नै हामीले पनि भगवान् श्रीकृष्णको दर्शन आफ्ना सामु गर्न पाउनेछौं। यो कुरामा कुनै शङ्का नै छैन।

भगवद्गीतामा भनिएको छ– यदि कुनै व्यक्तिले असभ्य व्यवहार गरे पनि यदि ऊ भगवान् श्रीकृष्णको सेवामा निरन्तर लागिरहेको छ भने उसलाई सन्त पुरुष मान्नुपर्दछ । कहिलेकाहीँ अमेरिकी वा युरोपेली भक्तहरूले भारतमा अपनाइने अर्चाविग्रहको पूजा विधिभन्दा भिन्न तरिकाले गर्दै केही भूल गरे भनेर उनीहरूको आलोचना गरिन्छ तर भगवद्गीताअनुसार उनीहरूलाई सन्त नै मान्नुपर्दछ । हामीले हाम्रो मन्त्रलाई भगवान् श्रीकृष्णको सेवामा गम्भीरतापूर्वक र विनम्रतापूर्वक स्थिर गर्नुपर्दछ । त्यसोगर्दा केही भुल भयो भने भगवान् श्रीकृष्णले हामीलाई क्षमा गरिदिनुहुन्छ । रूपगोस्वामी भन्नुहुन्छ– **तस्मात् केनाप्युपायेन मनः कृष्णे निवेशयेत्**– सर्वप्रथम हामीले हाम्रो मन भगवान् श्रीकृष्णमा स्थिर गर्नुपर्दछ । त्यसपछि अन्य विधिविधानको पालना गर्ने क्षमता स्वतः प्राप्त हुन्छ । सुरुमा हामीले हाम्रो मन भगवान् श्रीकृष्णका चरणकमलमा स्थिर गर्न प्रयत्न गर्नुपर्दछ । त्यसपछि अन्य सबै कुरा स्वतः ठीक हुन्छन् ।

कुन्तीदेवीले भगवान् श्रीकृष्णलाई मधुपति भनेर सम्बोधन गरेकी छिन् । भगवान् श्रीकृष्णका हजारौं नाम छन् । मधुपतिले, उहाँले मधु नाम गरेको असुरको वध गर्नुभएको थियो भन्ने सङ्केत गर्दछ । कृष्णभावनामृत नदीसमान छ तर साधारण नदी भने होइन । यो गङ्गा नदीसमान हो, जुन अत्यन्त शुद्ध छ र भगवान् श्रीकृष्णसँग सिधै सम्बन्ध राख्दछ । कुन्तीदेवीले प्रार्थना गर्दछिन्, जसरी गङ्गा नदी समुद्रतर्फ बहन्छिन्, त्यसरी नै उनको मन भगवान् श्रीकृष्णको चरणकमलतर्फ अविरल प्रवाहित भइरहोस् । यसलाई अनन्य भक्ति, अहैतुकी भक्ति भनिन्छ । कुन्तीदेवी प्रार्थना गर्दछिन् – भगवान् श्रीकृष्णतर्फको उनको आसक्ति निर्वाधरूपले प्रवाहित भइरहोस् ।

***

# २६. भगवान् श्रीकृष्णको महिमाद्वारा सम्मोहन

**श्रीकृष्ण कृष्णसख वृष्ण्यृषभावनिध्रुग्**
**राजन्यवंशदहनानपवर्गवीर्य ।**
**गोविन्द गोजृद्विजसुरार्तिहरावतार**
**योगेश्वराखिलगुरो भगवन्नमस्ते ॥**

हे भगवान् श्रीकृष्ण ! हे अर्जुनका मित्र ! हे वृष्णिका प्रमुख ! ती सम्पूर्ण राजनीतिक दल, जसले पृथ्वीमा उपद्रव फैलाउँदछन् तिनीहरूलाई नाश गर्ने हजुर हुनुहुन्छ । हजुरको शक्ति कहिल्यै पनि क्षीण हुँदैन । हजुर परमधामका स्वामी हुनुहुन्छ गाई, ब्राह्मण र भक्तहरूको कष्ट हटाउन अवतार लिएर आउनु भएको हो । सम्पूर्ण योगशक्ति हजुरमा निहित छन् र हजुर सम्पूर्ण ब्रह्माण्डलाई उपदेश दिने गुरु हुनुहुन्छ । हजुर सर्वशक्तिमान् ईश्वर हुनुहुन्छ । म हजुरलाई सादर नमस्कार गर्दछु ।

**–(श्रीमद्भागवत् १.८.४३)**

भगवान् श्रीकृष्णको सार सङ्क्षेप वर्णन यहाँ श्रीमती कुन्तीदेवीले गरेकी छिन् । सर्वशक्तिमान् भगवान् श्रीकृष्णको आफ्नो नित्य दिव्य धाम छ, जहाँ उहाँ सुरभी गाईको हेरचाहमा संलग्न रहनुहुन्छ । हजारौं हजार लक्ष्मीहरूले उहाँको सेवा गर्नुहुन्छ । यस संसारका भक्तहरूको रक्षा गर्न, उपद्रवकारी राजनीति दल, प्रशासकका रूपमा रहेका राजाहरूको विनाश गर्न अवतरित हुनुहुन्छ । उहाँ आफ्नो असीमित शक्तिद्वारा सृष्टि, पालन र संहार गर्नुहुन्छ तैपनि उहाँ सधैं शक्तिले पूर्ण रहनुहुन्छ । उहाँको शक्ति कहिल्यै पनि क्षीण हुँदैन । गाई, ब्राह्मण र भक्तहरू सबै जीवको सामान्य कल्याणका लागि अति महत्त्वपूर्ण कारक तत्त्व भएका हुनाले तिनीहरूप्रति भगवान्ले विशेष ध्यान दिनुहुन्छ ।

कुन्तीले भगवान् श्रीकृष्णलाई कृष्ण-सखा भनेर सम्बोधन गरेकी छिन्

किनभने उनलाई अर्जुन जसलाई कृष्ण पनि भनिन्थ्यो, उनी कुन्तीका पुत्र थिए र भगवान्का अधीनमा थिए तैपनि भगवान् श्रीकृष्णको घनिष्टता आफूसँग भन्दा अर्जुनसँग बढी छ भन्ने कुरा जानेकी थिइन् । द्रौपदीको नाम पनि 'कृष्णा' हो, त्यसैले, कृष्ण-सखा शब्दले द्रौपदी र भगवान् श्रीकृष्णको सम्बन्धतर्फ पनि सङ्केत गर्दछ । जब दुर्योधन र कर्णले द्रौपदीलाई नाङ्गै बनाउन चाहेका थिए, त्यससमय भगवान् श्रीकृष्णले उनको रक्षा गर्नुभएको थियो । कुन्तीले भगवान् श्रीकृष्णलाई वृष्णि-ऋषभ भनेर पनि सम्बोधन गरेकी छन्, जसको अर्थ वृष्णि वंशको सन्तान भन्ने हुन्छ किनभने भगवान् श्रीकृष्ण वृष्णिवंशमा उत्पन्न हुनुभएको थियो । त्यसैले, त्यो वंश प्रसिद्ध भएको थियो, जसरी मलेसिया र मलय पर्वत चन्दन उत्पन्न गरेर प्रसिद्ध भएका छन् ।

कुन्तीदेवीले भगवान् श्रीकृष्णलाई पृथ्वीलाई विचलित गर्ने राजनैतिक दल वा राज कुल नष्ट गर्ने भनेर पनि सम्बोधन गरेकी छिन् । प्रत्येक राजतन्त्रमा राजालाई अत्यधिक सम्मान दिने गरिन्छ । किन दिइन्छ ? राजा पनि मानिस हो र जनता पनि मानिस नै हुन्– त्यसो हो भने राजालाई यति धेरै सम्मान किन ? गुरुजस्तै राजा पनि ईश्वरका प्रतिनिधि हुन् । यसको उत्तर यही नै हो । वैदिक साहित्यमा भनिएको छ- **आचार्यं मां विजानीयान् नावमन्येत कर्हिचित्** (भागवत् ११.१७.२७) आध्यात्मिक गुरुलाई सामान्य व्यक्ति जस्तो ठान्नहुँदैन । त्यसैगरेर, राजा वा राष्ट्रपतिलाई पनि सामान्य व्यक्तिसरह ठान्नहुँदैन ।

संस्कृत भाषामा राजालाई 'नरदेव' भनिन्छ । जसको अर्थ "मानवरूपमा ईश्वर" हुन्छ । उसको कर्तव्य भगवान् श्रीकृष्णको जस्तै हुन्छ । जसरी ईश्वर ब्रह्माण्डको सर्वोच्च जीव हुनुहुन्छ र अन्य सबै जीवको पालनकर्ता हुनुहुन्छ, त्यसरी नै राजा पनि राज्यको सर्वोच्च नागरिक हुन्छ र सामान्य जनताको कल्याणका लागि उत्तरदायी हुन्छ ।

जसरी हामी जीव हौं, त्यसरी नै भगवान् श्रीकृष्ण ईश्वर पनि जीव हुनुहुन्छ । भगवान् श्रीकृष्ण निर्विशेष निराकार हुनुहुन्न । हामीहरू सबै वैयक्तिक जीव हौं तर हाम्रा ऐश्वर्य र ज्ञान सीमित छन् । सबै कारणहरूका कारणरूप आदि ब्रह्म पनि पुरुषस्वरूपमा हुनुहुन्छ भन्ने विचारप्रति निर्विशेषवादीहरू आफ्नो अल्पज्ञानका कारणले गर्दा ईश्वर त निर्विशेष वा निराकार हुनुपर्दछ भन्दछन् । भौतिक तुलना गर्दै उनीहरू भन्दछन्– जसरी आकाश असीमित छ भन्दछौं र त्यो निराकार छ, त्यसरी नै ईश्वर असीमित हुनाले निराकार हुनपर्दछ ।

ईश्वर पुरुष हुनुहुन्छ भनेर वेदले उपदेश दिएको छ। यो नै वैदिक निर्देशन हो । भगवान् श्रीकृष्ण पनि पुरुष हुनुहुन्छ हामी पनि पुरुष हौं । उहाँ पूज्य हुनुहुन्छ, हामी पूजक हौं यही नै भिन्नता छ। त्यसरी नै, राजा वा राष्ट्रपति पनि व्यक्ति हो र जनता पनि व्यक्ति नै हुन् तर राजा वा राष्ट्रपति महान् व्यक्ति हो । त्यसैले, उसलाई सम्मान गर्नुपर्दछ ।

यति धेरै मानिसले एकजनाको पूजा किन गर्नुपर्‍यो ? किनभने त्यही एक व्यक्तिले सबैको आवश्यकता पूरा गरिदिनुहुन्छ– **एको बहूनां यो विदधाति कामान्** । ईश्वर एक हुनुहुन्छ, हामी धेरै छौं तर उहाँको पूजा गरिन्छ किनभने उहाँले सबैको भरणपोषण गर्नुहुन्छ । उहाँ ईश्वरले नै हाम्रा जीवनका आवश्यकताका सबै वस्तु प्रदान गर्नुहुन्छ। हामीलाई पानीको आवश्यकता छ, ईश्वरले समुद्रमा नुनसहितको पानीको व्यवस्था गरिदिनुभएको छ । हामीलाई पिउने पानीको आवश्यकता पर्दछ। ईश्वरले त्यो व्यवस्था पनि गरिदिनुहुन्छ। सागरबाट पानी वाष्पीभूत गराएर आकाशमा लगेर सर्वत्र स्वच्छ, शुद्ध पानी वितरण गर्नुहुन्छ। हेर त भगवान्ले सबैका सम्पूर्ण आवश्यकताहरू कसरी पूरा गर्नुभएको छ ?

सामान्य राज्यमा ऊर्जा विभाग, विद्युत विभाग, धारा विभाग आदि हुन्छन्, ती सबैको किन आवश्यकता पर्‍यो ? किनभने ती सुविधाहरू हामीलाई आवश्यक छन् तर, यी सबै व्यवस्थाहरू गौण हुन् प्रथम व्यवस्था भनेको ईश्वरबाट नै हुन्छ किनभने ताप, उज्यालो, पानी आदिको मूल वितरण ईश्वरबाट नै भएको हो । आकाशबाट वर्षा भएको पानी हाम्रो कुवा ईनारमा जम्मा हुन्छ। त्यो सबै ईश्वरले नै प्रदान गर्नुभएको हो । त्यसैले, प्रत्येक वस्तुको मूल प्रदाता ईश्वर नै हुनुहुन्छ ।

ईश्वर बुद्धिमान् व्यक्तित्व हुनुहुन्छ । हामीलाई ताप, बिजुली, पानी आदि वस्तुको आवश्यकता पर्दछ भनेर उहाँलाई सबै जानकारी छ। पानीविना हामीले अन्न उत्पादन गर्न सक्दैनौं । मांसाहारीहरू पनि ईश्वरको व्यवस्थाविना केही गर्न सक्दैनन् किनभने पशुलाई पनि पहिला आहाररूपी घाँस दिनुपर्दछ अनि मात्र वधशालातर्फ लैजान सकिन्छ । सम्पूर्णको आहारको आपूर्ति ईश्वरले गरिदिनुभएको छ तैपनि हामी उहाँप्रति विद्रोह गर्दछौं। **'ध्रुक्'** शब्दको अर्थ विद्रोह हो । जुन दुष्टहरू ईश्वरको नियमविपरीत कार्य गर्दछन्, ती सबै विद्रोही हुन् ।

राजाको कर्तव्य भनेको भगवान् श्रीकृष्ण वा ईश्वरको प्रतिनिधि भएर कार्य

गर्नु हो । होइन भने नागरिकहरूबाट यति धेरै सम्मान पाउने अधिकार कहाँ हुन्छ ? पहिला प्रत्येक देशमा राजतन्त्र थियो, तर राजाले ईश्वरप्रति विद्रोह गर्दै, ईश्वरका नियमका उल्लङ्घन गर्न लागे । ईश्वरको शक्ति हत्याउने प्रयास गरे र भगवान्का प्रतिनिधिअनुरूप कार्य गर्न छोडे । त्यसैले, राजतन्त्र प्रथा समाप्त भइसकेको छ । राजाहरूले राज्यलाई आफ्नै व्यक्तिगत सम्पत्ति ठान्न लागे । "मसँग यति धेरै सम्पत्ति छ, मेरो विशाल राज्य छ" भनेर सोच्न थाले । "म ईश्वर हुँ म सम्पूर्ण राज्यको ईश्वर हुँ ।" तर वास्तवमा त्यो सत्य होइन । वास्तवमा सबै वस्तु भगवान्का हुन् भन्ने भनाइ नै सत्य हो । **(ईशावास्यमिदं सर्वम्)** त्यसैले, भगवान्का प्रतिनिधिहरू भगवान्प्रति अत्यन्त आज्ञाकारी हुनपर्दछ अनि मात्र तिनको पद वैधानिक हुन्छ ।

लोभी, स्वार्थी राजाहरू, त्यो झुटो गुरुजस्तै हुन्, जसले ऊ आफैं ईश्वर हुँ भन्ने दावी गर्दछ किनभने त्यस्तो झुटो गुरु विद्रोही हो त्यसको कुनै पद वा प्रतिष्ठा केही पनि हुँदैन । आध्यात्मिक गुरुले भगवान्जस्तो भएर होइन भगवान्को अति विश्वास पात्र सेवकका रूपमा कार्य गर्दै भगवान्को चेतना वा कृष्णभावनाको प्रचारप्रसार गर्नुपर्दछ । विश्वनाथ चक्रवर्ती ठाकुर भन्नुहुन्छ– **साक्षाद्धरित्वेन समस्त शास्त्रैरुक्तः** । आध्यात्मिक गुरुको सम्मान भगवान्सरह हुनुपर्दछ भनेर सम्पूर्ण वैदिक शास्त्रले भनेका छन् । अँध्यात्मिक गुरु भगवान्सरह नै असल हुनुपर्दछ नक्कली वा झुटो हुनुहुँदैन । त्यसकारण जुन व्यक्ति आध्यात्मिक जीवनमा अघि बढेको छ उसले आध्यात्मिक आदेश ( **उक्तस्तथा भाव्यत एव सद्भिः**) लाई स्वीकार गर्दछ । त्यसो हो भने गुरु ईश्वरसमान असल नै हुनुपर्दछ ? **किन्तु प्रभोर्यः प्रिय एव तस्य-** आध्यात्मिक गुरु भगवान् होइन तर भगवान्को विश्वास पात्र हो । सेव्य भगवान् र सेवक भगवान्बीचको अन्तरजस्तै हो । आध्यात्मिक गुरु पनि ईश्वर हुनुहुन्छ र भगवान् श्रीकृष्ण पनि ईश्वर नै हुनुहुन्छ तर भगवान् श्रीकृष्ण पूज्य सेव्य भगवान् र गुरु सेवक भगवान् हुनुहुन्छ ।

मायावादीहरूले यो कुरा बुझ्न सक्दैनन् । उनीहरूले सोच्दछन्– "आध्यात्मिक गुरुलाई भगवान्का रूपमा स्वीकार गर्नुपर्दछ । म आध्यात्मिक गुरु भएँ त्यसैले, म नै भगवान् बनिसकें ।" यस्तो सोच्नु एक प्रकारको विद्रोही भावना हो । ईश्वरले जसलाई कुनै पद प्रदान गर्नुभएको छ, तिनीहरू ईश्वरको शक्तिलाई नै हत्याउने प्रयास गर्दछन् । जुन कार्य तिनीहरू गर्न सक्दैनन्, त्यस्ता

विद्रोही, दुष्ट र मूर्खलाई दण्ड सजायँ दिनुपर्दछ । त्यसैले, कुन्तीदेवी भन्दछिन्– **अवनि- ध्रुग् - राजन्यवंश - दहन** - "ती दुष्टहरू जसले विद्रोह गर्दै हजुरका पदको दाबी गर्दछन्, तिनीहरूको वध गर्न नै हजुर अवतरित हुनुहुन्छ जसरी सम्राटका अधीनस्थ राजा वा जमिनदारहरूले विद्रोह गर्दै कर तिर्न अस्वीकार गर्दछन्, त्यसैगरेर केही विद्रोही प्रवृत्तिका व्यक्तिहरूले पनि भगवान्को सर्वोच्चतालाई अस्वीकार गर्दछन् र आफूलाई नै 'भगवान् हुँ' भनेर घोषणा गर्दछन् । तिनीहरूको वध गर्नु नै भगवान् श्रीकृष्णको कार्य हुन्छ ।

**'अनपवर्ग'** शब्दको अर्थ भगवान् श्रीकृष्णको शक्ति क्षीण हुँदैन भन्ने हुन्छ । यो शब्द पवर्गले प, फ, ब, भ र म लाई पनि सूचित गर्दछ । जब पवर्गको प्रयोग भौतिक कष्टको मार्गका लागि गरिन्छ, त्यहाँ यी पाँच शब्दको अर्थबाट उत्पन्न हुने शब्दलाई बुझ्ने गरिन्छ ।

**प** को अर्थ 'परिश्रम' हो । यस भौतिक जगत्मा भरणपोषणका लागि मानिसले धेरै परिश्रम गर्नुपर्दछ । भगवद्गीता (३.८) मा भनिएको छ– **शरीरयात्रापि च ते न प्रसिद्ध्येदकर्मण:** " काम नगरी मानिसले आफ्नो शरीर पनि पाल्न सक्दैन ।" भगवान् श्रीकृष्णले अर्जुनलाई "म तिम्रो हुँ, म सबै कार्य गर्दछु । तिमी बसेर गाँजा पिऊ" भन्नुभएको छैन । भगवान् श्रीकृष्णले सबै कार्य गर्नुभएको छ तैपनि अर्जुनलाई भन्नुहुन्छ "तिमीले युद्ध गर्नुपर्दछ ।" अर्जुनले पनि भगवान् श्रीकृष्णलाई "हजुर मेरा महान् मित्र हुनुहुन्छ । त्यसैले, हजुरले युद्ध गर्नुहोस् म बसेर गाँजा पिउँछु" भनेनन् । यस्तो भन्नु कृष्णभावना होइन । ईश्वरभावना भावित मानिसले "भगवान् ! हजुरले मेरा लागि सम्पूर्ण कार्य गरिदिनुहोस् । म बसेर गाँजा पिउँदछु" भन्दैन । ईश्वरभावना भावित व्यक्तिले भगवान्का लागि कार्य गर्दछ । तर, यदि कसैले भगवान्का लागि कार्य गर्दैन भने पनि उसले केही कार्य गर्न नै पर्दछ, नत्र विनाकार्य उसले आफ्नो शरीरको पालनपोषण गर्न पनि सक्दैन । त्यसकारण, यो भौतिक जगत् केवल परिश्रमका लागि मात्र हो ।

सिंह जनावरको राजा नै भए पनि आफ्नो आहारका लागि जङ्गलमा खोज्दै हिँड्नुपर्दछ । भनिएको छ- **न हि सुप्तस्य सिंहस्य प्रविशन्ति मुखे मृगा:** । सिंहले यस्तो सोच्नु हुँदैन- "म जंगलको राजा हुँ । त्यसैले, म सुत्दछु, सबै पशु मेरो मुखमा आफैं आउनेछन् ।" यस्तो सम्भव नै छैन । हुनत तिमी सिंह हौं, तैपनि आफ्नो आहार आफैं खोज्नपर्दछ । यसरी अत्यन्त शक्तिशाली भएर पनि सिंहलाई

आफ्नो आहाररूपी पशु खोज्न धेरै कठिन पर्दछ। त्यसरी नै, मानिसलाई यस भौतिक जगत्मा आफ्नो जीवनयापन गर्नका लागि कठिन परिश्रम गर्नपर्दछ।

**फ** भनेको फेनिल वा फिँज हुन्छ। कठोर परिश्रम गर्दा घोडाको मुखबाट फिँज निस्कन्छ। त्यसरी नै मानिसले पनि कठोर परिश्रम गर्नुपर्दछ। तैपनि, यस्तो परिश्रम व्यर्थ नै हुन्छ। **ब** शब्दले त्यसैलाई सङ्केत गर्दछ। **भ** ले भयलाई सङ्केत गर्दछ। अति परिश्रम गरेर पनि आफ्नो इच्छाअनुसारको परिणाम पाइन्छ कि पाईंदैन भनेर सधैं भय भईरहन्छ। शरीरको स्वभाव नै खाने, सुत्ने, सम्भोग गर्ने र डराउने हुन्छ। (**आहारनिद्राभयमैथुनश्च**) यद्यपि कसैले उत्तम भोजन खान सक्दछ तर धेरै भोजन गरेर बिरामी भइन्छ कि भन्नेतर्फ पनि विचार गर्नुपर्दछ। यसरी भोजन गर्दा पनि भय भइरहन्छ। पक्षीले आहार खाँदा यताउता हेरिरहन्छ, कतैबाट शत्रु आइपुग्दछ कि भनेर भयभित भइरहन्छ। सम्पूर्ण जीवनका लागि प्रत्येक वस्तुको अन्तिम गन्तव्य भनेको मृत्यु हो र **म** अक्षरले त्यसैलाई सङ्केत गर्दछ।

यसरी प वर्गका अक्षरहरू प, फ, ब, भ र म ले परिश्रम, फिँज, व्यर्थता, भय र मृत्युलाई सङ्केत गर्दछन्। यसैलाई पवर्ग अर्थात् 'भौतिक दुःखको मार्ग' भनिन्छ। अपवर्गले यसको ठीक उल्टो अर्थ दिन्छ अर्थात् आध्यात्मिक जगत्, जहाँ परिश्रम, फिँज, व्यर्थता, भय र मृत्यु केही पनि हुँदैनन्। त्यसकारण, भगवान् श्रीकृष्णलाई अनपवर्ग वीर्य भनेर भनिन्छ किनभने उहाँले हामीलाई आध्यात्मिक जगत्को मार्ग देखाउनुहुन्छ। कसैले पनि किन यी पाँच प्रकारका कष्ट भोग्नुपर्ने हो ? किनभने सबैसँग भौतिक शरीर छ। जब शरीर ग्रहण गरिन्छ, त्यो राष्ट्रपति होस्, सामान्य व्यक्तिहोस्, देवता वा मानिस होस्, किरा वा ब्रह्मा होस्, उसले यी सबै कष्ट भोग्नुपर्दछ। यसैलाई भौतिक अस्तित्व भनिन्छ। त्यसकारण भगवान् श्रीकृष्ण हामीलाई अपवर्गको मार्ग देखाउन वा यी कष्टबाट छुटकारा दिन आउनुहुन्छ। त्यसैले, जब भगवान् श्रीकृष्णले यो मार्ग देखाउनुहुन्छ हामीले त्यसलाई स्वीकार गर्नुपर्दछ। भगवान् श्रीकृष्णले स्पष्टसँग भन्नुहुन्छ- "मेरो शरणमा आऊ, म तिमीलाई अपवर्ग दिन्छु।" **अहं त्वां सर्वपापेभ्यो मोक्षयिष्यामि**- "म तिम्रो संरक्षण गर्दछु।" भगवान् श्रीकृष्णसँग यो प्रतिज्ञा पूरा गर्न सक्ने शक्ति पनि छ।

कुन्तीदेवीले भगवान् श्रीकृष्णलाई गोविन्द भनेर सम्बोधन गरेकी छिन् किनभने उहाँ गाई र इन्द्रियहरूलाई आनन्द प्रदान गर्नुहुन्छ। **गोविन्दमादिपुरुषं**

**तमहं भजामि** । भगवान् श्रीगोविन्द कृष्ण आदि पुरुष हुनुहुन्छ । **अहमादिर्हि देवानाम्** (भगवद्गीता १०.२) उहाँ ब्रह्मा, विष्णु, शिवसहित सम्पूर्ण देवताहरूका र सबैका उत्पत्तिका स्रोत हुनुहुन्छ । ब्रह्मा, बिष्णु, र शिव सबै वस्तुका उद्गम स्थल हुनुहुन्छ भनेर मानिसले सोच्नहुँदैन । भगवान् श्रीकृष्ण भन्नुहुन्छ- **अहमादिर्हि देवानाम्-** म देवताहरूको पनि उत्पत्तिको स्रोत हुँ ।" त्यसकारण, बारम्बार हामी जोड दिएर भन्दछौं, हामी केवल आदि पुरुष (**गोविन्दमादिपुरुषं तमहं भजामि**) को मात्र पूजा गर्दछौं, अरूको होइन ।

जब कुन्तीले- **गोद्विजसुरार्तिहरावतार** भनेर प्रार्थना गर्दछिन्, उनले भगवान् श्रीगोविन्द कृष्ण जसले गाई, ब्राह्मण र भक्तहरूको विशेष रक्षा गर्न अवतरित हुनुहुन्छ, उहाँलाई सङ्केत गरेकी हुन् । यस संसारका असुरहरू नै गाईका सबैभन्दा ठुला शत्रु हुन् किनभने तिनीहरूले लाखौंको सङ्ख्यामा वधशाला सञ्चालन गरिरहेका छन् । हुनत निरीह गाईहरूले अति महत्त्वपूर्ण भोजनरूपी दूध दिन्छिन् र मृत्युपश्चात जुत्ता आदि बनाउन सकिने छाला दिन्छिन् तैपनि दुष्टहरूले गाईको वध गर्दछन् र यस संसारमा सुखी हुन चाहन्छन् । तिनीहरू कति पापी छन् ।

गाईको रक्षाका लागि यति धेरै पक्षपोषण किन गरिन्छ ? किनभने गाई अति महत्त्वपूर्ण जनावर हो । वैदिक संस्कृतिमा मांसाहार गर्नेहरूका लागि बाख्रा, कुकुर, सँगुर वा अन्य निम्न स्तरका पशुको मासु खान सिफारिस गरिएको छ तर अति महत्त्वपूर्ण जनावर गाईको मासु कहिल्यै पनि नखानु भन्ने छ । गाई जबसम्म बाँच्दछिन्, उनले दूध दिएर अति महत्त्वपूर्ण सेवा गर्दछिन् भने मृत्युपश्चात आफ्नो छाला, खुर, सिङ्ग, प्रदान गर्दछिन् । जसलाई विभिन्न प्रकारले उपयोग गर्न सकिन्छ । वर्तमान मानव समाज कृतघ्न छ । उसले आवश्यक नभए पनि निरीह गाईको वध गर्दछ । त्यसकारण, भगवान् श्रीकृष्ण तिनीहरूलाई दण्ड दिन आउनुहुन्छ ।

भगवान् श्रीकृष्णको पूजा निम्न श्लोकद्वारा गरिन्छ–

**नमो ब्रह्मण्यदेवाय गोब्राह्मणहिताय च ।**
**जगतद्धिताय कृष्णाय गोविन्दाय नमो नमः ॥**

"हे भगवान् ! हजुर गाई र ब्राह्मणका हितैषी हुनुहुन्छ । हजुर समस्त मानव समाज र संसारका पनि हितैषी हुनुहुन्छ ।" पूर्ण मानव समाज हुनका लागि गो-द्विज अर्थात गाई र ब्राह्मणको रक्षा गर्न आवश्यक हुन्छ । द्विज शब्दको अर्थ

ब्राह्मण वा 'जसले ब्रह्मलाई जान्दछ' भन्ने हुन्छ । जब असुरले ब्राह्मण र गाईलाई धेरै दु:ख दिन्छन् अनि धर्मको पुन: स्थापना गर्न भगवान् श्रीकृष्ण अवतरित हुनुहुन्छ । भगवद्गीता (४.७) मा भगवान् श्रीकृष्ण भन्नुहुन्छ–

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम् ॥**

"हे भारत ! जब र जहाँ धर्मको ह्रास हुन्छ र अधर्मको वृद्धि हुन्छ, त्यससमय मैले अवतार लिन्छु ।" वर्तमान कलियुगमा मानिसहरू धेरै पापी छन् । त्यसको परिणाम स्वरूप तिनीहरूले अत्याधिक कष्ट पाइरहेका छन् । त्यसकारण, भगवान् श्रीकृष्णले आफ्नो नामको रूपमा अवतार लिनुभएको छ, जुन **हरे कृष्ण हरे कृष्ण कृष्ण कृष्ण हरे हरे/ हरे राम हरे राम राम राम हरे हरे** मा प्राप्त गर्न सकिन्छ ।

महारानी कुन्तीले भगवान्‌को यश महिमाको केही अंशको मात्र व्याख्या गर्नका लागि प्रार्थना गरेकी हुन् । भगवान् उनका अति उत्तम र छानिएका सटिक शब्दद्वारा संयोजित आफ्नो महिमारूपी प्रार्थना सुनेर मुस्कुराउनुभयो । त्यो मुस्कुराहट उहाँको योगशक्तिसमान मनमोहक थियो । यस भौतिक जगत्मा आफ्नो प्रभुत्व कायम गर्ने प्रयास गर्ने बद्धजीवहरू पनि भगवान्‌को योगशक्तिबाट मोहित हुन्छन् भने भक्तहरू भगवान्‌का महिमा सुनेर अर्कै प्रकारले मोहित हुन्छन् । त्यसकारण भक्तहरूले छनोट गरिएका विशेष शब्दहरूले भगवान्‌को पूजा गर्दछन् । केही छनोट गरिएका शब्दहरूले भगवान्‌का यशको वर्णन पर्याप्त हुँदैन तैपनि जसरी पिता आफ्नो तोते बोली बोल्ने छोराको बोलीले सन्तुष्ट हुन्छ, त्यसरी भगवान् पनि यस्ता प्रार्थनाले सन्तुष्ट हुनुहुन्छ । अत: भगवान्‌ले मुस्कुराउँदै महारानी कुन्तीको प्रार्थना स्वीकार गर्नुभयो ।

***

# लेखक परिचय

कृष्णकृपामूर्ति अभयचरणाविन्द भक्तिवेदान्त स्वामी प्रभुपाद १८९६ मा यस पृथ्वीको कलकत्तामा प्रकट हुनुभयो। उहाँले आफ्ना आध्यात्मिक गुरु श्रील भक्तिसिद्धान्त सरस्वती गोस्वामीसंग १९२२मा कलकत्तामा भेट गर्नुभयो। त्यससमयमा अत्यन्त विद्वान् र भक्त श्रील भक्तिसिद्धान्तले गौडिय मठको स्थापना गर्नुभयो। उहाँले यी शिक्षित युवालाई मन पराउनुभयो र वैदिक ज्ञानको शिक्षा प्रदान गर्न आफ्नो जीवन उत्सर्ग गर्न प्रेरित गर्नुभयो। श्रील प्रभुपाद उहाँको विद्यार्थी बन्नुभयो र एघार वर्ष पछि १९३३ मा इलाहवादमा विधिवत् दीक्षित शिष्य बन्नुभयो।

१९२२ को पहिलो भेटमा नै श्रील भक्तिसिद्धान्त सरस्वती ठाकुरले श्रील प्रभुपादलाई वैदिक ज्ञानलाई अङ्ग्रेजी भाषामा प्रचारप्रसार गर्न आग्रह गर्नुभएको थियो।  त्यसको केही वर्षपछि श्रील प्रभुपादले वैदिक ग्रन्थको अति महत्त्वपूर्ण भगवद्गीतामा टिप्पणी वा तात्पर्य लेख्नुभयो। साथै गौडिय मठको कार्यलाई पनि सहयोग गर्न सुरु गर्नुभयो। १९!! मा आफू एक्लैले ''व्याक टु गडहेड'' नाम गरेको पाक्षिक पत्रीका अङ्ग्रेजीमा प्रकाशित गर्न सुरु गर्नुभयो। उहाँ आफैंले पाण्डुलिपी तयार गर्ने, शुद्धाशुद्धी जाँच गर्ने र प्रकाशित प्रति निशुल्क वितरण गर्दै बडो सङ्घर्ष गर्दै प्रकाशनलाई निरन्तरता दिनुभयो।

१९!७ मा श्रील प्रभुपादको दार्शनिक विद्वत्ता र भक्ति देखेर गौडिय वैष्णव समाजले उहाँलाई ''भक्तिवेदान्त'' को पदले अलंकृत गऱ्यो। १९५० मा चौवन्न वर्षको उमेरमा श्रील प्रभुपादले पारिवारीक जीवनबाट निवृत्ति लिनुभयो। त्यसको चार वर्षपछि वानप्रस्थ आश्रममा प्रवेस गरेर आफ्नो समय अध्ययन र लेखन कार्यमा प्रयोग गर्नका लागि पवित्र सहर वृन्दावन जानुभयो। त्यहाँ उहाँ ऐतिहासिक श्रीश्रीराधादामोदर मन्दिरको सानो कोठामा बसेर गहन अध्ययन र लेखन कार्य गर्दै धेरै वर्ष बिताउनुभयो। १९५९ मा उहाँले संन्यास लिनुभयो। त्यस श्रीश्रीराधादामोदर मन्दिरमा बसेर श्रील प्रभुपादले ''इजी जर्नी टु अदर प्लानेट'' र वैदिक साहित्यको सार वा मख्खनरूपी अठार हजार श्लोक भएको धेरै खण्डको श्रीमद्भागवतको अनुवाद, तात्पर्य लेख्न प्रारम्भ गर्नुभयो। जुन उहाँको

जीवनको श्रेष्ठ कृति नै हो। श्रीमद्भागवतको तीन खण्ड प्रकाशन गरेपछि १९६५ मा आफ्ना गुरुको उद्देश्य पूर्ण गर्न अमेरिका आउनुभयो। त्यसपछि उहाँले भारतको दार्शनिक र धार्मिक विषयमा असीवटा जति आधिकारीक अनुवाद, तात्पर्य र विश्लेषक अध्ययनरूपी पुस्तक लेख्नुभयो। जब श्रील प्रभुपाद पानीजहाजबाट न्युयोर्क सहर आउनुभयो त्यस समय उहाँ व्यावहारिक रूपले अर्थ धन रहित हुनुहुन्थ्यो। तर एक वर्षसम्मको यस्तो दुःखपूर्ण अवस्था पछि १९६६ मा उहाँले "अन्तर्राष्ट्रिय कृष्णभावनामृत सङ्घ" को स्थापना गर्नुभयो। १! नोभेम्बर १९७७ मा दुःखमय अप्रकट हुनु अघि उहाँले सय भन्दा बढि आश्रम, पाठशाला, मन्दिर, प्रतिष्ठान र कृषि उद्यमस्थलको नेतृत्त्व लिएर त्यसलाई पथप्रदर्शन गर्दै संसारभर विकसित भएको हेर्नुभयो।

१९६८ ता श्रील प्रभुपादले पश्चिम भर्जिनियाको पहाडमा वैदिक समाजरूपी नयाँ वृन्दावन स्थापना गर्नुभयो। यस वैदिक समाजको सफलताबाट प्रेरित भएर उहाँका शिष्यहरूले अमेरिका र अन्य देशमा यस्ता समाजहरूको निर्माण गरे।

१९७५ मा श्रील प्रभुपादको कल्पना अनुसारको वृन्दावनमा अत्यन्त सुन्दर "कृष्णबलरामको मन्दिर" र अन्तर्राष्ट्रिय स्तरको अतिथिगृहको निर्माण प्रारम्भ भयो। १९७८ मा जुहु, बम्बईमा चार एकड जमिनमा मन्दिर, आधुनिक रङ्गमंच, अतिथिगृह र शाकाहारी भोजनालय मिश्रित सांस्कृतिकस्थलको निर्माण प्रारम्भ गर्नुभयो। पचास हजार भक्त निवास गर्ने मायापुर, पश्चिम वङ्गालमा महत्त्वाकाङ्क्षी परियोजना श्रील प्रभुपादको हुनसक्दछ र पाँच हजार वर्ष अघिको वैदिक जीवनको सानो नमुनाकोरूपमा श्रीधाम मायापुरमा सम्पूर्ण विश्वको अघि उपस्थित हुनेछ।

श्रील प्रभुपादले वैदिक पद्धितको प्रारम्भिक र उच्चस्तरको शिक्षा पश्चिम जगत्लाई प्रदान गर्नुभयो। १९७२ मा गुरुकुल स्थापना गरिएको हो तैपनि अहिले सयौं विद्यार्थी र धेरै शाखा संसारभरी खुलेका छन्।

श्रील प्रभुपादको सबैभन्दा सार्थक र महत्त्वपूर्ण योगदान भनेको निश्चय नै उहाँका पुस्तकहरू नै हुन्। वौद्धिक समाजले यी पुस्तकहरूलाई यिनको आधिकारीता, गहिराइ र स्पष्टताका लागि सम्मान गर्दछन्। त्यसैले, यी पुस्तकहरू धेरै महाविद्यालयहरूमा विषयगत पाठ्यपुस्तकको रूपमा

अध्ययन गराइन्छ। अर्को थप कुरा श्रील प्रभुपादका पुस्तकहरू विश्वका अन्य पच्चीस भाषामा अनुवाद गरिएको छन्। १९७२ मा स्थापना गरिएको "भक्ति वेदान्त बुक ट्रष्ट" को प्राम्भिक कार्य भनेको श्रील प्रभुपादका पुस्तकहरूको प्रकाशन गर्नु हो। त्यसैले, अहिले यो प्रकाशन संस्था भारतीय धर्म र दर्शन सम्बन्धी पुस्तक प्रकाशन गर्ने संसारको सबैभन्दा विशाल संस्था भएको छ। वर्तमानमा यस संस्थाको योजना भनेको सत्र खण्डमा रहेको बंगाली चैतन्य–चरितामृतको अनुवाद र तात्पर्य प्रकाशन गर्नु रहेको छ। श्रील प्रभुपादले केवल अठार महिनामा त्यो कार्य पूरा गर्नु भएको थियो। आफ्नो वृद्ध अवस्था भएपनि श्रील प्रभुपादले बाह्र वर्षमा छ महाद्वीपको चौध पटकसम्म प्रवचन भ्रमण गर्नु भएको थियो। यस्तो व्यस्त कार्यचम भएपनि श्रील प्रभुपादले आफ्नो लेखन कार्य जारी राख्नुभयो। उहाँका लेखन वैदिक दर्शन, धर्म र संस्कृतिको पुस्तकालय नै हो।

***

महारानी कुन्तीको प्रार्थना भारतको महान् दार्शनिक र आध्यात्मिक उच्च साहित्य रूपी श्रीमद्भागवतमा समाहित गरिएको छ र अमर बनाइएको छ। ती महान् र पवित्र धर्मात्मा भक्तिनी स्त्रीको हृदयबाट उद्भासित सामान्य र उज्ज्वल प्रार्थना हुन्। यसले विद्वान्हरूको हृदयमा गहिरो आध्यात्मिक भावनात्मक असर पार्दछ र दार्शनिक र धर्मशास्त्रीय विषय प्रगाध रूपले प्रवेश गरेर आनन्द प्रदान गर्दछ। उहाँले गर्नु भएको प्रार्थनाका शब्दहरू ऋषिहरू र दार्शनिकहरूले हजारौं वर्षदेखि भारतमा उच्चारण गर्ने, कीर्तन गर्ने र गाउने गर्नुहुन्छ।






ISBN 978-93-83095-68-1
90000 >
9 789383 095681